# नेपाल राष्ट्र बैंक

## पच्चीस वर्ष



२५

२०१३–२०३८

# नेपाल राष्ट्र बैंक

## पच्चीस वर्ष

(२०१३—२०३८)




नेपाल राष्ट्र बैंक

केन्द्रीय कार्यालय

काठमाडौं,

नेपाल।




श्री ५ महाराजाधिराज सरकारको सदिच्छा अनुरूप देशको
आर्थिक विकासमा हरसम्भव सघाउ पुऱ्याउन
नेपाल राष्ट्र बैंक प्रण गर्दछ ।



सम्माननीय प्रधानमंत्री श्री सूर्यबहादुर थापा



माननीय अर्थ राज्यमन्त्री डा. यादवप्रसाद पन्त

## दुई शब्द

नेपाल राष्ट्र बैंकको रजत-जयन्तीको उपलक्ष्यमा प्रस्तुत पुस्तक जनसमक्ष ल्याउन पाएकोमा बैंक गौरव अनुभव गर्दछ । यस पुस्तकमा देशको आर्थिक, मौद्रिक तथा बैंकिंग क्षेत्रमा विगत २५ वर्षभित्र भएको गतिविधि र देशको केन्द्रीय बैंकको रूपमा यस क्षेत्रमा नेपाल राष्ट्र बैंकको संलग्नताबारे संक्षेपमा चर्चा गरिएको छ ।

श्री ५ महाराजाधिराज सरकारको सबल र गतिशील नेतृत्वमा आज देश तीव्रगतिले प्रगतिको बाटोतिर अग्रसर हुँदैछ । विकासको यस क्रममा आगामी दिनहरू हाम्रा लागि अरू बढी चुनौतिपूर्ण हुँदैजाने छन् र सम्भावित चुनौतिहरूको सामना गर्न हाम्रा प्रयासहरू राष्ट्र निर्माणको प्रक्रियातर्फ नै बढी केन्द्रित हुनुपर्ने छ । चालू छैठौं योजनाले निर्धारित गरेका लक्ष्यहरूको प्राप्तिका लागि नेपाल राष्ट्र बैंक बढी प्रयत्नशील हुँदैजाने र मौसूफ सरकारको सदिच्छालाई साकार पार्न आफ्नो तर्फबाट कुनै पनि कसर बाँकी नराख्ने कुरा विश्वासका साथ यहाँ म व्यक्त गर्न चाहन्छु ।

यस पुस्तकको लेखन तथा प्रकाशन कार्यमा संलग्न रही सहयोग गर्नुहुने डेपुटी गभर्नर श्री ईश्वरीराज पाण्डे तथा अधिकृतहरू सर्वश्री डा. नवराज चालिसे, मुकुन्दप्रसाद घिमिरे, डा. हरिहरदेव पन्त, भरतकृष्ण शर्मा, डम्बरप्रसाद ढुंगेल तथा चिन्तनराज पाण्डेलाई विशेषरूपले धन्यवाद दिन चाहन्छु ।

आवश्यक सामग्रीहरू जुटाई प्रकाशन कार्यमा सहयोग गर्ने अन्य सहयोगीहरू पनि धन्यवादका पात्र छन् ।

नेपालको बैंकिंग विकासमा अभिरुचि राख्ने सबैका लागि यो पुस्तक उपयोगी हुनेछ भन्ने कुरामा म विश्वस्त छु ।

कल्याणविक्रम अधिकारी

वैशाख १४, २०३८

( कल्याणविक्रम अधिकारी )

गभर्नर






गभर्नर श्री कल्याणविक्रम अधिकारी

# नेपाल राष्ट्र बैंक संचालक समितिका सदस्यहरु



श्री गोरखबहादुर
न्हुच्छेप्रधान



श्री भुवनमान सिंह



श्री सूर्यप्रसाद श्रेष्ठ



श्री कल्याणविक्रम अधिकारी
अध्यक्ष



श्री ईश्वरीराज पाण्डे



श्री सुधीर शमशेर थापा



डा. पार्थिवेश्वरप्रसाद तिमिल्सिना ▶

# नेपाल राष्ट्र बैंकका भूतपूर्व गभर्नरहरु



श्री हिमालय शम्शेर ज. ब. रा.
(२०१३—२०१८)



डा. [illegible]
(२०२[illegible]—२०३०)



स्व. श्री लक्ष्मीनाथ गौतम
(२०१८—२०२२)



श्री कुलशेखर शर्मा
(२०३०—२०३५)



डा. [illegible] पन्त
(२०२४—२०२[illegible])



श्री प्रद्युम्नलाल राजभण्डारी
(२०२२—२०२३)



डा. भेषबहादुर थापा
(२०२३—२०२४)

# नेपाल राष्ट्र बैंकका वर्तमान डेपुटी गभर्नरहरु



श्री कुबेर शमशेर थापा



श्री ईश्वरीराज पाण्डे

# नेपाल राष्ट्र बैंकका भूतपूर्व डेपुटी गभर्नरहरु



श्री धीरविक्रम शाह
(२०२६–२०३१)



श्री कुमारराज श्रेष्ठ
(२०२६–२०३१)



श्री गणेशबहादुर थापा
(२०३१–२०३६)



नेपाल राष्ट्र बैंक, काठमाडौं बैंकिङ कार्यालय भवन

# विषय–सूची

# १ नेपाल राष्ट्र बैंकको पच्चीस वर्ष

नेपालको अर्थव्यवस्थाले यौटा महत्वपूर्ण मोड लिनलागेको अवस्थामा आजको पच्चीस वर्षअघि अर्थात् २०१३ साल वैशाख १४ गते स्व. श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवको बाहुलीबाट नेपालको केन्द्रीय बैंकको रूपमा नेपाल राष्ट्र बैंकको उद्घाटन भएको थियो। उद्घाटनको अवसरमा मौसूफ सरकारबाट "यस बैंकको स्थापनाबाट हाम्रो मुद्रा सुव्यवस्थित हुनगई मुलुकमा बैंक प्रथा र उद्योगधन्धाको विकासको साथसाथै हाम्रो राष्ट्रको जीवनमा नयाँ सुधारको संचार हुनेछ भन्ने हाम्रो विश्वास छ" हुकुम भएको थियो।

देशको पिछडिएको अर्थव्यवस्थालाई सम्मुन्नतिको बाटोमा लम्काउने उद्देश्य राखी पहिलो पंचवर्षीय योजनाको थालनी पनि नेपाल राष्ट्र बैंकको स्थापना भएकै वर्ष (आर्थिक वर्ष २०१३।१४) देखि भएको थियो। त्यसबेला विद्यमान मौद्रिक अस्थिरताको स्थितिलाई हटाई आर्थिक विकासका लक्ष्यहरू हासिल गर्न सघाउ पुऱ्याउने मौद्रिक वातावरणको सिर्जना गर्ने अभिभारा राष्ट्र बैंक-माथि आयो। श्री ५ महेन्द्रको सदिच्छा अनुरूप नेपाल राष्ट्र बैंक तथा श्री ५ को सरकारबाट त्यसबेला उठाइएका कदमहरूले अस्थिर विनिमय स्थिति, द्वय मुद्रा प्रणाली जस्ता जटिल समस्या-हरूको समाधान हुनगई आफ्नो विकासको आवश्यकता अनुसार मौद्रिक नीतिको अनुसरण गरी देशको आर्थिक विकासमा सहभागी बन्नसक्ने आत्मविश्वास नेपाल राष्ट्र बैंकले प्राप्त गरेको छ र यो नै नेपाल राष्ट्र बैंकको लागि ठूलो उपलब्धि हो।

### नेपाल राष्ट्र बैंक स्थापनाहुनुअघिको आर्थिक अवस्था

नेपाल राष्ट्र बैंक स्थापना हुनुअघिको नेपालको आर्थिक स्थिति परम्परागत तथा पिछडिएको अवस्थाको थियो। यातायात र संचारको साधन देशमा विकसित हुननसकेको हुनाले राष्ट्रिय स्तरको एकीकृत अर्थव्यवस्था थिएन। अर्थव्यवस्थाको मेरुदण्डको रूपमा रहेको कृषि व्यवसाय पनि पिछडिएको तथा परम्परागत रूपमा संचालित थियो। कृषि उत्पादन पूर्णतया मौसममा नै निर्भर थियो। देशको अण्डै सबैजसो जनबल जीवन निर्वाहको लागि कृषिमै निर्भर रहेको थियो।

उद्योग व्यापारमा पनि देशको क्रियाकलाप अति नै सीमित थियो। बाह्य सम्पर्कबाट नेपाल लामो अवधिसम्म अलग रहेको हुंदा देशको व्यापारले विविधता हासिल गर्नसकेको थिएन। वस्तुगत रूपमा देशको निर्यात ज्यादै सीमित थियो भने खाद्यान्न तथा वनजन्य वस्तुहरू बाहेक अन्य सबैजसो दैनिक आवश्यकताहरूको लागि देश आयातमा नै निर्भर रहेको थियो। देशको अधिकांश व्यापार भारतसंग मात्र थियो। उद्योगतर्फ द्वितीय विश्वयुद्धताका स्थापना भएका एक-दुई जूट मिल, सलाई फ्याक्ट्री, दुई-चार तेल-चामल मिल सिवाय अरू उद्योगहरू थिएनन्। यी उद्योगहरू पनि खासगरी तराईका प्रमुख स्थानहरू विराटनगर र वीरगंजमा केन्द्रित थिए।

देशको वित्तीय क्रियाकलापहरूबारे सर्वसाधारण अनभिज्ञ थिए भने देशको मौद्रिक क्षेत्र एकदम जटिल समस्याहरूमा जेलिएको थियो। देशमा नेपाली रूपैयाँभन्दा पनि बढी मात्रामा भारतीय रूपैयाँ चलनचल्तीमा थियो। विदेशी विनिमय कारोबारमा कुनै नियन्त्रण थिएन। भारतीय मुद्रा देशभरी तत्काल ग्राह्य थियो। विधि ग्राह्य मुद्रा नेपाली मुद्रा भए तापनि यो केवल काठमाडौं उपत्यका र निकटवर्ती पहाडी क्षेत्रमा मात्र प्रचलित थियो। नेपाली रूपैयाँ र भारतीय रूपैयाँको विनिमय दर पनि बजारको माग र आपूर्ति अनुसार परिवर्तन भैरहन्थ्यो। काठमाडौंको बजारमा एक-आध घण्टाको अन्तरमा पनि भारतीय रूपैयाँको विनिमय दरमा परिवर्तन भैरहने गर्दथ्यो।

नेपालको समुद्रपारको वैदेशिक मुद्राको आम्दानी नेपाल राष्ट्र बैंकमा जम्मा हुनाको सट्टो भारतको विदेशी विनिमय कोषमा जम्मा हुन्थ्यो। नेपाललाई विदेशी विनिमयको आवश्यकतापर्दा भारतले उपलब्ध गराउँदथ्यो। यस विधिले साधारण व्यवहारसम्म बने पनि विदेशी विनिमय र निर्यात व्यापार आफ्नो नियन्त्रणमा रहेको थिएन।

देशमा एउटा मात्र वाणिज्य बैंक १९९४ सालमा खुलेको नेपाल बैंक लिमिटेड थियो। यसका शाखा उपशाखाहरू जम्मा १३ ठाउँमा थिए। पहाडी क्षेत्रमा बनेपा र पोखरामा मात्र बैंकका शाखाहरू थिए। बैंकका अन्य शाखाहरू तराई क्षेत्रमा मात्र सीमित थिए। वाणिज्य बैंकको सेवा पर्याप्त नभएको हुनाले शहरहरूमा परम्परागत रूपले वित्तीय कारोबार गर्ने पसलहरू पनि थिए। ग्रामीण क्षेत्रको वित्तीय कारोबारमा साहूकारहरूकै एकाधिकार थियो।

२०१३ सालको पूर्वान्हसम्म देशको आर्थिक गतिविधि अत्यन्त जटिल, अवरुद्ध र विषम स्थितिमा रहेको थियो। देशले नयां दिशा, नयां मार्ग, नयां मान्यता नयां स्थापनाहरूतर्फ उन्मुख हुनु अति आवश्यक थियो। २०१३ सालपछि देशमा विकासका पूर्वाधारहरू खडागर्न गरिएका विभिन्न प्रयासहरू यिनै आवश्यकता पूर्ति गर्नेतर्फ लक्षित थिए र राष्ट्र बैंकको स्थापना यसै क्रमको एउटा महत्वपूर्ण थालनी थियो।

**नेपाल राष्ट्र बैंकको उद्देश्य**

नेपालको आफ्नै किसिमको विकासको परिप्रेक्ष र ऐतिहासिक पृष्टभूमिमा नेपाल राष्ट्र बैंकको स्थापना भएको थियो। साह्रै अल्पविकसित संस्थान्तरित मुद्रा बजार, मौद्रिकीकरण नभएको अर्थव्यवस्थाको ठूलो भाग, अत्यन्त सीमित बैंकिंग क्रियाकलाप र द्वय मुद्रा प्रणालीले गर्दा देशको मौद्रिक तथा वित्तीय गतिविधिहरू जटिल थिए। यिनै वास्तविकताहरूलाई ध्यानमा राखी नेपाल राष्ट्र बैंकका उद्देश्यहरू निर्धारण भएका थिए।

नेपाल राष्ट्र बैंक ऐन २०१२ को प्रस्तावनामा नेपाल राष्ट्र बैंकका उद्देश्यहरू यसप्रकार उल्लेख गरिएको छ:

"सर्वसाधारण जनताको सुविधा र आर्थिक हित कायम राख्न नेपाली नोट निष्कासनको सुप्रबन्ध गर्नु, अधिराज्यभर नेपाली मुद्रा चलनचल्तीमा ल्याउन सुव्यवस्था मिलाउनु तथा नेपाली मुद्रा विनिमय दरमा स्थिरता कायम राख्नु परेकोले,

विकासको निमित्त पुंजीलाई गतिशील बनाई राज्यको उद्योग धन्धालाई समेत प्रोत्साहन दिनु परेकोले र,

नेपालमा बैंक प्रथाको विकास गराउनु परेकोले समेत एउटा राष्ट्र बैंकको नितान्त आवश्यक परेको हुंदा श्री ५ महाराजाधिराजबाट यो ऐन जारी गरिबक्सेको छ।"

नेपाल राष्ट्र बैंक ऐनको प्रस्तावनाबाट नेपाल राष्ट्र बैंकको मुख्य उद्देश्य "अधिराज्यका सर्वसाधारण जनताको सुविधा र आर्थिक हित कायम राख्नु" हो भन्ने स्पष्ट बोध हुन्छ। जनताको सुविधा र आर्थिक हित नै नेपाल राष्ट्र बैंकको मूल साध्य हो भने यसको परिपूर्तिका लागि गरिने कार्यहरू यसका साधन हुन्।

**केन्द्रीय बैंकको विशेषता**

नेपाल राष्ट्र बैंक केन्द्रीय बैंक भएकोले यसका क्रियाकलापहरू वाणिज्य बैंक र विकास बैंकहरूकोभन्दा भिन्दै हुन्छ। केन्द्रीय बैंकले सर्वसाधारणबाट निक्षेप लिने तथा लगानीकर्ताहरूलाई सोझै ऋणदिने कार्य गर्दैन। यसले बैंकहरूको पनि बैंकको रूपमा काम गर्दछ। साथै श्री ५ को सरकारको वित्तीय अभिकर्ताको रूपमा पनि यसले काम गर्दछ। देशमा विद्यमान बैंक तथा वित्तीय संस्थाहरूलाई आवश्यक साधन उपलब्ध गराई देशको उत्पादन बढाउने कार्यमा राष्ट्र बैंकले सघाउ पुर्‍याउँदछ। तर नेपाल राष्ट्र बैंकले आफ्ना विभिन्न आवश्यकता अनुरूप देशलाई चाहिने सेवा पुर्‍याउनुपर्ने स्थितिमा आफूलाई केन्द्रीय बैंकको परम्परागत कार्यमा मात्र सीमित नराखी विकासको माग अनुसार अन्य बैंकहरूले गर्ने किसिमका कार्यहरू पनि आफ्नो प्रारम्भिक कालमा गर्दैआएको थियो।

केन्द्रीय बैंक सर्वसाधारण जनतासंग सोझै सम्पर्कमा विरलै आउने संस्था भएको हुंदा केन्द्रीय बैंकको गतिविधिबारे सर्वसाधारणलाई कम बोध हुनेगर्दछ। विनिमय दर निर्धारण, कर्जा नियन्त्रण नीति, विनिमय नियन्त्रण जस्ता केन्द्रीय बैंकका कार्यहरू जनहितको लागि अति नै गोप्य राख्नु पर्नेहुंदा यसका गतिविधिहरू प्रकाशमा आइरहने पनि गर्दैनन्। केन्द्रीय बैंकको अस्तित्वको बोध सर्वसाधारणलाई नोट निष्काशन गर्न यसले पाएको अधिकार अनुसार यसले निष्काशन गरेको नोटले गराइरहेको हुन्छ।

**नेपाल राष्ट्र बैंकको स्थापनाको पहिलो दशक (२०१३-२०२३)**

केन्द्रीय बैंकको मुख्य कार्य अर्थव्यवस्थामा रहेको मुद्राको परिमाणलाई देशको आर्थिक क्रियाकलापको आवश्यकता अनुसार घटघट गरी मौद्रिक स्थिरताको वातावरण ल्याई आर्थिक विकासमा सघाउ पुर्‍याउनु हो। मौद्रिक स्थिरता भन्नाले नेपाली मुद्राको आन्तरिक तथा बाह्य मूल्यमा स्थिरता कायम राख्नु हो। तर नेपाल राष्ट्र बैंकको स्थापनाकालमा नेपाल अधिराज्यमा नेपाली



मुलुकीखाना : काठमाडौं बैंकिंग कार्यालय शुरूमा यहींभित्र थियो



मुलुकीखाना : उत्तर मोहडा

रुपैयाँको प्रचलनभन्दा भारतीय रुपैयाँको प्रचलन बढी रहेको हुँदा देशको आर्थिक क्रियाकलापको माग अनुसार मुद्राको परिमाणलाई नियन्त्रण गर्नसक्ने स्थितिमा नेपाल राष्ट्र बैंक थिएन। २०१४ साल असार मसान्तमा मुद्रा प्रदाय जम्मा रु. ६.१६ करोड मात्र थियो। आफ्नो राष्ट्रिय मुद्राभन्दा भारतीय मुद्रा देशमा बढी चलनचलतीमा हुनु नेपालको लागि एउटा चुनौति थियो। तसर्थ नेपाल राष्ट्र बैंकले देशभर आफ्नै मुद्राको प्रचलन बढाउने कार्यमा त्यसबखत आफूलाई बढी सक्रिय राख्नुपरेको थियो।

## मौद्रिक स्थिरता र विनिमय दरमा नियन्त्रण

देशका विभिन्न क्षेत्रहरूमा नेपाली मुद्राको चलनचल्ती बढाउनको लागि नेपाल राष्ट्र बैंकले देशको पहाडी तथा तराई क्षेत्रहरूमा शाखाहरू विस्तार गर्दैलगी अधिराज्यभर आफ्नो शाखाहरूको संख्या २७ सम्म पुऱ्याएको थियो। शाखा विस्तारका साथै नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन २०१४, श्री ५ को सरकारको भारतीय रुपैयाँको खाताहरूलाई रुपैयाँमा परिणत गर्ने र देशको राजस्व पनि रुपैयाँमा नै उठाउने आदि व्यवस्थाहरूबाट देशमा रुपैयाँको चलनचल्ती बढाउनमा ठूलो सहयोग पुऱ्याएको थियो।

नेपाली रुपैयाँको चलनचल्ती बढाउनको लागि विभिन्न कदमहरू चालिए तापनि नेपाली रुपैयाँको विदेशी मुद्रासंगको विनिमय दरमा अस्थिरता कायम रहुन्जेल रुपैयाँमाथि सर्वसाधारणको आस्था बढाउने कार्यमा राम्रो सघाउ पुग्न नसक्ने देखिएको हुँदा विनिमय दरमा स्थिरता ल्याउनेतर्फ पनि राष्ट्र बैंकले शुरूमा बढी संलग्न हुनुपऱ्यो। रुपैयाँ तथा भारतीय रुपैयाँ बीचको विनिमय दर समयसमयमा घटबढ भइरहने हुँदा बचतलाई भारतीय रुपैयाँमा नै संचय गर्ने प्रवृत्ति रहेको थियो। विनिमय दरमा स्थिरता ल्याउने सन्दर्भमा समयसमयमा सरकारले केही मालसामान आयातको लागि निश्चित दरमा भारतीय रुपैयाँ बैंक मार्फत उपलब्ध गराउने प्रयास गरे तापनि यस्तो नीतिले सफलता हासिल गर्नसकेको थिएन। अन्य प्रयोजनहरूका लागि भारतीय मुद्राको आवश्यकता पूर्ति गर्न खुला बजारमा नै भर पर्नुपर्ने हुँदा यस कदमले खुला बजारको विनिमय दरमा केही हदसम्म अनुकूल असर पारे तापनि खुला बजारको दरलाई सरकारले तोकेको दरको हाराहारीमा स्थिर राख्नसक्ने सकेन।

नेपाली रुपैयाँ र भारतीय रुपैयाँको विनिमय दरमा स्थिरता ल्याउन आंशिक कदमहरूबाट संभव थिएन। यसको लागि सराफी व्यवस्था समाप्त गर्नाको साथै नेपाली रुपैयाँप्रति जनविश्वास बढाउन नेपाली रुपैयाँ र भारतीय रुपैयाँको निश्चित र व्यवहारिक विनिमय दर तोकी नेपाली मुद्रालाई मात्र कानूनी ग्राह्य बनाउनु अति आवश्यक थियो। यही वास्तविकतालाई ध्यानमा राखी २०१७ साल बैशाख १ गते १०० भारतीय रुपैयाँको विनिमय दर रु. १६०।- तोकियो। उक्त दरमा नेपाल राष्ट्र बैंकले आफ्ना शाखा, उपशाखा, प्रशाखा, डिपोहरू र नेपाल बैंक लिमिटेड मार्फत जे जति सटही गर्नआएमा पनि सटही गरिदिने व्यवस्था गऱ्यो। यस व्यवस्थाबाट नेपाली रुपैयाँ र भारतीय रुपैयाँको विनिमय दरलाई प्रभावकारी रूपमा नियन्त्रण गर्न सफलता मिल्यो।

नेपाली रुपैयाँ र भारतीय रुपैयाँको अनियन्त्रित विनिमय दरलाई नियन्त्रणमा ल्याएपछि नेपाली रुपैयाँलाई अधिराज्यभर कानूनी ग्राह्य गराउने क्रम शुरूभयो। २०१७ साल बैशाख १ गते देशका प्रमुख भागहरूमा नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन लागू भयो र क्रमशः यस ऐनलाई अधिराज्यका अन्य स्थानहरूमा पनि लागू गर्दै लगियो। यसैगरी विदेशी विनिमय नियन्त्रण गर्ने ऐन २०१६ लाई क्रमिक रूपले २०२३ सालसम्ममा अधिराज्यभर लागू गरिएबाट नेपाल अधिराज्यभर नेपाली रुपैयाँ मात्र पूर्णतया कानूनी ग्राह्य भयो। भारतीय रुपैयाँको प्रचलन पूर्णतया बन्द भयो। जनतालाई भारतीय रुपैयाँ सटही गर्ने सुविधाको निमित्त नेपाल राष्ट्र बैंकले तत्काल ७२ सटही काउण्टर २३ घुम्ती काउण्टरहरू समेत खोलेको थियो। यसरी एक दशकभित्रमा नै देशभर नेपाली मुद्रा चलनचल्तीमा ल्याउने र विनिमय दरमा नियन्त्रण गर्ने जस्ता महत्वपूर्ण जिम्मेवारीलाई नेपाल राष्ट्र बैंकले सफलतापूर्वक सम्पादन गऱ्यो। २०१४ साल असार मसान्तमा रु. ६.१६ करोड मुद्रा प्रदाय रहेकोमा २०२३ असार मसान्तमा मुद्रा प्रदाय रु. ५२.१५ करोड पुग्यो। बैंकिंग क्षेत्रको निजी क्षेत्रमाथिको दावी पनि सोही अवधिमा रु. २.१४ करोडबाट १५.६६ करोड पुग्यो।

## वित्तीय आधारशीलाको निर्माण

मौद्रिक तथा वित्तीय कारोबारको संगठित संस्थागत व्यवस्था नभएको हुनाले नेपाल राष्ट्र बैंकलाई मौद्रिक नीति परिचालन गर्न पूर्वाधारको रूपमा बैंक तथा वित्तीय संस्थाहरूको सुसंगठित व्यवस्थाको आवश्यकता थियो। तसर्थ बैंक तथा वित्तीय संस्थाहरूको क्रियाकलापलाई अघि बढाउन नेपाल राष्ट्र बैंकले आफ्नो साधनले भ्याएसम्मको वित्तीय सहायता प्रदान गरी बैंक तथा वित्तीय संस्थाहरूको क्रियाकलापमा सघाउ पुऱ्याउन शुरुगऱ्यो। सहकारी बैंकको स्थापनार्थ रु. ८ लाख श्री ५ को सरकारलाई प्रदान गरियो र पछि कृषि विकास बैंक, नेपाल औद्योगिक विकास कर्पोरेशन र राष्ट्रिय बीमा कम्पनी आदिको शेयर पूंजी खरीद गरी नेपाल राष्ट्र बैंकले यी संस्थाहरूको व्यवस्थापनमा सहभागी हुने र देशको आवश्यकता अनुरूप यिनीहरूको क्रियाकलापको विस्तार गर्न आवश्यक पर्ने साधन उपलब्ध गराउने प्रक्रियाको थालनी गऱ्यो। नेपाल राष्ट्र बैंक स्थापना भएको एक दशकभित्रै नेपाल अधिराज्यको कृषि, उद्योग र वाणिज्य व्यवसाय विकासको लागि विभिन्न बैंक


राष्ट्रिय आय
रु. अरबमा
प्रचलित मूल्यमा
२०३१/३२ को स्थिर मूल्यमा
२५
२०
१५
१०
५
०
२०२१/२२
२०२४/२५
२०२७/२८
२०३०/३१
२०३३/३४
२०३६/३७

तथा वित्तीय संस्थाहरू स्थापित भए र यी संस्थाहरूले कृषि, उद्योग तथा वाणिज्य व्यवसायको विकास र विस्तारमा प्रत्यक्ष सहयोग पुऱ्याउन थाले।

### मौद्रिक नीतिको अवलम्बन र साधनको परिचालन

नेपाल राष्ट्र बैंक स्थापना भएको दोस्रो दशक शुरुभएको वर्ष २०२३ साल जेठ २४ गते नेपाली रुपैयांको भारतीय मुद्रासंग ५७ प्रतिशतले भएको पुनर्मूल्यनले गर्दा भारतीय रुपैयांको मागमा अत्यधिक वृद्धि हुनगएको कारणबाट देशको खुद वैदेशिक सम्पत्तिमा रु. ८.२१ करोडले ह्रास भई २०२३ असारमा खुद वैदेशिक सम्पत्ति रु. ४४.९५ करोडबाट रु. ३६.७४ करोडमा झऱ्यो। बैंकिङ क्षेत्रको गैर-सरकारी संस्थामाथिको दावी र निजी क्षेत्रमाथिको दावीमा पनि वृद्धि हुंदैगएको थियो। वाणिज्य बैंकहरूको कर्जा क्रियाकलापहरूमा विस्तार हुंदैगएको र देशको शोधनान्तर स्थितिमा पहिलो पटक प्रतिकूल स्थिति देखापरेको हुंदा राष्ट्र बैंकले मुद्रा प्रदायमा नियन्त्रण राख्न तथा वैदेशिक सम्पत्तिमा ह्रास आउन नदिन प्रभावकारी रूपमा मौद्रिक नीतिको उपयोग गर्नुपर्ने स्थितिको सिर्जना भइसकेको थियो। उपर्युक्त उद्देश्य प्राप्तिका लागि नेपाल राष्ट्र बैंकले पहिलो मौद्रिक नीतिको प्रयोग २०२३ साल साउन ३१ गते जारी गरेको उधार नियन्त्रण नियमहरूबाट शुरुगऱ्यो। यी नियम अन्तर्गत वाणिज्य बैंकहरूले नेपाल राष्ट्र बैंकमा राख्नुपर्ने न्यूनतम नगद मौज्दात, मार्जिन दर, ब्याज दर, पुनरकर्जा दर र तरलताको निर्धारण आदि मौद्रिक नीतिका उपकरणहरूको प्रयोगद्वारा नेपाल राष्ट्र बैंकले वाणिज्य बैंकको कर्जादिने क्षमतालाई नियन्त्रित र नियमित गराउंदै केन्द्रीय बैंकिङतर्फ आफूलाई अग्रसर गरायो। यी मौद्रिक उपकरणहरूको प्रयोग तथा २०२४ साल मंसीर २४ गते भएको रुपैयांको अवमूल्यनले भुक्तानी स्थितिमा सन्तुलन ल्यायो। बैंकबाट आने कर्जामा पनि केही शिथिलता देखापऱ्यो।

देशको आर्थिक विकासमा सहभागी बन्ने क्रममा देशभर छरिएर रहेको बचतलाई संस्थान्तरण गर्न बैंकिङ क्रियाकलापहरूलाई ग्रामीण तथा दुर्गम पहाडी क्षेत्रहरूमा फैलाई आम जनतालाई बैंकिङ सुविधा उपलब्ध गराउनु अति आवश्यक थियो। देशको विकास कार्यमा अवरोधहरू आउन नदिन स्वस्थ मौद्रिक वातावरण कायम राख्नु पनि उत्तिकै जरुरी थियो।

### नेपाल राष्ट्र बैंक स्थापनाको दोश्रो दशक (२०२३-२०३३)

नेपाल राष्ट्र बैंकले २०२३ सालमा उधार नियन्त्रण नियमहरू अन्तर्गत देशमा मौद्रिक स्थायित्व कायम राख्न माथि उल्लिखित कदमहरू चालेपछिका केही वर्षसम्म भुक्तानी संतुलन तथा अन्य मौद्रिक क्षेत्रहरूमा खास व्यवधानहरू देखा परेनन्। यस अवधिमा राष्ट्र बैंकले बढी बचत परिचालन गर्ने तथा बैंकिङ क्षेत्रबाट जाने कर्जालाई बढी उत्पादक क्षेत्रहरूमा प्रवाहित गर्ने उद्देश्य राखी बैंकहरूको निक्षेप तथा कर्जाको ब्याज दर र कर्जाको मार्जिन दरहरू तोक्नेतर्फ आफ्नो मौद्रिक नीतिहरू केन्द्रित गरेको थियो।

२०२४ साल मंसीरमा भएको नेपाली रुपैयांको २४.८ प्रतिशतको अवमूल्यनले देशको कुल भुक्तानीलाई सन्तुलनमा ल्याए तापनि नेपालको भारतसंगको व्यापार तथा शोधनान्तर स्थितिमा खास सुधार ल्याउन सकेन। नेपालले अपनाएको बोनस व्यवस्थाले देशको व्यापारमा विविधता ल्याउनमा केही सफलता हासिल गरे तापनि देशको कुल निर्यातको परिमाण बढाउन यसले खास सहयोग पुऱ्याएन। यस व्यवस्थाले भारतमा भइरहेको निर्यात तेश्रो मुलुकहरूमा मोडिनगई देशको भारतीय मुद्राको संचितिमा चाप बढाउंदै लग्यो। नेपाली रुपैयांको विनिमय दरमा अस्थिरता आउन नदिन नेपाल राष्ट्र बैंकले भारतीय रिजर्भ बैंकसंग भा. रु. २८ करोडसम्म सापटी लिई भारतीय रुपैयांको मागको आपूर्ति गर्नुपऱ्यो।

### विश्वव्यापी मुद्रास्फीति

आर्थिक वर्ष २०३०।३१ तिरको विश्वव्यापी मुद्रास्फीतिले नेपाललाई पनि निकै असर पाऱ्यो। तेल संकटले चर्काएको मुद्रास्फीतिको ठूलो अंश आयातजन्य भए तापनि त्यसताका देशमा बढ्दै गएको मुद्रा प्रदाय, वैदेशिक सम्पत्तिमा भएको वृद्धि, विकासको गति कायम राख्न श्री ५ को सरकारले गर्नुपरेको न्यून वित्त परिचालन तथा बैंक कर्जामा भएको वृद्धिले पनि यसलाई केही हदसम्म चर्काएको थियो। मुद्रास्फीतिको समस्याको समाधान गर्ने प्रतिकारात्मक कदमहरू उठाउंदा विकासको गतिलाई प्रतिकूल असर पर्नबाट जोगाउनु अति आवश्यक थियो। यस स्थितिमा नेपाल राष्ट्र बैंकलाई बचतको अधिकतम परिचालनद्वारा कुल मागमा कमी गर्नु, बचतद्वारा संकलित साधन उत्पादक काममा लगाउनु र विदेशी विनिमय संचितिको उत्पादक उपयोग गर्ने जस्ता विकल्पहरू नै बढी व्यवहारिक देखिए। कर्जाको परिमाणमा बढी नियन्त्रण गर्दा आवश्यक कारोबारमा शिथिलता आई अभावको स्थिति पैदा हुनसक्ने, भारतसंग अनियन्त्रित व्यापार व्यवस्था भएकोले भारतसंगको व्यापार नियन्त्रणबाट अरू विकृतिहरू आउन सक्ने हुंदा बचत परिचालन गर्नु तथा कर्जालाई अनुत्पादक क्षेत्रबाट उत्पादनशील क्षेत्रमा प्रवाहित गर्नु बढी आवश्यक थियो। नेपाल राष्ट्र बैंकले २०२३ सालदेखि २०३१ सालसम्म ३ पटक बैंक तथा वित्तीय संस्थाहरूको निक्षेप र कर्जाको ब्याज दरहरूमा आवश्यकता अनुसार परिवर्तन गऱ्यो। तर २०३१ देखि शुरुभएको मुद्रास्फीतिको दरको तुलनामा तत्कालीन ब्याज दर सकारात्मक नभएकोले जनतालाई मौद्रिक बचत गर्न आकर्षक भएन। जनताको बचत अनुत्पादक लगानीतर्फ प्रवाहित हुनथाल्यो। ब्याजदरको कमीले गर्दा कर्जाको मागमा अत्यधिक वृद्धि हुंदैगयो।

नेपाल राष्ट्र बैंकले २०३२ साल बैशाख १६ गतेदेखि लागू हुनेगरी वाणिज्य बैंक तथा वित्तीय संस्थाहरूको ब्याज दरमा वृहत् परिवर्तन गर्यो। परिवर्तित ब्याज दर अनुसार वाणिज्य बैंकहरूको निक्षेपमा १६ प्रतिशतसम्म र कर्जामा १८ प्रतिशतसम्म ब्याज दर तोकियो। यही क्रमबाट नेपाल औद्योगिक विकास कर्पोरेशन, कृषि विकास बैंक, कर्मचारी सञ्चय कोषले दिने कर्जामा पनि ब्याज दर बढाइयो।

राष्ट्र बैंकको मौद्रिक नीतिको इतिहासमा यो एउटा साहसिलो कदम थियो। ब्याजदरमा भएको यस सुधारबाट केही वर्षभित्रै सन्तोषजनक रूपमा वाणिज्य बैंकहरूमा निक्षेप संकलन हुनपुग्यो। कर्जाको मागमा पनि ह्रास आयो। यसरी मौद्रिक नीतिको प्रयोग सफलताकासाथ गर्न नेपाल राष्ट्र बैंक सफल भयो।

नेपाल राष्ट्र बैंकले आफ्नो बीस वर्षको अवधिमा केवल नियन्त्रणात्मक क्रियाकलापहरूबाट मात्र बैंक तथा वित्तीय संस्थाहरूलाई नियन्त्रित गरेको नभई बैंक तथा वित्तीय संस्थाको स्थापनामा सहयोग र ती संस्थाहरूको प्रवर्द्धन र सुरक्षण समेत गरी मार्गदर्शन गरायो। वाणिज्य बैंकहरूद्वारा प्रवाहित प्राथमिकता प्राप्त क्षेत्रहरूको कर्जाको सुरक्षार्थ कर्जा सुरक्षण निगम, बैंकहरूलाई कृषि क्षेत्रको विभिन्न आयोजनाहरूमा लगानी गर्न आवश्यक जानकारीको लागि कृषि आयोजना सेवा केन्द्र र औद्योगिक पूँजी परिचालनको लागि सिक्योरिटी खरीद बिक्री केन्द्र जस्ता संस्थाहरूको स्थापनामा नेपाल राष्ट्र बैंकको प्रत्यक्ष सहभागिता रह्यो। यसरी बीस वर्षको अवधिमा बैंक तथा वित्तीय संस्थाहरूको नियन्त्रण, प्रवर्द्धन र मार्गदर्शनको रूपमा गरिएका क्रियाकलापहरूलाई विकासोन्मुखी बनाउनमा नेपाल राष्ट्र बैंकले ठूलो भूमिका खेलेको छ।

**नेपाल राष्ट्र बैंकको तेस्रो दशक (२०३३-     )**

बीस वर्षसम्मको नेपाल राष्ट्र बैंकको प्रयास र प्रयत्नहरूले गर्दा नेपालको मौद्रिक तथा बैंकिङ व्यवस्थामा धेरै सुधारहरू भए। नेपाल राष्ट्र बैंक आफैलाई पनि मौद्रिक र कर्जा नीतिको प्रयोग र परिचालनको सफल अनुभूतिले गर्दा विकासको निमित्त अझ दृढताकासाथ अगाडि बढ्ने हौसला मिल्यो।

स्थापनाको पहिलो दशकमा नेपाली मुद्राको अधिराज्यभरी चलनचल्ती भएपछि प्रभावकारी रूपमा विदेशी विनिमयको नियन्त्रण हुनसकेको थियो। भारतीय मुद्राको प्रतिस्थापन नेपाली मुद्राले गरेपछि मुलुकमा केही वर्षसम्म शोधनान्तर स्थिति पुर्णतया नेपालकै अनुकूल थियो। तर आयातमा भारतसँगको अधिकांश निर्भरता र विकास खर्चको वृद्धिले भारतसँगको व्यापारमा घाटा बढ्दैगयो र भारतीय मुद्राको संचितिमा ह्रासको प्रवृत्ति देखापर्न थाल्यो। २०२७ सालमा भारतीय रुपैयाँको संचिति रु. २६.५५ करोड रहेकोमा २०३१ सालमा रु. १८.३४ मा झर्यो। यसरी भारतीय मुद्रामा चाप बढ्दै गएको स्थितिलाई विचार गरी देशको विनिमय क्षेत्रमा अस्थिरता आउन नदिन २०२८ सालमा नै श्री ५ को सरकारले भारतसरकारसँग भा. रु. १० करोडको स्ट्यान्डबाई सम्झौता गर्यो र सोही सम्झौता अन्तरगत राष्ट्र बैंकले तीन वर्ष जति अल्पकालीन ऋण लिएर काम चलायो। यसरी अल्पकालीन ऋण लिई आवश्यकता पूर्ति गर्नुभन्दा आवश्यक परेका बखत आफूसँग रहेको परिवर्त्य विदेशी मुद्रा भारतीय रुपैयाँमा परिणत गरी काम चलाउनु सरल र सुगम र आर्थिक दृष्टिकोणले उपयुक्त भएकोले नेपाल राष्ट्र बैंकले तदनुसार गर्नेथाल्यो।

भारतसँगको मात्र एकांगी व्यापार निर्भरतालाई हटाउन र निर्यात व्यापारलाई प्रोत्साहन दिनको निमित्त २०१८ सालदेखि लागू भएको निर्यात बोनस व्यवस्थाले परिवर्त्य विदेशी मुद्रामा हुने निर्यातमा उल्लेखनीय वृद्धि गर्नाको साथै केही मात्रामा आयात व्यापारमा विविधीकरण गर्यो। तर यस व्यवस्थाबाट अपेक्षा गरिए बमोजिमको उपलब्धि हासिल हुनसकेन र यसैसम्बन्धमा विकृतिहरू देखापर्न थाले। तुलनात्मक रूपमा भारत निकासी गर्दा लाभ हुनसक्ने वस्तुहरू पनि बोनसको प्रलोभनले गर्दा खुल्ला सिमानाबाट तेस्रो देशमा निकासी हुने प्रवृत्ति बढेर गयो। बोनसको उच्च विनिमयको सुविधाले गर्दा अधिबिजकीकरणबाट विदेशी विनिमयको चुहावट हुनथाल्यो। निर्यात उद्योगको दीर्घकालीन विकास हुनसकेन। आयातमा पनि विकृतिहरू देखिए। यी विकृतिहरूको निराकरण गरी साधनको सक्षम उपयोग, निर्यात प्रोत्साहनको निश्चितता र तेस्रो देशबाट हुने आयातलाई उदार बनाई भारतबाट हुने आयात घटाउने उद्देश्यले नेपाल राष्ट्र बैंकको सल्लाह लिई श्री ५ को सरकारले २०३४ साल चैत १८ गतेदेखि लागू हुने गरी दुइ विनिमय दर व्यवस्थाको घोषणा गर्यो। यस व्यवस्था अनुसार परिवर्त्य विदेशी विनिमयको मूल र दोश्रो विनिमय दर कायम भयो। मूल दर अन्तरगत १ अमेरिकी डलरको रु. १२।- र दोश्रो दर अन्तरगत एक अमेरिकी डलरको रु. १६।- को समदर तोकियो। केही तोकिएका वस्तुहरू बाहेक अन्य सबै किसिमको आयातमा दोश्रो दर लागू हुनेभयो। निर्यातको प्रोत्साहनको निमित्त निर्यात आयलाई दोश्रो विनिमय दरबाट साट्ही दिने व्यवस्था भयो।

व्यापार र विनिमयमा भएका यी सुधारहरूबाट तेस्रो देशको आयात उदार हुनगएकोले मुलुकको अवस्थामा केही मात्रामा भारतसँगको आयात घटाउनमा यसबाट सहायता पुग्न गए तापनि अपेक्षा गरे अनुरूप भने हुनसकेन। नेपालको व्यापारको ढाँचालाई दृष्टिगत गर्दा सर्वसाधारणबाट माग हुने सबै वस्तु अथवा त्यस्ता वस्तु तेस्रो मुलुकहरूबाट आपूर्ति हुनसक्ने स्थिति थिएन। आयातलाई उदार बनाइए तापनि तुलनात्मक रूपमा भारतबाट हुने आयात सस्तोपर्ने भएकोले उपभोग्य वस्तुहरूको आयात पर्याप्त मात्रामा

सोझो देशबाट हुनसकेन। यस स्थितिलाई ध्यानमा राखी श्री ५ को सरकारले २०३६ फागुन ६ गतेदेखि दोधो विनिमय दर डलर १ को रु. १२।- बाट रु. १४।- कायम गर्‍यो।

उपर्युक्त सुधारहरूले नेपालको वैदेशिक विनिमय र बाह्य भुक्तानीको स्थितिमा केही अनुकूल प्रभावहरू दर्शाएको छ तापनि आउँदा वर्षहरूका लागि विदेशी विनिमय र व्यापार नीतिमा अझ सहीरूपमा कदमहरू चाल्नुपर्ने देखिन्छ। श्री ५ को सरकारको वित्तीय नीति र नेपाल राष्ट्र बैंकको मौद्रिक तथा विनिमय दर नीतिहरूको समन्वयात्मक कार्यान्वयनबाट देशको आर्थिक विकासको आवश्यकता अनुसार स्वस्थ आर्थिक वातावरणको सिर्जना हुँदै जाने कुरामा नेपाल राष्ट्र बैंक दृढ विश्वास राख्दछ।

**नीति समन्वय**

विकासको वृद्धि दर र मौद्रिक स्थायित्व बीच सामंजस्य कायम गर्ने कुरा निकै महत्वको हो तापनि नेपाल राष्ट्र बैंक यी दुवै कुराको बीचमा तादात्म्य कायम गराउन सदा प्रयत्नशील रहेको छ। श्री ५ को सरकारको विकास र वित्तीय नीतिहरूको निर्माणमा नेपाल राष्ट्र बैंकको सक्रिय सहभागिता हुने परिपाटीले गर्दा नेपालको विकास वित्त र मौद्रिक नीतिहरूमा पारस्परिक सहयोग, परिपूरकता र सामंजस्य रहेको पाइन्छ। **श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव सरकारबाट** अध्यक्षता ग्रहण गरिबक्सेको देशको विकास योजनाको नीति निर्माण गर्ने राष्ट्रिय विकास परिषद्मा नेपाल राष्ट्र बैंकका गभर्नर पदेन सदस्य रहने व्यवस्था छ। श्री ५ को सरकारको अन्य विभिन्न उच्चस्तरीय समितिहरूमा पनि नेपाल राष्ट्र बैंकको प्रतिनिधित्व रहिआएको छ। साथै श्री ५ को सरकारको आर्थिक सल्लाहकारको हैसियतले देशको आर्थिक मौद्रिक तथा वित्तीय गतिविधिका सम्बन्धमा नेपाल राष्ट्र बैंकले दिएका सुझावहरू श्री ५ को सरकारको आर्थिक नीति र कार्यक्रमहरूमा बराबर प्रतिबिम्बित हुनेगरेको छ। यिनै सब कारणहरूले गर्दा नेपाल राष्ट्र बैंक आफ्नो उद्देश्य प्राप्तिको लागि विश्वस्त र सक्षम हुँदै गइरहेको छ।

**नयाँ क्षितिज**

देशको आर्थिक विकासमा निरन्तर चिन्तनशील रहिबक्सने **श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको** नेतृत्वमा नेपालको विकासको क्षितिज निर्दिष्ट भएको छ। छैठौं योजनाकालमा विकासको दरलाई अझ बढी तीव्र गराई नेपाल साधनको अधिकतम परिचालनको साथै सुनियोजित मौद्रिक नीतिको अवलम्बन गर्नुपर्ने आवश्यकताप्रति नेपाल राष्ट्र बैंक सचेष्ट रहेको छ। २५ वर्षसम्म नेपालको अर्थव्यवस्थाको विकासमा सहभागी बनेर आर्जन गरेको ज्ञान, सीप, अनुभव परिमार्जित रूपबाट प्रयोग गर्ने आत्मविश्वास लिएर नेपाल राष्ट्र बैंक विकासको क्षितिज निहालिरहेको छ।

नेपाल बैंक लिमिटेडलाई दिइयो। यसपछि नेपाली रुपैयाँको भाउ बढ्दैगएको थियो तापनि द्वितीय विश्वयुद्धको कारणले गर्दा रुपैयाँको विनिमय दरमा पुन: अस्थिरता आउनथाल्यो। द्वितीय विश्वयुद्धको समयमा रुपैयाँको भारतीय मुद्रासंगको विनिमय दर कुनैबखत रु. ६५ को भा. रु. १०० थियो भने कुनैबखत रु. १६० को भा. रु. १०० पनि पुग्नगएको थियो। समयसमयमा श्री ५ को सरकारबाट निश्चित विनिमय दरमा केही आयात प्रयोजनहरूको लागि भारतीय मुद्रा उपलब्ध गराउने व्यवस्था गरिएको भए तापनि रुपैयाँको विनिमय दरमा स्थायित्व भने आउन सकेको थिएन।

## नेपाल राष्ट्र बैंकको स्थापना

२००७ सालको राजनैतिक परिवर्तनपछि नेपालको मौद्रिक क्षेत्रमा विद्यमान अस्थिरतालाई नियन्त्रणमा ल्याई स्वस्थ मौद्रिक वातावरणमा देशको आर्थिक विकासको लक्ष्य हासिल हुनसक्ने स्थितिको सिर्जना गर्न देशमा एउटा केन्द्रीय बैंक हुनु अत्यावश्यक अनुभव गरियो। तत्कालीन प्रिन्सिपल रायल एडभाइजर सरदार श्री गुञ्जमान सिंहको संयोजकत्वमा नेपाल राष्ट्र बैंक ऐन तर्जुमा गरियो र उक्त ऐनको मस्यौदा श्री ५ को सरकारमा पेश भई २०१२ कात्तिक १८ मा लालमोहर सदर भयो। नेपाल राष्ट्र बैंक ऐन, २०१२ अन्तर्गत २०१३ साल वैशाख १४ गते स्थापना भएको नेपाल राष्ट्र बैंकमाथि देशभर नेपाली मुद्रा प्रचलनमा ल्याउने, नेपाली रुपैयाँको विनिमय दरमा स्थिरता ल्याउने तथा देशको आर्थिक विकासको लागि गतिशील बैंकिंग व्यवस्थाको विकास गर्ने अभिभाराहरू आयो।

## नेपाल राष्ट्र बैंकको स्थापनाकालदेखि २०२३ सम्म

नेपालको मौद्रिक इतिहासमा नेपाल राष्ट्र बैंकको स्थापना एक महत्वपूर्ण घटना थियो। आर्थिक रूपले खण्डित देशका विभिन्न भागहरूलाई एकीकृत गरी मौद्रिकीकरण गर्दै लैजाने दृष्टिकोण राखी राष्ट्र बैंकले काठमाडौंको अतिरिक्त देशका २७ मुख्य मुख्य केन्द्रहरूमा आफ्ना कार्यलयहरू खोली बैंकिंग सेवा प्रदान गर्नथाल्यो। देशमा आफ्नो मुद्राभन्दा भारतीय मुद्राको चलनचल्ती बढी भएको हुंदा स्थापनाका शुरुवर्षहरूमा नेपाल राष्ट्र बैंकले नेपाल अधिराज्यभर नेपाली रुपैयाँलाई चलनचल्तीमा ल्याउने प्रयासहरूमा आफूलाई संलग्न गराउनुपरेको थियो। भारतसंगको नेपालको व्यापारमा कुनै नियन्त्रण नरहेको र नेपालले निश्चित विनिमय दर नअपनाएको हुंदा भुक्तानी सन्तुलनतर्फ नेपाल राष्ट्र बैंकले उतिसारो ध्यान दिनु परेको थिएन। देशको व्यापारमा अधिकतम प्रयोगमा रहेको भारतीय मुद्राको विनिमय दर बजारको माग तथा आपूर्तिबाट निर्धारित हुनेगरेको हुंदा भारतीय मुद्रासंगको नेपाली रुपैयाँको विनिमय दरमा समय समयमा भइरहने अस्थिरताको कारणबाट मूल्यस्तरमा पर्ने प्रभाव र त्यसबाट सर्वसाधारणलाई पर्नसक्ने भारसंग मात्र सरकारलाई चिन्तित रहनुपर्ने स्थिति थियो। अर्थव्यवस्थामा रहेको तरलतामा भारतीय मुद्राको अंश बढी रहेको र यसको परिमाण पनि देशको आयात निर्यात तथा अदृश्य कारोबारले निर्धारण गर्नेहुंदा अर्थव्यवस्थामा प्रचलनमा रहेको मुद्राको परिमाणलाई मौद्रिक नीतिको प्रयोगबाट आफ्नो आवश्यकता अनुसार नियन्त्रणमा राख्नसक्ने स्थिति पनि थिएन। तसर्थ खासगरी मूल्य नियन्त्रणको उद्देश्य प्राप्तिका लागि आयातको केही प्रयोजनको निमित्त निश्चित विनिमय दरमा भारतीय मुद्रा उपलब्ध गराउने कदमहरू श्री ५ को सरकारले लिइआएको थियो।

नेपाल राष्ट्र बैंकको स्थापनापछि नेपाल अधिराज्यभर नेपाली मुद्रा प्रचलनमा ल्याउने सम्बन्धमा धेरै कानूनी तथा संस्थागत कदमहरू चालिए। २०१६ साल फागुन ७ गतेदेखि नेपाल राष्ट्र बैंकले आफूले छापेको कागजी मुद्रा निष्काशन गर्न शुरुगरेपछि देशमा नेपाली मुद्राको प्रचलन बढाउन विशेष बल मिल्यो। त्यसैगरी नेपाली रुपैयाँको विनिमय दरमा स्थायित्व ल्याउनेतर्फ २०१७ सालमा रु. १६०।- को भा. रु. १००।- को विनिमय दर निश्चित हुनु एउटा महत्वपूर्ण कदम थियो। २०२३ साल जेठ २४ गते नेपाली रुपैयाँको भारतीय रुपैयासंग पुनरमूल्यन भएपछि सोही वर्ष कात्तिक १ गतेदेखि विदेशी विनिमय नियन्त्रण ऐन, २०१९ नेपाल अधिराज्यभर लागू गरिएबाट नेपाल अधिराज्यभर नेपाली रुपैयाँ प्रचलनमा ल्याउने अभियान पूर्णभयो। फलस्वरूप २०१४ साल असारमा मुद्रा प्रदाय रु. ६.१६ करोड (मुद्रा रु. ६.७८ करोड र चल्ती निक्षेप रु. २.४१ करोड) बाट दुईगुणा वृद्धि भै २०१७ साल असारमा रु. १७.४१ करोड (मुद्रा रु. १०.६४ करोड र चल्ती निक्षेप रु. ६.४७ करोड) पुग्यो।

राष्ट्र बैंकको शुरुका वर्षहरूमा मुद्रा प्रदायको विस्तारमा वैदेशिक सम्पत्तिको वृद्धि नै एक प्रमुख कारक रहिआएको र मुद्रा प्रदायको विस्तारमा आन्तरिक कर्जाको योगदान कम रहेको हुंदा राष्ट्र बैंकले मुद्रा विस्तारको नियन्त्रणतर्फ विशेष ध्यान दिनुपरेको थिएन। मुद्रा प्रदायको विस्तारमा बाह्य कारकको प्रमुख भूमिका रहेको हुंदा यसको नियन्त्रण गर्नसक्ने राष्ट्र बैंकको क्षमता पनि सीमित थियो। २०२३ साल असार मसान्तसम्ममा खूद वैदेशिक सम्पत्ति रु. ३१.५ करोडले बढेकोमा मुद्रा प्रदायमा विस्तारक प्रभाव पार्ने अर्को प्रमुख कारक निजी क्षेत्र माथिको दावी २०२३ असार मसान्तसम्ममा जम्मा रु. १३.५ करोडले मात्र बढेको थियो। २०२३ असार मसान्तमा मुद्रा प्रदाय जम्मा रु. ५२.१५ करोड मात्र थियो।

## २०२३ सालपछि

देशमा बढ्दै गएको विकास कार्यक्रमहरू, बैंकहरूबाट जाने कर्जामा भएको वृद्धि, सरकारी ऋण पत्रहरूको निष्काशन, सरकारी न्यून

## मुद्रा प्रदाय

| (रु० करोडमा) | | | | |
|---|---|---|---|---|
| वर्ष | | मुद्रा | चल्ती निक्षेप | मुद्रा प्रदाय |
| २०१४ | असार | ६.७७ | २.४२ | ९.१९ |
| २०१५ | असार | ७.६९ | २.४४ | १०.१३ |
| २०१६ | असार | ८.१२ | ३.४४ | ११.५६ |
| २०१७ | असार | १०.९५ | ६.४६ | १७.४१ |
| २०१८ | असार | १४.२० | ६.३४ | २०.५४ |
| २०१९ | असार | १५.६२ | ८.८० | २४.४२ |
| २०२० | असार | १६.१७ | १०.३१ | २६.४८ |
| २०२१ | असार | २३.५३ | १३.०४ | ३६.५७ |
| २०२२ | असार | २९.६३ | १५.०० | ४४.६३ |
| २०२३ | असार | ३४.५८ | १७.५७ | ५२.१५ |
| २०२४ | असार | ३६.८६ | १९.९७ | ५६.८३ |
| २०२५ | असार | ४१.९१ | १९.९७ | ६१.८८ |
| २०२६ | असार | ४७.०२ | २३.०२ | ७०.०४ |
| २०२७ | असार | ५३.१४ | २३.१९ | ७६.३३ |
| २०२८ | असार | ५७.९१ | २१.७३ | ७९.३४ |
| २०२९ | असार | ६०.१२ | २५.६५ | ८५.७७ |
| २०३० | असार | ६९.४७ | ३२.११ | १०१.५८ |
| २०३१ | असार | ८७.८६ | ४०.२५ | १२८.११ |
| २०३२ | असार | ९१.६५ | ४२.१२ | १३३.७७ |
| २०३३ | असार | ९६.३५ | ४८.९० | १४५.२५ |
| २०३४ | असार | ११९.३२ | ६५.९७ | १८५.२९ |
| २०३५ | असार | १३५.१९ | ७०.८७ | २०६.०६ |
| २०३६ | असार | १६१.५२ | ८८.९७ | २५०.४९ |
| २०३७ | असार | १७९.९३ | १०३.११ | २८३.०४ |

स्रोत : नेपाल राष्ट्र बैंक ।

वित्त परिचालन तथा बैंकिङ्ग क्रियाकलापहरू विस्तार हुँदैगएको परिप्रेक्ष्यमा नेपाल राष्ट्र बैंक आफ्नो स्थापनाको दोश्रो दशकदेखि मात्र मौद्रिक क्षेत्रको नियन्त्रणतर्फ प्रयत्नशील हुनथाल्यो।

२०२३ साल जेठ २४ गते नेपाली मुद्राको भारतीय रूपैयाँसंग पुनर्मूल्यन भएको फलस्वरूप मूल्यमा भएको गिरावटले गर्दा मालसामानको मोल सस्तो भएकोले भारतीय मुद्राको साथै कर्जाको मागमा पनि वृद्धि भयो। साथै बैंकहरूको कुल निक्षेपमा पनि ह्रास आयो। बैंक कर्जा वृद्धिको कारणबाट मुद्रा प्रदायमा वृद्धि भै भारतीय रुपैयाँको सञ्चितिमा ह्रास आउने देखिएबाट नेपाल राष्ट्र बैंकले २०२३ सालमा बैंकको इतिहासमा पहिलो पटक कर्जा नियन्त्रणका उपायहरू अपनायो।

नेपाल राष्ट्र बैंकले मौद्रिक नीति सम्बन्धमा गरेको पहिलो प्रयास नेपाल राष्ट्र बैंक ऐन, २०१२ को दफा २२ अन्तर्गत श्री ५ को सरकारको स्वीकृति लिई २०२३ साल साउन ३१ गते जारी गरेको उधार नियन्त्रण नियमहरूबाट शुरूभयो। उक्त नियमले वाणिज्य बैंकहरूको तरल सम्पत्ति र निक्षेप दायित्वको परिभाषा गर्नुका साथै वाणिज्य बैंकहरूले राष्ट्र बैंकले समय समयमा तोके अनुसार ब्याज दर कायम गर्नुपर्ने र तरल सम्पत्ति तथा राष्ट्र बैंकमा नगद मौज्दात राख्नुपर्ने व्यवस्था गर्‍यो। राष्ट्र बैंकले तोके अनुसार वाणिज्य बैंकहरू र वित्तीय संस्थाहरूले आफ्नो कर्जा तथा लगानीको रकम, भुक्तानीको समय, सुरक्षण निर्धारण गर्नुपर्ने व्यवस्था पनि उक्त नियममा गरिएको थियो।

बढी बचत परिचालन गर्ने अभिप्रायले २०२३ साल भदौ १५ गतेदेखि लागू हुनेगरी यसअघि बैंकहरूले आफैंले तोक्ने गरेको ब्याज दरमध्ये बचत खातामा दिइने ब्याजदर ३ प्रतिशतबाट वृद्धि गरी न्यूनतम ४ प्रतिशत र १ वर्षसम्मको र सोभन्दा बढी अवधिको मुद्दती खातामा दिइने ब्याजदर ४ प्रतिशतबाट वृद्धि गरी न्यूनतम ६ प्रतिशत तोक्ने निर्देशन राष्ट्र बैंकले वाणिज्य बैंकहरूलाई दियो। कर्जाको मागमा अनुगत हुने वृद्धिलाई बचत परिचालनबाटै पूर्ति गर्ने उद्देश्यले मुद्दती निक्षेपतर्फ माघदेखि चैत महीनासम्म स्वीकार गरिने ३ महीने मुद्दती निक्षेपमा ५ प्रतिशत र कात्तिकदेखि चैतसम्म स्वीकार गरिने ६ महीने मुद्दती निक्षेपमा ५½ प्रतिशत ब्याज दिने व्यवस्था गरियो। मुद्दती खाताको यो ब्याजदर न्यूनतम निश्चित गरिएकोले सोभन्दा बढी ब्याज दिनसक्ने अधिकार बैंकहरूमाथि नै छोडियो। निक्षेपमा दिने ब्याजदरमा वृद्धि भएबाट कर्जामा लिने ब्याजदर राष्ट्र बैंकको पूर्व स्वीकृति लिएर बैंकहरू आफैंले नै निर्णय गर्ने अधिकार वाणिज्य बैंकहरूलाई नै दिइयो। २०२३ सालमा ब्याजदरमा भएको परिवर्तन सानो स्तरको भए तापनि राष्ट्र बैंकले ब्याज दर नीतिलाई मौद्रिक नीतिको महत्वपूर्ण उपायको रूपमा लिने संकेत यस कदमले दियो।

२०२३ जेठमा नेपाली रूपैयाँको भारतीय रूपैयाँसंग भएको पुनरमूल्यनको फलस्वरूप भारतबाट हुने आयातमा वृद्धि हुँदैगएको र भारतीय रूपैयाँको संचितिमाथिको चाप बढ्ने देखिकोले यसलाई नियन्त्रण गर्ने उद्देश्यले २०२३ असोज १ गतेदेखि लागू हुनेगरी बैंकहरूले आयात गरिएका वस्तुहरू धितो लिई दिने कर्जामा, आयात कर्ताहरूलाई दिइने कर्जामा र आयातको निमित्त प्रतितपत्र खोल्दा लिइने मार्जिन निम्नतम ४० प्रतिशत तोक्नुका साथै सोही मितिदेखि लागू हुने गरी वाणिज्य बैंकहरूले आफ्नो निक्षेप दायित्वको ८ प्रतिशत अनिवार्य रूपले राष्ट्र बैंकमा जम्मा गर्नुपर्ने गरियो। नगद निक्षेप अनुपात सम्बन्धी एउटा विस्तृत नियमावली पनि २०२३ पुस १० गतेदेखि लागू भयो।

## आन्तरिक कर्जा

(रु० करोड़मा)

| वर्ष | कुल कर्जा | श्री ५ को सरकारलाई | सरकारी संस्था-हरुलाई | निजी क्षेत्रलाई |
|---|---|---|---|---|
| २०१४ असार | ३.५९ | १.४५ | — | २.१४ |
| २०१५ असार | ३.०२ | ०.७३ | — | २.२९ |
| २०१६ असार | १.४७ | −१.९७ | — | ३.४४ |
| २०१७ असार | २.८४ | −०.३९ | — | ३.२३ |
| २०१८ असार | ३.४९ | −१.११ | — | ४.६० |
| २०१९ असार | ४.५२ | −१.२५ | — | ५.७७ |
| २०२० असार | ४.४१ | −१.८१ | — | ६.२२ |
| २०२१ असार | ५.०८ | −४.१० | ०.३० | ८.८८ |
| २०२२ असार | ७.३१ | −५.१७ | १.४३ | ११.०५ |
| २०२३ असार | १६.९३ | −२.४२ | ३.६९ | १५.६६ |
| २०२४ असार | १८.०० | ०.५८ | ३.८० | १३.६२ |
| २०२५ असार | १४.०३ | −८.८९ | ३.५० | १९.४२ |
| २०२६ असार | ३.२२ | −२०.१६ | ३.९५ | १९.४३ |
| २०२७ असार | ९.६८ | −२०.१२ | ३.९१ | २५.८९ |
| २०२८ असार | २१.२८ | −१४.५३ | ३.७३ | ३२.०८ |
| २०२९ असार | ३६.१८ | −८.०३ | ४.१८ | ४०.०३ |
| २०३० असार | ५९.७३ | ४.२२ | ९.६१ | ४५.९० |
| २०३१ असार | ९७.०२ | १३.९९ | १२.८६ | ७०.१७ |
| २०३२ असार | १६३.७८ | २८.५७ | ५६.८७ | ७८.३४ |
| २०३३ असार | १७६.३३ | ४७.९८ | ५६.७३ | ७१.६२ |
| २०३४ असार | २१२.५० | ७४.९८ | ५१.१० | ८६.४२ |
| २०३५ असार | २९०.५३ | ९६.५५ | ८६.८७ | १०७.११ |
| २०३६ असार | ३५४.०८ | ११३.९३ | १०७.९९ | १३३.१६ |
| २०३७ असार | ४३०.५८ | १२५.८३ | ११३.१० | १९१.६५ |

स्रोत : नेपाल राष्ट्र बैंक ।

# आन्तरिक कर्जा


रु. करोडमा
कुल आन्तरिक कर्जा
सरकारमाथि दावी
सरकारी संस्थाहरूमाथि दावी
निजी क्षेत्रमाथि दावी
४४०
४२०
४००
३८०
३६०
३४०
३२०
३००
२८०
२६०
२४०
२००
१८०
१६०
१४०
१२०
१००
८०
६०
४०
२०
०
—१०
—२०
—३०
२०१३
२०१८
२०२३
२०२८
२०३३
२०३७

देशको वैदेशिक व्यापारलाई सन्तुलनमा राख्न आयात घटाउने नीति अपनाउनुका साथै औद्योगिक उत्पादन बढाउने तथा निर्यात परिमाण बढाउने कदमहरू चालिनु पनि त्यत्तिकै आवश्यक थियो। यस उद्देश्यले २०२३ साल माघ १ गतेदेखि लागू हुनेगरी वाणिज्य बैंकहरूले निर्यात कर्जाको मार्जिन दर अधिकतम २५ प्रतिशत लिनसक्ने, निर्यात तथा औद्योगिक कर्जामा अधिकतम ८.५ प्रतिशत ब्याज लिने र निर्यात बिल डिस्काउण्ट गर्दा अधिकतम ७.५ प्रतिशत ब्याज दरमा डिस्काउण्ट गर्नुपर्ने गरियो।

कर्जा नियन्त्रणका कदमहरूलाई प्रभावकारी बनाउन वाणिज्य बैंकहरूले दिएको कर्जाको कागजातको धरौटमा २० प्रतिशत मार्जिन कटाइ बाँकी ८० प्रतिशत वार्षिक ६ प्रतिशत ब्याजमा वाणिज्य बैंकहरूलाई पुनरकर्जा दिने व्यवस्था राष्ट्र बैंकले गर्‍यो। यस्तो पुनरकर्जा ६ महीनासम्मको अवधिका लागि दिन सकिने व्यवस्था पनि भयो। राष्ट्र बैंकद्वारा लिइएको उपरोक्त मौद्रिक तथा कर्जा नियन्त्रण नीतिको फलस्वरूप आशातीत रूपमा बैंकहरूको निक्षेपमा वृद्धि भयो भने कर्जामा पनि आशा गरेझैं ह्रास आयो। वाणिज्य बैंकहरूको कुल निक्षेप २०२३ असार मसान्तमा रु. १२.५० करोडबाट वृद्धि भै २०२४ असार मसान्तमा रु. १८.१८ करोड पुग्यो। त्यस्तै वाणिज्य बैंकहरूको कुल कर्जा २०२३ असारमा रु. १६.५६ करोडबाट २०२४ असारमा रु. १४.६३ करोडमा झर्‍यो। २०२१ साल असार मसान्तमा मुद्रा प्रदाय ३८.१ प्रतिशतले, २०२२ साल असार मसान्तमा २२.० प्रतिशतले र २०२३ साल असार मसान्तमा १६.८ प्रतिशतले बढेकोमा उपर्युक्त कदमहरूको फलस्वरूप २०२४ साल असार मसान्तमा मुद्रा प्रदाय ६ प्रतिशतले र २०२५ साल असार मसान्तमा ८.६ प्रतिशतले मात्र बढ्यो।

२०२३ सालमा मौद्रिक तथा कर्जा नियन्त्रणका उपायहरूको प्रयोग गरेपछिका केही वर्षसम्म मौद्रिक तथा कर्जा प्रणालीमा खास व्यवधानहरू देखा परेनन्। बैंकको साधन र कर्जाको आपूर्तिमा देखापरिरहेको असंतुलन कायम रहन नदिन बैंकहरूको निक्षेप बढाउने र कर्जाको ब्याजदरलाई बढी व्यवहारिक बनाउने उद्देश्य राखी २०२८ साल वैशाख १ गतेदेखि वाणिज्य बैंकहरूले निक्षेपमा दिने वार्षिक ब्याजदर बचत खातामा ५ प्रतिशत र मुद्दती खातामा १ वर्षको लागि ७.५ प्रतिशत, १—२ वर्षसम्मको लागि ७.७५ प्रतिशत, २—३ वर्षसम्मको लागि ८ प्रतिशत, ३—५ वर्षसम्मको लागि ८.२५ प्रतिशत निश्चित गरियो। वाणिज्य बैंकहरूले कर्जामा लिने ब्याजदर बस्तापि आफैंले तोक्नसक्ने व्यवस्था भएकोमा सोही वर्षदेखि कर्जाको उद्देश्य अनुसार वार्षिक ७.५ प्रतिशतदेखि १३ प्रतिशतसम्म लिनुपर्ने गरी राष्ट्र बैंकले नै निश्चित गरिदियो। कृषि क्षेत्रमा कर्जा दिने वित्तीय संस्थाहरूको ब्याज दर छोटो अवधिलाई ७ देखि १० प्रतिशत, मध्यम अवधिलाई ६ देखि ६ प्रतिशत र दीर्घकालीन कर्जाको लागि ३.५ देखि ६ प्रतिशत तोकियो। यस्तै नेपाल औद्योगिक विकास कर्पोरेशन तथा साना उद्योग विकास निगमले दिएका कर्जामा लिने ब्याजदर पनि अवधि हेरी ५ देखि ७.५ प्रतिशत निश्चित गरियो।

आर्थिक वर्ष २०२९।३० मा निर्यात क्रियाकलापमा शिथिलता आयो तर आयातको परिमाणमा भने निकै नै वृद्धिहुने प्रवृत्ति देखियो। निर्यातलाई प्रोत्साहित गर्ने र आयातको परिमाणलाई नियन्त्रण गर्ने उद्देश्यले २०३० साल जेठ १८ गतेदेखि वाणिज्य बैंकहरूबाट निर्यातयोग्य वस्तुहरूको धितोमा जाने कर्जाको ब्याज दर १३ प्रतिशतबाट घटाई ९ प्रतिशत र साधारण र मझौला स्तरका सूती कपडा बाहेक अरू किसिमका कपडाको धितोमा दिइने कर्जा दर १० प्रतिशतबाट वृद्धि गरी १३ प्रतिशत र स्टेनलेस स्टील र अन्य आयात मालसामानको धितोमा जाने कर्जाको ब्याजदर २३ प्रतिशत तोकियो। उपर्युक्त उद्देश्य पूर्तिका सिलसिलामा २०३० जेठ ८ गते लिइएका कदमहरूका अतिरिक्त अझ केही थप सुधार गर्नु आवश्यक देखिएकोले देशको निर्यात कारोबारलाई बढी प्रोत्साहित गर्ने उद्देश्यले २०३० साल भदौ १ गतेदेखि निर्यात बिल कर्जाको ब्याजदर ७ प्रतिशतबाट घटाई ६.५ प्रतिशत, ए. बी. सी. अन्तर्गत विदेशमा सामान पठाएको डकुमेन्टमा जाने कर्जाको ब्याजदर ७.५ प्रतिशतबाट वृद्धिगरी ८ प्रतिशत र यी कर्जाहरूमा राष्ट्र बैंकबाट प्रदान गरिने पुनरकर्जाको ब्याजदर क्रमश: ४ र ६ प्रतिशत निर्धारण भयो।

२०२८ सालमा ब्याज दरमा गरिएको परिवर्तनबाट केही समयसम्म निक्षेपमा वृद्धि भए तापनि मुद्रास्फीति बढेको कारणले निक्षेपको वास्तविक ब्याजदरमा ह्रास आयो। निक्षेपको वृद्धि दरभन्दा कर्जाको वृद्धि दर बढी भएको देखिएकोले आर्थिक वर्ष २०३०।३१ को अन्त्यतिर वाणिज्य बैंकहरूको साधनको श्रोत तथा उपयोगमा असन्तुलनको स्थिति पैदा भयो। बैंकहरूको कुल निक्षेप २०२७ चैतमा रु. ४०.६४ करोडबाट वृद्धि भै २०३१ असारमा रु. ८८.०३ करोड पुग्यो भने बैंकहरूको कुल आन्तरिक कर्जा २०२७ चैतमा रु. ३६.४६ करोडबाट वृद्धि भै २०३१ असारमा रु. ८६.६१ करोड पुग्यो। आर्थिक वर्ष २०२९।३० देखि बैंकिंग क्षेत्रको श्री ५ को सरकारमाथि दावी, सरकारी संस्थाहरूमाथिको दावी तथा निजी क्षेत्रमाथिको दावीमा समेत अत्यधिक वृद्धि हुनथालेकोले २०३० असार मसान्तमा मुद्रा प्रदाय १८.४ प्रतिशतले र २०३१ साल असार मसान्तमा २६.१ प्रतिशतले वृद्धि भयो। पेट्रोलियम संकटले अन्तर्राष्ट्रिय जगतमा मूल्य वृद्धिको प्रक्रिया शुरू हुनु, आयातको परिमाणमा वृद्धि हुनु, आन्तरिक कर्जामा वृद्धि हुनु इत्यादि कारणले मुद्रा प्रदायमा ठूलो विस्तार ल्याएको थियो। २०३२ असार मसान्तमा खूद वैदेशिक सम्पत्ति रु. ६.८५ करोडले मात्र वृद्धि हुँदा पनि मुद्रा प्रदाय सोही समयमा २६.१ प्रतिशतले बढेको थियो। नेपालको शहरी उपभोक्ता वार्षिक सरदर मूल्य सूची

२०३१ मा १८.२ प्रतिशतल र २०३२ मा १६.८ प्रतिशतले बढेको थियो।

अतः बैंकहरूको साधन परिचालन तथा कर्जा प्रवाहमा सन्तुलन ल्याउने, मूल्य वृद्धि दरलाई नियन्त्रण गर्ने तथा वैदेशिक सम्पत्तिमा ह्रास हुननदिने उद्देश्यले २०३१ साल साउन १ गतेदेखि बचतमा दिइने ब्याजदर ५ प्रतिशतबाट ६.५ प्रतिशत, १ वर्षे मुद्दती निक्षेपमा ७.५ प्रतिशतबाट ९.५ प्रतिशत, २ वर्षमा ७.७५ प्रतिशतबाट ९.७५ प्रतिशत, ३ वर्षमा ८ प्रतिशतबाट १० प्रतिशत, ४ वर्षमा ८.२५ प्रतिशतबाट १०.२५ प्रतिशत र ५ वर्ष वा सोभन्दा बढी अवधिका लागि ८.५ बाट १०.५ प्रतिशत गरी वृद्धि गरियो। यसैगरी कर्जातर्फको ब्याजदर ६.५ देखि १३ प्रतिशतसम्म तोकियो।

द्रुततर गतिले विस्तार हुनलागेको कर्जालाई नियन्त्रणमा ल्याउन २०३१ सालमा मौद्रिक नीतिको इतिहासमा पहिलो पटक वाणिज्य बैंकहरूबाट निजी क्षेत्रलाई प्रदान गरिने कुल कर्जाको सीमा निश्चित गरियो। २०३१ साउनमा ब्याजदरमा भएको परिवर्तन पश्चात् पनि निक्षेपको तुलनामा कर्जामा भइरहेको अधिक वृद्धिको क्रम जारी नै रह्यो। अर्थव्यवस्थामा रहेको तरलतालाई नियन्त्रणमा राखी कर्जाको वृद्धिको दरमा नियन्त्रण ल्याउन नेपाल राष्ट्र बैंकले २०३१ साल कात्तिक १ गतेदेखि वाणिज्य बैंकहरूको अनिवार्य तरलता ३२ प्रतिशत रहनुपर्ने निर्देशन बैंकहरूलाई दियो। निर्देशन अनुसार कुल तरलतामध्ये राष्ट्र बैंकमा राख्नुपर्ने नगद मौज्दात भने ८ प्रतिशतबाट घटाई ५ प्रतिशत मात्र राखे पुग्ने र सरकारी ऋणपत्रमा ५ प्रतिशत लगानी गर्नुपर्ने व्यवस्था कायम भयो।

२०३१ साउनको ब्याजदर परिवर्तन र २०३१ कात्तिकमा तरलता अनुपात बढाउने निर्देशनको बावजूद वाणिज्य बैंकहरूको साधनमा खास सुधार नआएको तर निर्माण तथा विकास सामग्री झिकाउन आवश्यक कर्जाको माग पूर्ति गर्नुपर्ने भएकोले वाणिज्य बैंकहरूको साधन सम्बन्धी कठिनाइलाई केही हदसम्म खुकुलो गर्ने उद्देश्यले २०३१ चैतदेखि बैंकहरूले सरकारी ऋणपत्रमा ५ प्रतिशत लगानी गर्नुपर्ने अनिवार्यतालाई हटाई कायम गर्नुपर्ने कुल तरलता ३२ प्रतिशतबाट २७ प्रतिशत निश्चित गरियो। २०३१ साल चैत २० गते २७ प्रतिशत तरलतामा २ प्रतिशत थपगरी २५ प्रतिशत कायम रहनुपर्ने व्यवस्था भयो।

२०३१ सालमा लिइएका कर्जा नियन्त्रण नीतिको बावजूद आर्थिक वर्ष २०३१।३२ सालभरी नै कर्जा विस्तार अत्यधिक मात्रामा हुनलागकोले वाणिज्य बैंकहरूबाट २०३२ असारमा प्रवाह हुनसक्ने कर्जाको सीमा निश्चित भयो। २०३२ सालमा कर्जा सीमा निर्धारण गर्दा निजी क्षेत्रका अतिरिक्त सरकारी वित्तीय संस्था बाहेक अन्य सरकारी संस्थाहरूलाई जाने कर्जा सापट र त्यस्ता संस्थाहरूको शेयर पूंजीमा हुने लगानी समेतलाई कर्जाको सीमाभित्र राखियो।

२०३१ साउनमा बैंकहरूको निक्षेप तथा कर्जाको ब्याज दरमा वृद्धि भए तापनि मुद्रास्फीति उच्चस्तरमा रहेकोले वाणिज्य बैंकहरूको कर्जा प्रवाहमा निकै नै वृद्धि भएको तर वास्तविक ब्याज दर भने नकारात्मक भै वैकल्पिक सम्पत्तिहरूको प्रतिफल निकै बढी भएकोले निक्षेप परिचालनमा खास वृद्धि हुन नसकी बैंकहरूको साधनको परिचालन र यसको उपयोगमा असन्तुलन आयो। वाणिज्य बैंकहरूको निक्षेप २०३१ साउनमा रु. ८८.०३ करोडबाट २०३१ चैतमा रु. १०२.८४ करोड र बैंकहरूको कर्जा २०३१ असारमा रु. ८६.६१ करोडबाट वृद्धि भै २०३१ चैतमा रु. १३०.०० करोड पुग्यो। वाणिज्य बैंकहरूले आफ्नो साधनले नपुगेर यसवर्ष राष्ट्र बैंकबाट रु. ७.०६ करोडको पुनरकर्जा लिनुपर्‍यो। निर्माण तथा विकासका सामग्रीको प्रशस्त जगेडा राख्ने नीतिको फलस्वरूप बाह्य भुक्तानी निकै घाटामा गयो। शोधनान्तर स्थिति ठूलो रकमले नेपालको विपक्षमा रह्यो र नेपाल राष्ट्र बैंकको खुद वैदेशिक सम्पत्ति रु. ४२.५ करोडले घट्यो। यस स्थितिमा सुधार ल्याउन बढी निक्षेप परिचालन गर्ने, कर्जालाई अनुपयोगी लगानीतर्फ निरुत्साहित गरी बढी प्रतिफल आउने लगानी तर्फ निर्देशित गर्ने, बाह्य भुक्तानी घाटालाई सन्तुलनमा ल्याउने र मुद्रास्फीतिलाई कम गराउन सहयोग गर्ने किसिमको मौद्रिक नीतिको निर्धारण गरिनु आवश्यक भएकोले नेपाल राष्ट्र बैंकले २०३२ साल बैशाख १५ गतेदेखि वाणिज्य बैंकहरू तथा कृषि विकास बैंकले निक्षेप तथा कर्जामा लिनेदिने ब्याज दरका साथै नेपाल औद्योगिक विकास निगमले कर्जामा लिने ब्याजदरमा समेत आमूल परिवर्तन गरी बचतमा दिने वार्षिक ब्याजदर ५ प्रतिशतबाट बढाई ८ प्रतिशत तोकियो। मुद्दतीमा दिने वार्षिक ब्याजदर ९.५ देखि १०.५ प्रतिशत रहेकोमा १ वर्षमा १५ प्रतिशत र २ वर्षमा १६ प्रतिशत तोकियो। त्यस्तै वाणिज्य बैंकहरूबाट साना क्षेत्र, कृषि, औद्योगिक र निर्यातमा दिइने कर्जाको ब्याजदर १५ प्रतिशत तथा अन्य प्रयोजनको लागि दिइने कर्जाको ब्याजदर न्यूनतम १८ प्रतिशत निश्चित गरियो। कृषि विकास बैंकले लिने ब्याजदर १० देखि १६ प्रतिशत तोकियो। यसैगरी सहकारी संस्थाहरूले लिने ब्याजदर विशेष आयोजनाहरूमा ४ देखि ८ प्रतिशत र अन्य प्रयोजनका लागि १५ प्रतिशत निश्चित भयो। राष्ट्र बैंकबाट दिइने पुनरकर्जा दरमा पनि परिवर्तन भयो। बैंकहरूले कर्जा प्रदान गर्दा लिने मार्जिन तोक्ने अधिकार भने वाणिज्य बैंकहरूलाई नै छोडियो। यसरी २०३२ सालमा भएको ब्याजदर परिवर्तन मौद्रिक नीतिको इतिहासमा असाधारण नै थियो।

२०३२ साल बैशाख ७ गते भएको ब्याज दरको परिवर्तन स्वरूप बैंकहरूको निक्षेपमा अत्यधिक वृद्धि भै २०३१ चैतमा रु. १०२.८४ करोडबाट २०३३ असारमा रु. १५३.५१ करोड पुग्यो। तर कर्जा भने २०३१ चैतमा रु. १३०.०० करोडबाट ह्रासभै २०३३ असारमा रु. १२६.४४ करोडमा पुगेकोले बैंकहरूको तरलतामा वृद्धिभै २०३३ साउनमा ४०.३ प्रतिशत पुग्यो। नेपाल राष्ट्र बैंकले लिएको सहूलियो मौद्रिक नीतिको

फलस्वरूप कर्जाको माग र आपूर्तिमा संतुलन आउनाका साथै मुद्रास्फीति नियन्त्रणमा आई आर्थिक वर्ष २०३२।३३ मा मूल्यमा ०.७ प्रतिशत ह्रास भयो र बाह्य भुक्तानीमा पनि ठूलो बचत भई राष्ट्र बैंकको खुद वैदेशिक सम्पत्ति २०३३ साल असार मसान्तमा रु. १३४.५७ करोड पुग्यो। देशको मूल्य तथा शोधनान्तर स्थितिमा देखिएको अनुकूल स्थितिलाई ध्यानमा राखी २०३३ साउन १ गतेदेखि वाणिज्य बैंकहरूको मुद्दती निक्षेपमा ब्याजदर १ प्रतिशत घटाई १ वर्षे मुद्दती निक्षेपको वार्षिक ब्याजदर १४ प्रतिशत र २ वर्षेको वार्षिक ब्याजदर १५ प्रतिशत तोकियो। वाणिज्य बैंकहरूले लिने कर्जातर्फको ब्याजदर पनि प्रयोजन हेरी ८ देखि १८ प्रतिशतसम्म निश्चित गरियो। यस व्यवस्था अनुसार राष्ट्रिय अर्थतन्त्रको विकासमा महत्वपूर्ण मानिएको तर प्रतिफल कम आउने क्षेत्रलाई जाने कर्जाको ब्याजदर कम तोकियो भने प्रतिफल बढी आउने राष्ट्रिय अर्थतन्त्रको हिसाब-बाट कम प्राथमिकता दिइएको क्षेत्रमा जाने कर्जालाई बढी ब्याज निश्चित गरियो।

कृषि विकास बैंकले लिने कर्जातर्फको ब्याजदर सहकारी तथा साझा संस्थाको लागि ४ प्रतिशतदेखि १० प्रतिशतसम्म र अन्य संस्था वा व्यक्तिहरूको निमित्त ८ देखि १४ प्रतिशतसम्म निश्चित भयो। त्यस्तै नेपाल औद्योगिक विकास कर्पोरेशनले लिने ब्याज दर उद्योगको किसिम हेरी १० देखि १६ प्रतिशतसम्म तोकियो।

उपर्युक्त परिवर्तनस्वरूप राष्ट्र बैंकबाट वाणिज्य बैंकहरू तथा अन्य वित्तीय संस्थालाई दिइने पुनरकर्जा दरमा पनि तदनुरूप परिवर्तन गरियो।

२०३३ साउन १ गते भएको ब्याजदर परिवर्तनबाट पनि बैंकहरूको साधन उपयोग स्थितिमा खास सुधार हुन नसकी २०३३ माघमा कर्जा सापट निक्षेप अनुपात ५८.७ प्रतिशतमा ओर्लेको र तरलता निक्षेप अनुपात ५०.६ प्रतिशतमा पुगेको, मुद्रास्फीतिको दरमा पनि कमी भएको र बाह्य भुक्तानीमा समेत सुधार भएकोले २०३३ फागुन १ गतेदेखि निक्षेपतर्फ मुद्दतीको ब्याजदर १ वर्षमा वार्षिक १४ प्रतिशतबाट घटाई १२ प्रतिशत र २ वर्षमा १५ प्रतिशतबाट वार्षिक १३ प्रतिशत निश्चित गरियो। त्यस्तै वाणिज्य बैंकहरूले लिने कर्जातर्फको ब्याजदर प्रयोजन हेरी वार्षिक ८ देखि १६ प्रतिशत, कृषि विकास बैंकको ब्याजदर वार्षिक ६ देखि १४ प्रतिशत र नेपाल औद्योगिक विकास निगमको ब्याजदर वार्षिक ११ देखि १६ प्रतिशत कायम गरियो। यसै-गरी राष्ट्र बैंकबाट दिइने पुनरकर्जाको ब्याजदरमा पनि परिवर्तन गरियो। २०३२ सालमा गरिएको ब्याजदर परिवर्तन पछि वाणिज्य बैंकहरूको तरलतामा निकै वृद्धि भएकोले २०३३ साल फागुन १ गतेदेखि अनिवार्य रूपमा राख्नुपर्ने कुल तरलतामध्ये राष्ट्र बैंकमा ५ प्रतिशत राख्नुपर्ने नगद मौज्दात मात्र यथावत कायम राखी तरलता सम्बन्धी व्यवस्था खारेज गरियो।

कृषि उत्पादन बढाउनमा सिंचाईले महत्वपूर्ण भूमिका खेल्ने तर यसबाट प्रतिफल तुरुन्तै नआउने हुनाले २०३४ साल चैत २८ गतेदेखि सिंचाई सम्बन्धी ऋणको ब्याज दर १४ प्रतिशतबाट घटाई ११ प्रतिशत र पर्यटन उद्योगले नेपालको विकासमा महत्वपूर्ण भूमिका खेल्ने र होटेल तथा ट्राभेल एजेन्सीहरू पर्यटन विकासमा आधारभूत कारक भएकाले २०३३ साल मंसीर ८ गतेदेखि होटेल बिल र कुपनको आधारमा वाणिज्य बैंकहरूबाट रजिष्टर्ड होटल तथा ट्राभेल एजेन्सीलाई दिइने कर्जाको ब्याजदर ५ प्रतिशत तोकिएको छ।

२०३३ साउनदेखि क्रमश: घट्दै गएको वाणिज्य बैंकहरूको कर्जा निक्षेप अनुपात २०३४ को अन्तिमतिर फेरि बढ्न शुरुगरेकोले निक्षेप वृद्धिको अनुपातभन्दा बढी मात्रामा कर्जामा हुनसक्ने वृद्धिबाट मुद्रा प्रदायमा पर्नसक्ने चापको संभावनालाई हेरी २०३४ साल चैत १ गतेदेखि वाणिज्य बैंकहरूले आफ्नो निक्षेप दायित्व (चल्ती, बचत र मुद्दती निक्षेप मात्र) को ७ प्रतिशत नगद मौज्दात राष्ट्र बैंकमा विशेष अचल खाता खोली अनिवार्य रूपमा राख्नुपर्ने व्यवस्था गरियो।

२०३४ चैतमा नगद निक्षेप अनुपात कायम गरिए तापनि निक्षेप परिचालनको तुलनामा वाणिज्य बैंकहरूबाट प्रदान गरिएको कर्जा वृद्धिको क्रम कायमै रहेकोले त्यसमा नियन्त्रण गर्ने उद्देश्यले वाणिज्य बैंकहरूबाट २०३५ असारमा निजी क्षेत्र तथा सरकारी गैर वित्तीय संस्थाहरूमा प्रवाहित हुने कर्जाको सीमा निश्चित गरियो। यस्तो कर्जाको सीमा २०३६ असार र २०३७ असारको निमित्त पनि निश्चित गर्ने क्रम कायमै राख्यो।

राष्ट्र बैंकले २०२३ सालपछि लिएको मौद्रिक तथा कर्जा नीति र वाणिज्य बैंकका शाखा विस्तारको लागि राष्ट्र बैंकबाट शुरू गरिएका कार्यक्रमको फलस्वरूप २०३७ साल असारसम्म देशमा खुलेका २४१ बैंक शाखाहरूको माध्यमबाट बचत परिचालनमा निकै वृद्धि भै २०३७ असार मसान्तसम्ममा बैंकहरूको निक्षेप रु. ३३२.६७ करोड पुगेको छ। साथै कर्जा विस्तारमा पनि प्रशस्त वृद्धि भै त्यसको परिमाण पनि रु. २६६.७८ करोड पुगेको छ।

२०३४ सालदेखि मुद्रा प्रदायलाई विस्तार गर्ने कारकमा आन्तरिक कर्जा नै मुख्य रहिआएको छ। २०३४ असार मसान्तमा आन्तरिक कर्जा रु. २१२.५ करोड रहेकोमा २०३५ असार मसान्तमा रु. २६०.५ करोड पुगी रु. ७८ करोडले आन्तरिक कर्जा बढेको थियो। २०३६ साल असारमा आन्तरिक कर्जा रु. ६३.६ करोडले बढेको थियो भने २०३७ साल असारमा रु. ७६.४ करोडले बढ्यो। यस अवधिमा मुद्रा प्रदाय पनि क्रमश: २७.६, ११.२, र १७.६ प्रतिशतले बढ्न गयो।

# ३ नेपालमा विदेशी विनिमय नियन्त्रण

देशको आर्थिक स्थिति र भौगोलिक बाध्यताले गर्दा नेपालको विदेशी विनिमय संचिति र विनिमय प्रणालीलाई समष्टिरूपमा चर्चा गर्दा यथार्थ तथ्य प्रकाशमा आउन गाह्रो पर्छ। नेपालको कुल वैदेशिक व्यापारको अधिकांश हिस्सा भारतसंग भएकोले बढी प्रचलनमा रहेको भारतीय रुपैयां नेपाली रुपैयांसंग मात्र एकपक्षीय रूपमा भए पनि असीमित मात्रामा परिवर्त्य भएको र अन्य परिवर्त्य विदेशी मुद्राको हकमा नेपालले त्यस्तो मुद्रा सटही दिने कार्यमा नियन्त्रण अपनाइ आएको कारणले गर्दा विदेशी विनिमय विषयमा भारतीय मुद्रा र अन्य परिवर्त्य मुद्राको चर्चा छुट्टाछुट्टै गर्नु प्रासङ्गिक हुनजान्छ।

२००७ सालअघि र त्यसपछिका धेरै वर्षसम्म नेपालमा भारतीय मुद्राको चलनचल्तीको बाहुल्य रह्यो। देशको आर्थिक आधिक्यलाई मौद्रिकीकरण गर्न पर्याप्त नेपाली मुद्राको अभाव हुनु, मुद्रा प्रसारगर्ने एकाईहरू नहुनु र देशको प्रायशः सम्पूर्ण अन्तर्राष्ट्रिय व्यापार भारतसंग नै सीमित भएको कारणले गर्दा नेपालको अर्थव्यवस्थामा भारतीय मुद्राको प्रवेश र प्रभुत्व बढ्दै गएको थियो। भारतीय र नेपाली रुपैयां समान रूपमा प्रचलनमा भएको तत्कालीन नेपालको मौद्रिक प्रणालीलाई द्वय मुद्रा प्रणाली भनिन्छ। ती मुद्राहरूको विनिमय दर खुला बजारमा माग र आपूर्तिको आधारमा दिनदिनै निश्चित गरिन्थ्यो र बजार प्रायशः सधैं अस्थिर रहन्थ्यो। बेलाबेलामा श्री ५ को सरकारले भारतीय रुपैयांको खरीद बिक्री दर तोकी खरीद बिक्री गरेको बखत बाहेक बजारमा चलनचल्तीमा भएको नेपाली रुपैयांको परिमाणले नै भारतीय मुद्राको विनिमय दरलाई प्रभाव पार्ने गर्दथ्यो। सराफीहरू तथा फाटकेबाजहरूले विनिमय अस्थिरतालाई अरू बढी चर्काउने गर्दथे।

श्री ५ को सरकारले राष्ट्र बैंकको स्थापनापूर्व पनि सरकारी दरमा भारतीय रुपैयां बिक्री गरी सटही बजारलाई थाड दिने गरिआएको थियो। २०१२ साल बैशाख ५ गते रु. १७५।५० प्रति १०० भा. रु. को बिक्री दर तोकी आवश्यक मालसामान झिकाउन नेपाल बैंक मार्फत भारतीय रुपैयां बिक्री गर्न थालियो। यो बिक्री दर बैशाख १६ गते रु. १७४।५० मा झन्यो र त्यही सालको चैत २१ गतेदेखि रु. १६४।४० तोकियो। २०१३ साल बैशाख १ गतेदेखि यो दरलाई अझै घटाई रु. १५४।५० पुऱ्याइयो। अन्य प्रयोजनहरूको लागि आवश्यक पर्ने भारतीय मुद्राको लागि खुला बजारमा नै निर्भर हुनुपर्दथ्यो। २०१६ सालसम्म तोकिएका सामानहरू पैठारी गर्नको लागि मात्र सरकारी दरमा विनिमय सुविधा प्रदान गरिने व्यवस्था भएकोले सरकारी दरभन्दा खुला बजार दर बढी निर्णायक रहेको थियो। २०१७ साल बैशाख १ गतेदेखि रु. १६० को भा. रु. १०० तोकी भारतीय मुद्राको असीमित सटही दिने सुविधा प्रदान भएपछि सरकारी विनिमय दर नै निर्णायक दर हुनगयो।

**नेपाली रुपैयाको परिमाण र भारतीय रुपैयाको विनिमय दर**

| वर्ष | ने. रु. परिमाण (रु. लाखमा) | प्रति १०० भा. रु. को काठमाडौं बजार दर (वार्षिक औसत) |
|---|---|---|
| १९९६ | २२६ | १५४ |
| २००१ | १०६ | ८३ |
| २००६ | ३३५ | १०४ |
| २००८ | ५४४ | १३१ |
| २०१० | ८३० | १६७ |
| २०११ | ६३० | १७६ |
| २०१२ | ६६२ | १५१ |
| २०१४ | ८४० | १३५ |
| २०१५ | ६०२ | १६० |
| २०१६ | ६६२ | १६४ |

**नेपाल राष्ट्र बैंकको स्थापना र नेपाली तथा भारतीय रुपैयांको स्थिति**

२०१३ साल असार १७ गतेदेखि सरकारी दरमा सरकारी खाताबाट भारतीय रुपैयां खरीद बिक्री गराउने अभिभारा नेपाल राष्ट्र बैंकलाई सुम्पियो र विनिमय दर रु. १५०।५० निश्चित गरियो। यो विनिमय दरलाई क्रमशः घटाउंदै लगी २०१३ साल चैतमा रु. १३०।५० पुऱ्याइयो। यसरी घट्दै गएको विनिमय दरको फलस्वरूप भारतीय रुपैयांको माग बढ्दैगइ बजार दर र सरकारी दरमा ठूलो अन्तर देखा पर्नआयो र २०१५ साल कात्तिकतिर बजार दर रु. १७४।- पुग्नगयो। यसप्रकारको अस्थिरताले गर्दा देशभित्र



काठमाडौं बैंकिंग कार्यालय : विदेशी विनिमय कारोबार

नेपाली रूपैयाँप्रति आस्था नबढाई विनिमय दरमा स्थिरता आउन नसक्ने कुरा स्पष्ट थियो। २०१६ साल चैत मसान्तमा श्री ५ को सरकारले गरेको निर्णय अनुसार २०१७ साल वैशाख १ गतेदेखि नेपाल अधिराज्यभर भारतीय रूपैयाँको विनिमय दर रु. १६०।- तोकियो र नेपाल राष्ट्र बैंकले उक्त दरमा जे जति भारतीय रुपैयाँ किन्न वा बेच्न आए पनि असीमित मात्रामा किन्ने बेच्ने गर्नुपर्ने गरियो। यस निर्णयको साथै २०१७ साल जेठ १ गतेदेखि ठेक्का रकमको किस्ता र सलामी बाहेक श्री ५ को सरकार दाखिल हुने सबै रकमहरू दाङ, देउखुरी, बैतडी, डडेलधुरा, डोटी र इलाम जिल्लाहरूलाई छाडी नेपालमा नेपाली रुपैयाँमा मात्र बुझ्ने र सरकारबाट खर्चहुने सबै रकमहरू पनि उपर्युक्त जिल्लाहरू बाहेक अन्यत्र नेपाली रुपैयाँमा नै गरिने निर्णय गरियो। नेपाल राष्ट्र बैंकमा भारतीय मुद्रामा रहेका सरकारी खाताहरू पनि नेपाली रुपैयाँमा परिणत गरियो। २०१७ साल वैशाख १ गतेदेखि काठमाडौं उपत्यका र अधिकांश पहाडी जिल्लाहरूमा "नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन २०१४" सर्वप्रथम लागू भयो। त्यही साल साउन १ गतेदेखि ठेक्का र सलामीका रकम पनि नेपाली रुपैयाँमा नै लिनथालियो। उक्त मितिदेखि नेपाल राष्ट्र बैंकले आफ्ना तथा नेपाल बैंकका सबै कार्यालयहरू मार्फत भारतीय रुपैयाँको खरीद र बिक्री कार्य क्रमश: १५६।७५ र १६०।-को दरमा गर्नथाल्यो। यसले गर्दा बजार दर र सरकारी दरमा समानता आउन थाल्यो। यसका साथै श्री ५ को सरकारले २०१७ साल जेठ २० गते "विदेशी विनिमय सट्टही नियन्त्रण ऐन २०१७" को व्यवस्था गर्‍यो। यस ऐन अन्तर्गत जुनसुकै विदेशी विनिमयमा कारोबार गर्न पनि नेपाल राष्ट्र बैंकसंग इजाजत पत्र लिनुपर्ने र बैंकले तोकेको दरमा मात्र खरीद बिक्री हुनसक्ने भयो। यो ऐन २०१७ साल कात्तिक १ गतेदेखि काठमाडौं उपत्यकामा लागू गरी उपत्यकामा नेपाली रुपैयाँ मात्र चलनचल्तीमा ल्याउन पाइने भयो।

२०१८ साल असार १ गतेदेखि इलाम र बैतडीमा र भदौ १ गतेदेखि डोटीमा पनि नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन २०१४ लागू भयो र सबै सरकारी कारोबार पनि नेपाली रुपैयाँमा नै हुनुपर्ने भयो। देशको मौद्रिक तथा व्यापारिक क्रिया-कलापहरू बढ्दै गएको परिप्रेक्षमा "विदेशी विनिमय सट्टही नियन्त्रण ऐन २०१७" अपर्याप्त भएकोले २०१९ सालमा "विदेशी विनिमय नियमित गर्ने ऐन" को व्यवस्था भई २०१७ सालको ऐन खारेज गरियो।

२०२३ साल जेठमा भारतीय रुपैयाँको ३६.५ प्रतिशतले अवमूल्यन गर्ने भारत सरकारले निर्णय गर्‍यो र त्यसबेलाको भारतीय मुद्राको पर्याप्त संचिति तथा क्रमश: बढ्दै गएको नेपाली रुपैयाँको चलनचल्तीलाई ध्यानमा राखी श्री ५ को सरकारले २०२३ जेठ २४ गते नेपाली रुपैयाँको भारतीय रुपैयाँसंगको सटहदरमा कुनै परिवर्तन नगर्ने निर्णय लिएबाट नेपाली रुपैयाँ स्वत: ५७.५

प्रतिशतले पुनरमूल्यन हुनगई भा. रु. १०० को ने. रु. १०१।५५ सटही दर कायम हुनगयो। यस निर्णयका मुख्य आधारहरूमा २०२०।२१ देखि भारतसंगको व्यापार हाम्रो पक्षमा हुँदैगएको, राष्ट्र बैंकमा रहेको भारतीय रुपैयाँको संचितिमा उल्लेखनीय वृद्धि भएको र भारतमा प्रसार भइरहेको मुद्रास्फीतिबाट हाम्रो अर्थ-व्यवस्थालाई पृथक पार्नुपरेको कारणहरू उल्लेख गरिएका थिए। यस निर्णयले नेपालभित्र भारतीय रुपैयाँमा नगद मौज्दात राख्नेहरू तथा अन्य नेपाली नागरिकहरूको मनमा भारतीय मुद्रा-प्रतिको आस्थामा ठूलो धक्का लाग्नपुग्यो। यस प्रकारको मनोवैज्ञानिक स्थिति अनुकूल भएको अवस्था पारी श्री ५ को सरकारले नेपाल अधिराज्यभरी द्वय मुद्रा प्रणालीको अन्त्य गरी देशभित्रका सम्पूर्ण कारोबार केवल नेपाली रुपैयाँमा मात्र गर्न पाइने गरी २०२३ साल असोज १ गते आदेश जारी गर्‍यो। तदुउपरान्त नेपालबाट द्वय मुद्रा प्रणाली संधैंको लागि अन्त्यभयो। श्री ५ को सरकारको उक्त निर्णयको सफल कार्यान्वयनको लागि देशभरी नै बिक्री हुनआउने भारतीय रुपैयाँ खरीद गर्न तथा खरीद गर्न आउनेलाई भारतीय रुपैयाँ बिक्री गर्न नेपाल राष्ट्र बैंकले देशभरी सटही काउण्टर, घुम्ती सटही काउण्टर र सबै बैंकहरू मार्फत खरीद बिक्री गर्ने व्यवस्था गरी उक्त कार्य सम्पन्न गर्‍यो। अहिले पनि नेपाल राष्ट्र बैंक, वाणिज्य बैंकहरू र नेपाल अधिराज्य-भरीका मुख्य मुख्य भंसार कार्यालयहरू र भारतीय रुपैयाँको धेरै माग तथा आपूर्ति हुने शहर-बजारहरूमा सटही काउण्टर खोली सटही कारोबार गराइँदै आएको छ।

२०२४ साल मंसीर २ गते बृटिश सरकारले पौण्डको १४ प्रतिशतले अवमूल्यन गर्‍यो। नेपालको विदेशी विनिमय संचितिको ठूलो भाग पौण्ड स्टर्लिङमा नै भएको र भारतीय रुपैयाँको चाप समेत बढ्दै गएको कारणले गर्दा नेपाली रुपैयाँ र भारतीय रुपैयाँको विनिमय दरमा परिवर्तन गर्नुपर्ने स्थिति आई २०२४ साल मंसीर २२ गते १०० भारतीय रुपैयाँको १३५ नेपाली रुपैयाँ सटही दर कायम गरी नेपालले आफ्नो रुपैयाँ २४.७४ प्रतिशतले अवमूल्यन गर्‍यो।

२०२८ साल पुसमा नेपाली रुपैयाँ र भारतीय रुपैयाँ तथा नेपाली रुपैयाँ र अमेरिकी डलर बीचको अन्तर विनिमय दरमा सामन्जस्य ल्याउन भारतीय रुपैयाँको दाँजोमा रुपैयाँको अवमूल्यन गरी एक भारतीय रुपैयाँको १।३५ बाट रु. १।३६ सटही दर कायम गरियो।

भारतसंगको व्यापार भुक्तानीमा पर्नआएको ऋतुगत चापलाई ध्यानमा राखी २०२६ साल फागुन १२ गते भारतसंग चाहिएको बेलामा भा. रु. १० करोडमा नबढ्ने गरी ऋण लिने विशेष ऋण सम्झौता गरियो। यस सम्झौता अनुसार ऋण उपयोग गरेमा उक्त रकमको वार्षिक ७ प्रतिशत र नगरेको रकममा ०.५० प्रतिशत प्रतिबद्धता शुल्क लाग्ने व्यवस्था थियो।

यस व्यवस्था अन्तर्गत नेपाल राष्ट्र बैंकले रिजर्भ बैंक अफ इण्डिया-संग २०३३ साल असोजसम्ममा पटकपटक गरी जम्मा भा. रु. २८ करोड ऋण लियो। यो सबै रकम २०३३ असोजसम्ममा चुक्ता पनि गरियो। अमेरिकी डलरको विनिमय दर अन्य मुद्राको दाँजोमा घटेकोले २०३४ साल चैत ६ गतेदेखि लागू हुने गरी भारतीय मुद्रासंग नेपाली मुद्राको ४ प्रतिशतले अवमूल्यन गरी एक भारतीय मुद्राको रु. १।४५ कायम गरियो। यो दर अहिले प्रचलनमा छ।

## परिवर्त्य विदेशी विनिमय नियन्त्रण

भारतीय रुपैयाँ बाहेक अन्य विदेशी विनिमय खरीद बिक्री गर्ने कार्य राष्ट्र बैंकले २०१३ सालदेखि नै शुरू गर्‍यो। यी मुद्राहरूको सटही दर श्री ५ को सरकारले भारतमा प्रचलित दरको आधारमा भारतीय मुद्रामा तोकिदिने गरेको थियो। नेपालमा भारतीय मुद्राको सरकारी र बजार दर भिन्न हुनेगरेकोले परिवर्त्य विदेशी मुद्रासंगको सटही दर नेपाली रुपैयाँमा नतोकी भारतीय रुपैयाँमा तोकिने गरिएको थियो। राष्ट्र बैंक आफैंले र नेपाल बैंक मार्फत २०१७ साल जेठ १ गतेदेखि र त्यही वर्षको कात्तिक १ गतेदेखि इजाजत-प्राप्त सराफीहरू मार्फत परिवर्त्य विदेशी मुद्रा नेपाली रुपैयाँमा नै खरीद बिक्री गर्ने कार्य गर्नथाल्यो।

२०१७ साल कात्तिक १ गतेदेखि विदेशी मुद्रा सटही नियन्त्रण ऐन २०१७ अन्तर्गत राष्ट्र बैंकको इजाजतबेगर काठमाडौं उपत्यका-भित्र कसैले पनि विदेशी मुद्रामा कारोबार गर्न नपाउने कानूनी व्यवस्था भएकोले नेपालमा विदेशी विनिमय नियन्त्रणको सूत्रपात यसै मितिदेखि भएको देखिन्छ। सेवा तथा अन्य अदृश्य निर्यातबाट प्राप्तहुने अधिकांश परिवर्त्य विदेशी विनिमय काठमाडौं उपत्यकामा नै आउने भएकोले उपर्युक्त कानूनी व्यवस्थाले ती विनिमयहरू केन्द्रीय श्रोतमा आउने र तिनको व्यवस्थित उपयोग हुनसक्ने भयो। २०१८ साल कात्तिक १५ गतेदेखि उपत्यकाका विदेशी पर्यटकहरू बस्ने केही होटेलहरू र बैंक काउण्टरहरूबाट मात्रै सटही कारोबार हुनसक्ने गरी व्यक्तिगत सराफीहरूद्वारा हुने सटही कारोबारको अन्त्य गरियो।

२०१७ साल भदौ २७ गते भारतसंग व्यापार र पारवहन सन्धि भयो। उक्त सन्धि सोही वर्षको कात्तिक २७ गतेदेखि लागू भयो। यो सन्धि हुनुअघिसम्म नेपालको परिवर्त्य विदेशी मुद्राको आम्दानी भारतको विदेशी विनिमय कोषमा जम्मा हुन्थ्यो र त्यसको कुनै छुट्टै हिसाब रहँदैनथ्यो। नेपाललाई त्यस्तो विनिमयको जरूरत पर्दा भारतले उपलब्ध गराउँदथ्यो। यस व्यवस्थाले साधारण व्यवहारसम्म चलेपनि विदेशी विनिमय संचिति र व्यापारमा आफ्नो नियन्त्रण नभएको स्पष्ट थियो। २०१७ सालको भारत-संगको सन्धि लागू भएपछि नेपालको परिवर्त्य मुद्राको आय नेपाल राष्ट्र बैंकमा जम्मा हुनथाल्यो। सन्धि हुनुअघि पनि नेपालको बढ्दो परिवर्त्य मुद्राको आवश्यकता पूरा गर्न नेपालले वैदेशिक सहायता आदि श्रोतबाट विदेशी विनिमय कोषको स्थापना गरेको

## परिवर्त्य विदेशी विनिमयको आर्जन तथा खर्च*

(रू. करोडमा)

| आर्थिक वर्ष | आर्जन | | | | | | | खर्च | | | खुद नाफा वा घाटा (१–८) |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | जम्मा आर्जन | वस्तु निर्यात | अदृश्य निर्यात (४+५+६) | गोर्खा पेन्सन आदि | पर्यटन | ब्याज | विविध | जम्मा खर्च | आयात | विविध | |
| | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ |
| २०१३।१४ | १.२१ | — | नगण्य | — | — | नगण्य | १.२१ | नगण्य | — | नगण्य | १.२१ |
| २०१४।१५ | ०.३२ | — | ०.०५ | — | — | ०.०५ | ०.२७ | ०.१२ | — | ०.१२ | ०.२० |
| २०१५।१६ | ०.७७ | — | ०.०५ | — | — | ०.०५ | ०.७२ | ०.२७ | — | ०.२७ | ०.५० |
| २०१६।१७ | २.३७ | ०.०३ | ०.०९ | — | नगण्य | ०.०९ | २.२६ | ०.३३ | ०.०४ | ०.२९ | २.०४ |
| २०१७।१८ | २.४५ | ०.४९ | १.५० | १.२९ | ०.०७ | ०.१४ | ०.४५ | १.५० | ०.९२ | ०.५८ | ०.९५ |
| २०१८।१९ | ४.८२ | ०.६९ | २.१९ | १.८५ | ०.०६ | ०.२८ | १.९४ | २.१३ | १.०३ | १.१० | २.६९ |
| २०१९।२० | ५.१३ | ०.२४ | २.८१ | २.४० | ०.०९ | ०.३२ | २.०८ | २.८४ | १.३० | १.५४ | २.२९ |
| २०२०।२१ | ५.१५ | ०.३९ | २.९१ | २.३५ | ०.१५ | ०.४२ | १.८५ | २.५४ | १.३६ | १.१८ | २.६१ |
| २०२१।२२ | ६.३६ | १.०९ | ३.३६ | २.३० | ०.१६ | ०.९० | १.९१ | ३.९८ | २.५५ | १.४३ | २.३८ |
| २०२२।२३ | ८.१९ | २.८२ | ३.३२ | २.१५ | ०.३० | ०.८७ | २.०५ | ४.१६ | १.८५ | २.३१ | ४.०३ |
| २०२३।२४ | ११.६० | ५.७३ | ४.१२ | २.२८ | ०.६० | १.२४ | १.७५ | ७.१५ | ५.११ | २.०४ | ४.४५ |
| २०२४।२५ | २०.८९ | ८.८८ | ६.२७ | ३.८५ | ०.७७ | १.६५ | ५.७४ | ११.३३ | ७.८२ | ३.५१ | ९.५६ |
| २०२५।२६ | २५.६२ | १३.६८ | ७.८६ | ४.४५ | ०.९४ | २.४७ | ४.०८ | ११.६६ | ७.६२ | ४.०४ | १३.९६ |
| २०२६।२७ | २७.४३ | १०.८८ | १०.०४ | ४.६५ | १.३२ | ४.०७ | ६.५१ | १८.९० | १३.४८ | ५.४२ | ८.५३ |
| २०२७।२८ | २७.१३ | १०.४४ | १०.६४ | ४.८८ | १.६६ | ४.०९ | ६.०५ | १७.८६ | ८.६६ | ९.२० | ९.२७ |
| २०२८।२९ | ३२.७८ | ११.८१ | १३.०५ | ६.५७ | २.२० | ४.२८ | ७.९२ | २६.२९ | १२.२३ | १४.०६ | ६.४९ |
| २०२९।३० | ४१.६९ | १६.०५ | १५.३७ | ४.२७ | ५.३२ | ५.७७ | १०.२७ | ३२.४३ | २२.२७ | १०.१६ | ९.२६ |
| २०३०।३१ | ५४.२१ | २०.२३ | २३.६२ | ५.२९ | ९.५३ | ८.८० | १०.३६ | ३७.७२ | २५.८६ | ११.८६ | १६.४९ |
| २०३१।३२ | ५६.४६ | १५.१३ | २९.९१ | ९.०७ | १२.०७ | ८.७७ | ११.४२ | ९०.३३ | ५६.७८ | ३३.५५ | –३३.८७ |
| २०३२।३३ | ८६.०९ | २९.६९ | ३५.४५ | ९.७७ | १८.९९ | ६.६९ | २०.९५ | ६१.३४ | ४३.४५ | १७.८० | २४.७५ |
| २०३३।३४ | १०९.५६ | ३८.५७ | ४४.७९ | १२.५४ | २४.४१ | ७.८३ | २६.२० | ६४.९२ | ५२.१३ | १२.७९ | ४४.६४ |
| २०३४।३५ | १४६.२५ | ५५.७६ | ५७.०५ | १२.०० | ३४.२५ | १०.८० | ३३.४४ | १७२.४७ | ७४.३० | ९८.१७ | –२६.२२ |
| २०३५।३६ | १८४.८२ | ५१.८० | ६४.५५ | १४.६३ | ४०.६८ | ९.२४ | ६८.४७ | १६४.१६ | ९०.९३ | ७३.२३ | २०.६६ |
| २०३६।३७ | २३७.११ | ७१.७८ | ८१.१२ | १५.०३ | ५१.८७ | १४.२२ | ८४.२१ | २४२.१६ | १२१.८१ | १२०.३५ | –५.०५ |

*संशोधित रुपमा (वस्तु निर्यात तथा आयात शीर्षक अन्तर्गत समाशोधन खाता व्यवस्था अन्तरगत वस्तुको कारोबारको तथ्यांक संशोधन गरिएको हुंदा कुल वस्तु निकासी र पैठारीको तथ्यांकमा संशोधन भएको हो)।
श्रोत: नेपाल राष्ट्र बैंक।

# परिवर्त्य विदेशी विनिमयको
# आर्जन तथा खर्च



## राष्ट्र बैंकसंग रहेको वैदेशिक विनिमय जगेडा कोष +

( रु० करोडमा )

| वर्ष | परिवर्त्य* | अपरिवर्त्य | सुन ** | गोल्ड ट्रान्चे | एस. डि. आर. | जम्मा |
|---|---|---|---|---|---|---|
| २०१४ असार | ०.९४ | २.०६ | २.११ | — | — | ५.१४ |
| २०१५ असार | १.१४ | ३.१३ | २.११ | — | — | ६.३८ |
| २०१६ असार | १.८४ | ५.६६ | २.११ | — | — | ९.६१ |
| २०१७ असार | ४.१७ | ८.२२ | १.४० | — | — | १३.७९ |
| २०१८ असार | ५.२२ | ११.९२ | १.४० | — | — | १८.५४ |
| २०१९ असार | ७.६४ | १२.४९ | १.४० | — | — | २१.५३ |
| २०२० असार | १०.३१ | ११.३९ | २.३२ | — | — | २४.०२ |
| २०२१ असार | १४.५२ | १९.३४ | २.३२ | ०.२० | — | ३६.३८ |
| २०२२ असार | १७.८२ | २२.७९ | २.३२ | ०.२० | — | ४३.१३ |
| २०२३ असार | २३.१३ | १०.०१ | २.५० | ०.६८ | — | ३६.३२ |
| २०२४ असार | २८.७३ | ६.३० | २.५० | ०.६८ | — | ३८.२१ |
| २०२५ असार | ४०.२८ | ११.९० | ९.३८ | ०.९० | — | ६२.४६ |
| २०२६ असार | ५२.४१ | १७.४० | ८.२६ | २.४६ | — | ८०.५३ |
| २०२७ असार | ६०.२२ | २१.५१ | ८.२४ | २.४७ | — | ९२.४४ |
| २०२८ असार | ७१.९१ | २२.६२ | ४.९६ | २.७२ | १.०८ | १०३.२९ |
| २०२९ असार | ८३.३२ | १७.८६ | ५.२१ | ३.१७ | २.४३ | १११.९९ |
| २०३० असार | १०४.१७ | १३.०७ | ५.७७ | ३.४३ | २.४३ | १२८.८७ |
| २०३१ असार | ११६.५२ | ८.६६ | ५.७७ | ३.४३ | २.४३ | १३६.८१ |
| २०३२ असार | ९३.१३ | १२.५६ | ५.७७ | ३.४३ | २.४३ | ११७.३२ |
| २०३३ असार | १२५.८४ | १३.९९ | ६.८४ | — | ३.१५ | १४९.८२ |
| २०३४ असार | १६०.२८ | १०.७५ | ६.९८ | — | ३.९२ | १८०.९३ |
| २०३५ असार | १४०.६८ | १७.२९ | ७.३४ | — | १.९९ | १६७.३० |
| २०३६ असार | १६९.३० | ३०.३८ | ७.४७ | ३.८३ | २.९३ | २१३.९१ |
| २०३७ असार | १८६.१६ | १९.५५ | ७.६० | ४.६७ | ४.३५ | २२२.३३ |

\+ संशोधित रूपना ।

* २०३० साउनदेखि परिवर्त्य विदेशी मुद्रा संचितिको मूल्यांकन फ्लोटिंग रेटमा गरिएको छ ।

** सुनको मूल्यांकन २०२८ मंसीरसम्म प्रतिट्राय औंस अमेरिकी डलर ३५।– का दरले, २०२८ पुसदेखि २०२९ पुससम्म अमेरिकी डलर ३८।– का दरले र २०२९ माघदेखि अमेरिकी डलर ४२।२२ का दरले गरिएको छ ।

स्रोत : नेपाल राष्ट्र बैंक

# नेपाल राष्ट्र बैंकसंग रहेको वैदेशिक विनिमय जगेडा कोष



## वाह्य व्यापार तथा शोधनान्तर स्थिति

(रु० करोडमा)

| आर्थिक वर्ष | कुल निकासी | वाह्य व्यापार स्थिति[1] कुल पैठारी | व्यापार संतुलन | खुद सेवा आय | खुद ट्रांसफर आय | खुद वाह्य ऋण तथा विविध पूंजी | शोधनान्तर स्थिति[2] घाटा(–) वा बचत |
|---|---|---|---|---|---|---|---|
| २०१३।१४ | ९.५५ | १६.९९ | –७.४४ | अप्राप्य | अप्राप्य | अप्राप्य | — |
| २०१४।१५ | ७.३३ | १५.८४ | –८.५१ | " | " | " | १.५८ |
| २०१५।१६ | ११.७९ | २२.३४ | –१०.५५ | " | " | " | ३.६४ |
| २०१६।१७ | १३.१७ | २८.७५ | –१५.५८ | " | " | " | ५.७४ |
| २०१७।१८ | २०.९७ | ३९.८० | –१८.८३ | " | " | " | ३.५० |
| २०१८।१९ | २६.५२ | ४४.४४ | –१७.९२ | " | " | " | २.९२ |
| २०१९।२० | २८.७७ | ६०.४० | –३१.६३ | " | " | " | ३.१५ |
| २०२०।२१ | २९.१२ | ६०.४६ | –३१.३४ | " | " | " | ११.३८ |
| २०२१।२२ | ४४.०६ | ८१.८९ | –३७.८३ | " | " | " | ६.८१ |
| २०२२।२३ | ३७.५१ | ७८.२० | –४०.६९ | " | " | " | –८.२१ |
| २०२३।२४ | ४२.६३ | ४९.९३ | –७.३० | " | " | " | ४.११ |
| २०२४।२५ | ३९.३० | ४७.७८ | –८.४८ | " | " | " | २५.२१ |
| २०२५।२६ | ५७.२२ | ७४.७९ | –१७.५७ | " | " | " | २३.३७ |
| २०२६।२७ | ४८.९५ | ८६.४६ | –३७.५१ | " | " | " | ११.२९ |
| २०२७।२८ | ४०.०६ | ६९.९१ | –२९.८५ | " | " | " | ३.५४ |
| २०२८।२९ | ५१.९८ | ८८.८३ | –३६.८५ | " | " | " | १३.६५ |
| २०२९।३० | ६३.१५ | ९८.३८ | –३५.२३ | " | " | " | २०.३९ |
| २०३०।३१ | ६८.५६ | ११६.३२ | –४७.७६ | " | " | " | ६.८५ |
| २०३१।३२ | ८८.९६ | १८१.४६ | –९२.५० | २८.०८ | ५२.३६ | –३०.२१ | –४२.२४ |
| २०३२।३३ | १२०.८७ | २०२.१६ | –८१.२९ | २८.४३ | ५८.८६ | २९.८२ | ३५.८२[3] |
| २०३३।३४ | ११८.९० | २०४.५४ | –८५.६४ | ४९.३२ | ६१.७९ | ५.६१ | ३१.०८ |
| २०३४।३५ | १०६.५२ | २५१.५८ | –१४५.०६ | ५७.१६ | ५८.७५ | ३०.२३ | १.०८[4] |
| २०३५।३६ | १३०.३६ | २९१.२४ | –१६०.८८ | ७७.८६ | ८६.९५ | ५४.४१ | ५८.३४ |
| २०३६।३७ | ११४.०८ | ३५३.२० | –२३९.१२ | १०९.९४ | ११६.०३ | १२.७९ | २.६४ |

१। भंसार तथ्यांकमा आधारित ।
२। बैंकिंग व्यवस्थाको खुद वैदेशिक सम्पत्तिमा परिवर्तन भए अनुसार ।
३। २०३२ असोज २३ गतेको विनिमय मूल्यांकन नाफा रु० १८.७७ करोड कट्टा गरी ।
४। २०३४ चैत ६ गतेको विनिमय मूल्यांकन घाटा रु ७.७७ करोड समायोजन गरी ।
श्रोत : केन्द्रीय तथ्यांक विभाग तथा नेपाल राष्ट्र बैंक ।

# वाह्य व्यापार तथा शोधनान्तर स्थिति



## भारतसंगको व्यापार तथा शोधनान्तर स्थिति

( रु० करोडमा )

| आर्थिक वर्ष | व्यापार स्थिति[1] कुल निकासी | कुल पैठारी | व्यापार सन्तुलन | खुद सेवा आय | खुद ट्रान्सफर आय | खुद बाह्य ऋण तथा विविध पूंजी | शोधनान्तर स्थिति[2] घाटा(–) वा बचत |
|---|---|---|---|---|---|---|---|
| २०१३।१४ | अप्राप्य | १६.५८ | — | अप्राप्य | अप्राप्य | अप्राप्य | — |
| २०१४।१५ | ,, | १५.०३ | — | ,, | ,, | ,, | १.०४ |
| २०१५।१६ | ,, | २१.८२ | — | ,, | ,, | ,, | २.५३ |
| २०१६।१७ | ,, | २६.६६ | — | ,, | ,, | ,, | २.५६ |
| २०१७।१८ | ,, | ३७.५१ | — | ,, | ,, | ,, | ३.७० |
| २०१८।१९ | ,, | अप्राप्य | — | ,, | ,, | ,, | –०.५७ |
| २०१९।२० | ,, | ,, | — | ,, | ,, | ,, | –१.१० |
| २०२०।२१ | २८.४४ | ५९.५६ | –३१.१२ | ,, | ,, | ,, | ७.६५ |
| २०२१।२२ | ४३.३२ | ८०.६४ | –३७.३२ | ,, | ,, | ,, | ३.४५ |
| २०२२।२३ | ३६.१७ | ७६.३५ | –४०.१८ | ,, | ,, | ,, | –१२.६१ |
| २०२३।२४ | ४१.७० | ४६.५१ | –४.८१ | ,, | ,, | ,, | –२.२० |
| २०२४।२५ | ३७.३४ | ४४.११ | –६.७७ | ,, | ,, | ,, | ६.८८ |
| २०२५।२६ | ५३.९५ | ६९.७३ | –१५.७८ | ,, | ,, | ,, | ८.६७ |
| २०२६।२७ | ४६.३६ | ७९.१३ | –३२.७७ | ,, | ,, | ,, | ३.०२ |
| २०२७।२८ | ३२.८३ | ६१.६८ | –२८.८५ | ,, | ,, | ,, | –०.२९ |
| २०२८।२९ | ३३.३८ | ८०.८७ | –४७.४९ | ,, | ,, | ,, | –२.२५ |
| २०२९।३० | ४९.६४ | ८७.२० | –३७.५६ | ,, | ,, | ,, | –३.५५ |
| २०३०।३१ | ५१.३३ | ९७.६८ | –४६.३५ | ,, | ,, | ,, | –६.२९ |
| २०३१।३२ | ७४.६७ | १४७.५७ | –७२.९० | १०.०२ | ३५.८१ | ४.९८ | –२२.०६ |
| २०३२।३३ | ९१.०६ | १२६.७१ | –३५.६५ | ११.०३ | २९.९९ | ६.६६ | १२.०३ |
| २०३३।३४ | ८०.१३ | १३८.०८ | –५७.९५ | २०.७१ | ३९.४६ | –५.७१ | –३.४९ |
| २०३४।३५ | ५१.७१ | १५७.९६ | –१०६.२५ | १९.७९ | २८.०४ | –१०.९० | –६९.३२ |
| २०३५।३६ | ६५.९९ | १६०.९३ | –९५.२४ | ३१.८८ | ३८.८७ | –५.०१ | –२९.६० |
| २०३६।३७ | ५१.१४ | १८२.४४ | –१३१.३० | ३३.१० | ४७.४५ | –६२.६८ | –११३.४३ |

१ भंसार तथ्यांकमा आधारित ।

२। बैंकिङ व्यवस्थाको भारतीय रुपैयाको संचितिमा परिवर्तन । यसमा भारतसंग स्ट्याण्डबाई ऋण व्यवस्था अन्तर्गत भारतीय रुपैया ऋण लिएको तथा परिवर्त्य विदेशी मुद्रा बेची भारतीय रुपैया खरीद गरिएको रकम कट्टा गरिएको ।

श्रोत : केन्द्रीय तथ्यांक विभाग तथा नेपाल राष्ट्र बैंक ।

## भारत बाहेक अन्य मुलुकसंगको व्यापार तथा शोधनान्तर स्थिति

( रु० करोडमा )

| आर्थिक वर्ष | बाह्य व्यापार स्थिति[1] कुल निकासी | कुल पैठारी | व्यापार सन्तुलन | खुद सेवा आय | खुद ट्रान्सफर आय | खुद बाह्य ऋण तथा विविध पूंजी | शोधनान्तर स्थिति[2] घाटा(–) वा बचत |
|---|---|---|---|---|---|---|---|
| २०१३।१४ | अप्राप्य | ०.४१ | — | अप्राप्य | अप्राप्य | अप्राप्य | — |
| २०१४।१५ | ,, | ०.८१ | — | ,, | ,, | ,, | ०.५४ |
| २०१५।१६ | ,, | ०.५२ | — | ,, | ,, | ,, | १.११ |
| २०१६।१७ | ,, | १.७६ | — | ,, | ,, | ,, | ३.१८ |
| २०१७।१८ | ,, | २.२९ | — | ,, | ,, | ,, | –०.२० |
| २०१८।१९ | ,, | अप्राप्य | — | ,, | ,, | ,, | ३.४९ |
| २०१९।२० | ,, | ,, | — | ,, | ,, | ,, | ४.२५ |
| २०२०।२१ | ०.६८ | ०.९० | –०.२२ | ,, | ,, | ,, | ३.४३ |
| २०२१।२२ | ०.७४ | १.२५ | –०.५१ | ,, | ,, | ,, | ३.३६ |
| २०२२।२३ | १.३४ | १.८५ | –०.५१ | ,, | ,, | ,, | ४.४० |
| २०२३।२४ | ०.९३ | १.६२ | –०.६९ | ,, | ,, | ,, | ६.३१ |
| २०२४।२५ | १.९६ | ३.६७ | –१.७१ | ,, | ,, | ,, | १८.३३ |
| २०२५।२६ | ३.२७ | ५.०६ | –१.७९ | ,, | ,, | ,, | १४.७० |
| २०२६।२७ | २.५९ | ७.३३ | –४.७४ | ,, | ,, | ,, | ८.२७ |
| २०२७।२८ | ७.२३ | ८.२३ | –१.०० | ,, | ,, | ,, | ३.८३ |
| २०२८।२९ | १८.६० | ७.९६ | १०.६४ | ,, | ,, | ,, | १५.९० |
| २०२९।३० | १३.५१ | ११.१८ | २.३३ | ,, | ,, | ,, | २३.९४ |
| २०३०।३१ | १७.२३ | १८.६४ | –१.४१ | ,, | ,, | ,, | १३.१४ |
| २०३१।३२ | १४.२९ | ३३.८९ | –१९.६० | १८.०६ | १६.५८ | –३५.१९ | –२०.१५ |
| २०३२।३३ | २९.८१ | ७५.४५ | –४५.६४ | १७.४० | २८.८७ | २३.१६ | २३.७९ |
| २०३३।३४ | ३८.७७ | ६६.४६ | –२७.६९ | २८.६१ | २२.३३ | ११.३२ | ३४.५७ |
| २०३४।३५ | ४४.८१ | ८३.६२ | –३८.८१ | ३७.३७ | ३०.७१ | ४१.१३ | ७०.४० |
| २७३५।३६ | ६४.६७ | १३०.३१ | –६५.६४ | ४५.९८ | ४८.१८ | ५९.४२ | ८७.६४ |
| २०३६।३७ | ६२.९४ | १७०.७६ | –१०७.८२ | ७६.८४ | ७१.५८ | ७५.४७ | ११६.०७ |

१। भंसार तथ्यांकमा आधारित ।

२। बैंकिग व्यवस्थाको खुद परिवर्त्य विदेशी विनिमय संचितिमा परिवर्तन ।

श्रोत : केन्द्रीय तथ्यांक विभाग तथा नेपाल राष्ट्र बैंक ।

## वैदेशिक व्यापार : वस्तु समूह अनुसार

(रु० करोड़मा)

| आर्थिक वर्ष | निकासी<br>खाद्य तथा कच्चा पदार्थ | निकासी<br>तैयारी औद्योगिक वस्तुहरू | पैठारी<br>खाद्य तथा कच्चा पदार्थ | पैठारी<br>तैयारी औद्योगिक वस्तुहरू |
|---|---|---|---|---|
| २०१३।१४ | ६.०५ | ०.३० | ७.६० | ८.६८ |
| २०१४।१५ | ६.७९ | ०.३२ | ७.२४ | ८.१४ |
| २०१५।१६ | ११.४६ | ०.२७ | ८.७७ | १३.०१ |
| २०१६।१७ | १२.७१ | ०.४१ | १२.०७ | १५.०५ |
| २०१७।१८ | २०.४६ | ०.४२ | १२.५६ | २६.१० |
| २०१८।१९ | २२.६८ | ३.७९ | १६.५६ | २७.५४ |
| २०१९।२० | २३.५९ | ५.१४ | २१.१८ | ३९.१६ |
| २०२०।२१ | २५.९१ | ३.२० | २३.५० | ३६.८९ |
| २०२१।२२ | ३७.६१ | ६.४२ | ३१.५६ | ५०.२५ |
| २०२२।२३ | ३०.१३ | ७.३४ | ३०.३८ | ४७.६८ |
| २०२३।२४ | ३६.५७ | ६.०५ | २४.११ | २३.९६ |
| २०२४।२५ | ३०.६९ | ८.५७ | १८.०१ | २९.६७ |
| २०२५।२६ | ४२.३० | १४.८८ | २३.६१ | ५१.१० |
| २०२६।२७ | ४१.९२ | ७.०१ | ३१.०५ | ५५.३५ |
| २०२७।२८ | ३४.५३ | ५.४९ | २४.१६ | ४५.६० |
| २०२८।२९ | ४३.८५ | ८.११ | ३३.०९ | ५५.४१ |
| २०२९।३० | ५३.८७ | ९.२७ | ३६.०८ | ६१.९० |
| २०३०।३१ | ५८.९६ | ९.५९ | ४१.९४ | ७४.३६ |
| २०३१।३२ | ७३.२७ | ९.१९ | ५०.८५ | ११६.४२ |
| २०३२।३३ | १०३.६० | १४.२५ | ६३.३९ | १३२.५२ |
| २०३३।३४ | ९९.०१ | १६.९१ | ५५.४८ | १४१.४७ |
| २०३४।३५ | ८५.७९ | १८.६७ | ६७.०७ | १७८.९० |
| २०३५।३६ | ९९.४८ | ३०.१६ | ६२.१५ | २२५.४३ |
| २०३६।३७ | ७६.५७ | ३७.०६ | ६१ ०४ | २५८.८६ |

स्रोत : केन्द्रीय तथ्यांक विभाग तथा
नेपाल राष्ट्र बैंक

थियो। सन्धि लागू भएपछि नेपालको निर्यात व्यापारबाट प्राप्त हुने विदेशी मुद्रा पनि राष्ट्र बैंकमा दाखिला हुनथालेकोले वर्षेपिच्छे ती मुद्राहरूको खर्च बढ्दै गए तापनि सञ्चितिमा पनि उल्लेखनीय वृद्धि हुँदैगयो। २०१७ साल पुसमा रु. ३ करोड ८६ लाख बराबरको परिवर्त्य मुद्रा मौज्दात भएकोमा २०१८ पुसमा रु. ६ करोड ६८ लाख पुग्नगयो।

२०१८ साल बैशाख १४ गते नेपालको परिवर्त्य विदेशी मुद्राको आर्जन बढाउन र खर्चलाई नियन्त्रित र व्यवस्थित गर्न तथा वैदेशिक विनिमय बजेटको तर्जुमा गर्न नेपाल राष्ट्र बैंकको गभर्नरको अध्यक्षतामा अर्थ, परराष्ट्र र उद्योग वाणिज्य मन्त्रालयहरूका सचिवहरू सदस्य भएको एक विदेशी मुद्रा सम्बन्धी स्थायी समिति गठन गरियो। नेपालको विदेशी विनिमयको आय, व्यय, संचिति आदिको सूक्ष्म निगरानी गरी त्यसको यथोचित व्यवस्थापन मिलाउने कार्य नेपाल राष्ट्र बैंकले शुरुदेखि नै गरिआएको छ र यसमा नीतिगत परिवर्तनहरू गर्नुपरेमा समयसमयमा श्री ५ को सरकार-लाई सुझाव दिने गरिआएको छ।

समुद्रपार व्यापार बढाउँदै लैजाने र अन्तर्राष्ट्रीय मुद्राहरूसंग सम्बन्ध बढाउँदै लाने उद्देश्यले २०१७ साल जेठ १ गतेदेखि डलर, पाउण्ड र स्वीस फ्रान्कसंग, चैत १ गतेदेखि बर्माको क्याट्ससंग र २०१८ साउनदेखि जापानीज येनसंग नेपाली रुपैयाँमा विनिमय दर तोकियो।

विदेशी विनिमय (नियन्त्रण) ऐन २०१७ लाई खारेज गरी २०१९ भदौ १ गतेदेखि विदेशी विनिमय नियमित गर्ने ऐन २०१९ लागू गरियो। आन्तरिक प्रचलनको निमित्त विदेशी मुद्राको प्रयोग हुन नदिनु र नेपाली मुद्राको प्रचलन बढाउनु यो ऐनको मुख्य उद्देश्य भएको पाइन्छ। सर्वप्रथम यो ऐन अधिराज्यका ३६ व्यापारिक केन्द्रहरूमा लागू गरियो। यो ऐन लागू भएका ठाउँहरूमा निक्षेप लिने, कर्जा लिने दिने र एकठाउँबाट अर्को ठाउँमा रकम पठाउने काममा वाणिज्य बैंकहरूले पनि विदेशी मुद्राको प्रयोग गर्न नपाउने भए। यस ऐन अन्तर्गत बनेको विदेशी विनिमय नियमित गर्ने नियमहरू २०२० अन्तर्गत त्यसमा तोकिएका कतिपय प्रयोजनहरूको निमित्त विदेशी विनिमय उपलब्ध गराउन सक्ने अधिकार राष्ट्र बैंकलाई प्राप्तभयो।

**बोनस प्रथा**

आर्थिक विकासका लागि विस्तृत कार्यक्रमहरू संचालन गर्न आवश्यक पर्ने कतिपय पूँजीगत सामानहरू भारतबाट उपलब्ध हुन नसक्ने हुँदा त्यस्ता पूँजीगत वस्तुहरू समुद्रपारका मुलुकहरूबाट आयात गर्नुपर्ने देखियो। यस्तो आयातको लागि परिवर्त्य मुद्राको मागमा वृद्धि हुने स्पष्ट थियो। निर्यातलाई तेस्रो मुलुकमा बढी प्रोत्साहित गरी बढी परिवर्त्य मुद्रा आर्जन गर्न २०१८ साल माघ २३ गतेदेखि श्री ५ को सरकारले निर्यात बोनसप्रथा लागू गर्‍यो। यस अन्तर्गत निकासीकर्ताले आर्जन गरेको परिवर्त्य विदेशी मुद्राको केही अंश आयात गर्नको लागि पाउने व्यवस्था भयो। बोनसको दर निकासी हुने वस्तु अनुसार तोकिन्थ्यो। समय समयमा वस्तुहरूको सूची तथा बोनस दरमा परिवर्तन भइरहन्थ्यो।

बोनस प्रथाले देशको वैदेशिक व्यापारमा अनेकता ल्याउने उद्देश्य अनुरूप प्रगति गरे पनि यस्तो अनेकता केवल देशगतमात्र भयो। वस्तुगत अनेकता अपेक्षित रूपमा आउन सकेन। यसले परिवर्त्य विदेशी विनिमय संचितिमा वृद्धि त ल्यायो तर नेपालको भारतीय मुद्रा संचितिमा पर्ने चाप भने यथावत रह्यो। निर्यात हुने वस्तुहरूको उत्पादनतर्फ लगानी बढ्न सकेन। निर्यातकर्ताले पाउने लाभ बजारमा पाइने बोनसको प्रिमियम दरमा निर्भर रहने भएकोले अस्थिर स्थिति रहिने रह्यो। विदेशी व्यापारमा केही विकृतिहरू पनि देखिन थाले।

**द्वय विनिमय दर व्यवस्था**

भारत बाहेक अन्य मुलुकहरूमा हुने निर्यातलाई स्थायी र निश्चित प्रोत्साहन दिनका लागि, देशको आयतालाई बढी सुलभ पार्न र अर्थव्यवस्थामा देखिएका विकृतिहरूलाई हटाई आर्थिक लगानीको अनोटलाई बढी उपयोगी बनाउने उद्देश्यले श्री ५ को सरकारकाले २०३४ चैत १८ गतेदेखि निर्यात बोनस प्रणालीलाई खारेज गरी द्वय विनिमय व्यवस्था कायम गर्‍यो। यस व्यवस्था अन्तर्गत एक अमेरिकी डलरको मूल दरमा रु. १२ र दोश्रो दरमा रु. १६ समदर निश्चित गरियो। अन्य परिवर्त्य विदेशी मुद्राको विनिमय दर पनि डलरको दरलाई आधार मानी मूल दर र दोश्रो दर निश्चित गरिने भयो। निकासीकर्ताहरूले निर्यात आर्जनको रकममा, भाडा-भरोट र बीमाको रकम कटाई बाँकी रकम दोश्रो दरमा पाउने भए र केही तोकिएका वस्तुहरू बाहेक अन्य सबैको आयात दोश्रो दरमा गर्नुपर्ने भयो। आयात नीतिलाई खुकुलो पारियो। यस नीतिको फलस्वरूप तेश्रो देशबाट हुने आयातमा तीव्र वृद्धि भयो तर कुल निर्यातमा भने उत्साहवर्द्धक सुधार हुनसकेन। कुनैकुनै वस्तुहरूको निर्यातमा अप्राकृतिक वृद्धि देखिन थाल्यो र देशको निर्यात कारोबारमा विकृति आएको अनुभव हुनगई मूल दर र दोश्रो दरको अन्तरलाई घटाउनु पर्ने आवश्यकता महसूस गरिएकोले २०३६ फागुन ६ गते श्री ५ को सरकारले एक अमेरिकी डलरको दोश्रो दरलाई रु. १६ बाट घटाई रु. १४ कायम गर्‍यो र पेट्रोलियम पदार्थ, रासायनिक मल र सिमेण्ट बाहेक कुनै पनि वस्तु मूल दरमा झिकाउन नपाउने निर्णय गरियो। विदेशी विनिमयको बजेट बनाउने परम्परा पनि बन्द गरियो।

द्वितीय विश्व युद्धपछि अन्तर्राष्ट्रिय मुद्रा कोषको स्थापना र यसले विश्वका मुद्राहरूको विनिमय दरमा ल्याएको निश्चितता विश्वकै लागि एक ठूलो उपलब्धि थियो। सन् १९७० को दशकको शुरूमा नै भएको अमेरिकी डलरको १० प्रतिशत अवमूल्यन र अमेरिकी डलरको सुनसंगको परिवर्त्यता हटाउने अमेरिकी राष्ट्रपति निक्सनको घोषणाले विश्व मौद्रिक जगतमा अभूतपूर्व स्थिति ल्यायो। पौण्ड, स्वीस फ्रेंक, जापानीज येन, डि. एम., फ्रेन्च फ्रेंक जस्ता विश्वका प्रमुख मुद्राहरू निश्चित विनिमय दर कायम हुन नसकी खुल्ला बजारमा प्रवाहित हुनथाले र माग र आपूर्तिको आधारमा अटही दर निर्धारण हुनथाल्यो। यसले गर्दा वैदेशिक व्यापारबाट हुने आर्जन र अन्तर्राष्ट्रिय संचितिको के रूप हुनेहो भन्ने कुरा अनिश्चित रहने भयो। यस स्थितिमा आफ्नो खुद वैदेशिक सम्पत्तिलाई र वैदेशिक व्यापारमा प्रतिकूल असर नपर्ने गरी विनिमय दर कायम राख्ने जस्तो चुनौतिपूर्ण कार्य नेपाल राष्ट्र बैंकमाथि पर्नआयो।

भारतीय मुद्राको विनिमय दर अन्तर्राष्ट्रिय मुद्रा बजारमा स्थिर रहेको कारणले नेपालले पनि भारतीय मुद्रासंगको विनिमय दर स्थिर राख्यो। आफ्नो वैदेशिक व्यापार, अन्तर्राष्ट्रिय मुद्रा संचिति, शोधनान्तर स्थिति आदिको आधारमा नेपालले विश्वको प्रमुख र बलियो मानिएको अमेरिकी डलरसंग नेपाली रूपैयांको विनिमय दर बांध्यो। भारतीय मुद्रा र अमेरिकी डलर बाहेक विश्वका अन्य मुद्राहरूसंगको विनिमय दर अन्तर्राष्ट्रिय परिस्थितिले ल्याएको मुद्रा बजारको स्थिति अनुरूप दैनिक रूपमा निश्चित गरिने भयो।

अन्तर्राष्ट्रिय मुद्रा बजारमा पाउण्ड स्टर्लिङको भाउमा आएको तीव्र ह्रासको प्रतिकूल प्रभावलाई रोक्न श्री ५ को सरकारले असार २०, २०२९ देखि दैनिक आधारमा पाउण्ड स्टर्लिङको विनिमय दर नेपाल राष्ट्र बैंक मार्फत निर्धारण गरी विनिमय कारोबार चलाउने निर्णय गर्‍यो। उक्त मितिपछि पनि पाउण्ड स्टर्लिङ विनिमय दरमा देखिएको ह्रासको क्रम रोकिएन। नेपाली रूपैयांको विनिमय दर अमेरिकी डलर तथा भारतीय रूपैयासंग स्थिर राखिएको तर भारतले भारतीय रूपैयांको विनिमय दर पाउण्ड स्टर्लिङसंग स्थिर राखेको र पाउण्ड स्टर्लिङसंगको विनिमय दरमा ह्रास हुँदै गएकोले नेपाली रूपैयां—भारतीय रूपैयां—डलर—पाउण्ड स्टर्लिङ बीचको अन्तर दरमा भिन्नता बढ्दै गयो। पाउण्ड स्टर्लिङको विनिमय दरमा तीव्र ह्रास आउन थालेकोले भारतले असोज ८, २०३२ मा आफ्नो मुद्राको विनिमय दर पाउण्ड स्टर्लिङबाट विच्छेद गरी केही प्रमुख देशका मुद्रा समूहको भारित संयुक्त दरसंग निर्धारण गर्ने घोषणा गर्‍यो। यस निर्णयले उत्पन्न भएको अन्तर दरको भिन्नता हटाउन श्री ५ को सरकारले नेपाली रूपैयां र अमेरिकी डलरको प्रचलित केन्द्रीय दर रु. १०.५६ प्रति डलरबाट रु. १२.५० प्रति डलर कायम गरी असोज २३, २०३२ देखि नयां विनिमय दर लागू गर्‍यो।

भारतीय रूपैयां र अमेरिकी डलर बाहेक अन्य मुख्य मुद्राहरूको विनिमय दर अन्तर्राष्ट्रिय मुद्रा बजारको प्रचलित विनिमय दरहरूको आधारमा दिनदिनै निर्धारण गर्ने गरिएको छ। अमेरिकी डलरको रूपैयांसंगको विनिमय दर २०३४ चैत ६ गतेदेखि परिवर्तन गरी प्रति १ अमेरिकी डलरको खरीद र बिक्री दर क्रमशः रु. ११।९० र रु. १२।१० कायम गरियो। भारतीय रूपैयां र अमेरिकी डलर बाहेक आर्थिक वर्ष २०३४।३५ देखि स्टर्लिङ पाउण्ड, क्यानेडियन डलर, अष्ट्रेलियन डलर, पश्चिम जर्मन मार्क, स्वीस फ्राङ्क, जापानीज येन, स्वेडिस क्रोनर, अष्ट्रियन सिलिङ्ग र इटालियन लिरा समेत बाह्र देशका मुद्राको विनिमय दर दैनिक रूपमा निर्धारण गरिने व्यवस्था भयो। आर्थिक वर्ष २०३६।३७ देखि सिंगापुर डलर समेतको दैनिक दर निर्धारण गर्ने व्यवस्था भयो।

## बाह्य व्यापार तथा शोधनान्तर स्थिति

राष्ट्र बैंकले आर्थिक वर्ष २०३१।३२ देखि देशको शोधनान्तर सम्बन्धी विस्तृत तथ्यांक संकलन गर्न शुरू गर्‍यो। यसअघि बाह्य व्यापार स्थितिको तथ्यांक मात्र संकलन गरिन्थ्यो। सेवा तथा ट्रान्सफर शीर्षक अन्तर्गतका केही आर्जन तथा खर्चहरूको लेखा गरिने गरिएको भए तापनि शोधनान्तरको लागि चाहिने सबै शीर्षक-हरू समावेश नहुनु, शीर्षकगत आम्दानी खर्च नछुट्टिई खुद आय-व्यय मात्रै लिनु, उपलब्ध तथ्यांकहरू पनि अपूरो हुनु आदि कारण-हरूले गर्दा आर्थिक वर्ष २०३०।३१ सम्मको शोधनान्तर स्थितिको विस्तृत विवरण प्राप्य थिएन।

बैंकिङ व्यवस्थाको खुद सम्पत्तिको हेरफेरको आधारमा शोधनान्तर स्थितिको लेखाजोखा गर्दा आर्थिक वर्ष २०१४।१५ देखि आर्थिक वर्ष २०३६।३७ सम्मको २२ वर्षको अवधिमा भएको शोधनान्तर स्थितिमा निम्न विशेषताहरू रहेको पाइन्छ।

(क) आर्थिक वर्ष २०२२।२३ तथा आर्थिक वर्ष २०३१।३२ लाई छाडेर यस अवधिमा सम्पूर्ण शोधनान्तर स्थिति नेपालको पक्षमा थियो।

(ख) यस अवधिमा प्रत्येकवर्ष देशको वैदेशिक व्यापार घाटामा रहेको थियो। कुल निकासीमा साधारणतया वृद्धि हुँदैगएको भए तापनि पैठारीतर्फको वृद्धि बढी भै व्यापार घाटा साधारणतया बढ्दै गएको थियो। आर्थिक वर्ष २०१३।१४ को तुलनामा आर्थिक वर्ष २०३६।३७ मा कुल निकासीमा रु. १०४.५ करोडले वृद्धि भयो भने कुल पैठारी भने रु. ३३६.२ करोडले बढ्यो।

(ग) व्यापार घाटा भए तापनि शोधनान्तर स्थिति हरेक वर्ष नेपालको पक्षमा हुनुको प्रमुख कारण सेवा तथा ट्रान्सफर शीर्षक अन्तर्गत भएको खूद आर्जन नै थियो। सेवा शीर्षक अन्तर्गत प्राप्त आर्जनमा पर्यटन श्रोतबाट हुने आम्दानीले प्रमुख स्थान ओगटेको छ। यसबाहेक वैदेशिक लगानीबाट प्राप्त हुने आय र देशमा भएका वैदेशिक नियोगहरूको खर्च यस शीर्षक अन्तर्गत आय बढाउने अन्य महत्वपूर्ण श्रोतहरू हुन्। ट्रान्सफर शीर्षक अन्तर्गत आय वृद्धि गराउने प्रमुख कारक द्विपक्षीय तथा बहु-पक्षीय संझौता अन्तर्गत प्राप्त हुने वैदेशिक अनुदान नै हो। वैदेशिक अनुदानपछि निजी क्षेत्रको ट्रान्सफरको दोश्रो स्थान छ। बृटिश तथा भारतीय सेनामा तथा संयुक्त राष्ट्र संघ शान्ति सेना मा काम गरेका नेपाली जवानहरूद्वारा नेपाल पठाउने रकमले निजी क्षेत्रको ट्रान्सफरको ठूलो अंश ओगटेको पाइन्छ।

(घ) यस अवधिमा शोधनान्तर बचत गराउने अर्को प्रमुख कारक वैदेशिक ऋण तथा निजी क्षेत्रको पूंजीको बहाव पनि थियो।

विश्लेषण गरिएको २२ वर्ष (२०१४।१५-२०३६।३७) को अवधिमा दुईवर्ष छाडी सम्पूर्ण शोधनान्तर स्थिति नेपालको पक्षमा रहेको भए तापनि यस अवधिमा भारतसंगको शोधननान्तर स्थिति भने कहिले पनि उत्साहवर्द्धक रहेन। भारतसंगको शोधनान्तर स्थिति अधिकांश वर्षहरूमा प्रतिकूल नै रहेको देखिन्छ। भारतसंगको शोधनान्तर स्थिति अनुकूल भएको वर्षहरूमा पनि शोधनान्तर बचतको रकम रु. ६ करोडभन्दा कमै थियो। आर्थिक वर्ष २०३२।३३ लाई छाडेर आर्थिक वर्ष २०२७।२८ देखि २०३६।३७ सम्म भारतसंगको शोधनान्तर स्थिति सदैव नेपालको विपक्षमा नै रह्यो। आर्थिक वर्ष २०३६।३७ मा भारतसंगको शोधनान्तर स्थिति १.१३ अरबले देशको विपक्षमा रह्यो। यसको प्रमुख कारण उक्त मुलुकबाट हुने पैठारीमा भएको ठूलो वृद्धि नै थियो।

यसप्रकार भारत बाहेक अन्य मुलुकहरूसंगको अनुकूल शोधनान्तर स्थिति नै देशको सम्पूर्ण शोधनान्तर स्थिति अनुकूल पार्ने कारण थियो। विश्लेषण अवधि (२०१४।१५–२०३६) मा आर्थिक वर्ष २०१७।१८ तथा आर्थिक वर्ष २०३१।३२ लाई छाडेर यी मुलुकहरूसंग सदैव शोधनान्तर बचत रह्यो। आर्थिक वर्ष २०३६।३७ मा यी मुलुकहरूसंगको शोधनान्तर स्थिति १.१६ अरबले देशको पक्षमा रहेको थियो। साधारणतः हरेकवर्ष व्यापार घाटा भए तापनि सेवा तथा ट्रान्सफर शीर्षक अन्तर्गत हुने खूद आर्जन तथा खूद बाह्य ऋणको रकममा भएको ठूलो वृद्धि नै शोधनान्तर स्थिति अनुकूल बनाउने मुख्य कारणहरू थिए।

आर्थिक वर्ष २०२७।२८ देखि भारतसंगको बढ्दो प्रतिकूल शोधनान्तर स्थितिबाट भारतीय रुपैयांको संचितिमा चाप पर्नगै राष्ट्र बैंकसंग रहेको भारतीय रुपैयांको संचितिमा आर्थिक वर्ष २०२८।२९ देखि उल्लेखनीय ह्रास हुन थालेकोले २०२९ फागुन १२ गते भारतसंग चाहिएको बेलामा भा. रु. १० करोड सम्म ऋण लिने अनेडा ऋण संझौता गरियो। यो संझौता अन्तर्गत आर्थिक वर्ष २०३३।३४ सम्म नेपालले पटक पटक गरी प्राप्त गरेको भा. रु. २८ करोडको ऋणले भारतीय रुपैयांको न्यूनतम चापलाई कम गर्न सघाउ पुर्‍यायो।

आर्थिक वर्ष २०२७।२८ देखि भारतबाट हुने कुल आयात तीव्र रूपबाट वृद्धिभै उक्त मुलुकसंगको शोधनान्तर घाटा सदैव देशको विपक्षमा भएबाट अनेडा ऋण संझौता अन्तर्गत प्राप्त हुने ऋणबाट भारतीय रुपैयांको मागको आपूर्ति समस्या हल नहुने देखिएकोले भारतसंगको ऋण संझौता व्यवस्थाको अन्त गरी आफ्नो विदेशी मुद्राको संचितिको उपयोगद्वारा भारतसंगको घाटा पूर्तिगर्ने व्यवस्था गरियो।

# ४ नेपालमा बैंक तथा वित्तीय संस्थाहरुको विकास

नेपाल बैंक लिमिटेड स्थापना हुनुभन्दा सर्वसाधारणबाट बचत स्वीकार गर्ने कुनै संगठित संस्थाको विकास हुन नसकेको हुँदा जनताले आफ्नो बचत सुन-चाँदी, घर घडेरीको रूपमा राख्ने गर्दथे। कर्जा लिने कुरामा सबैले साहूकार कै भर पर्नुपर्दथ्यो र ब्याजदर पनि निकै चर्को तिर्नुपर्दथ्यो। सहुलियत दरमा कर्जा प्रदान गर्ने उद्देश्यले रणोद्दीपको प्रधानमन्त्रित्वकालमा काठमाडौं उपत्यकाका जनतालाई सुन, चाँदी तथा गहनाहरूको धितोमा वार्षिक ५ प्रतिशत ब्याजदरमा ऋण प्रदान गर्ने "तेजारथ" भन्ने अड्डा खुलेको थियो। यस अड्डाबाट सरकारी कर्मचारीहरूले पनि तलबबाट कट्टा हुनेगरी ऋण पाउनसक्ने व्यवस्था थियो। तेजारथ अड्डालाई तराई क्षेत्रहरूमा विस्तार गरी यहांका बासिन्दाहरूलाई पनि कर्जा उपलब्ध गराउने व्यवस्था गरिएको थियो।

### नेपाल बैंकको स्थापना

नेपालमा संगठित रूपमा बैंकिंग विकासको शुरुवात विक्रम सम्वत्को बीसौं शताब्दीको अन्त्यतिर आएर मात्र भयो। १९९४ सालमा अधिकृत पूंजी रु. १ करोड र रु. ८ लाख ४२ हजारको चुक्ता पूंजीबाट स्थापना भएको नेपाल बैंक लिमिटेड नै यस प्रक्रियाको पहिलो थालनी थियो। शुरुमा नेपाल बैंक लिमिटेडको कर्जाहरू मुख्यतया व्यापारिक प्रयोजनहरूमा प्रवाहित थिए। नेपाल बैंक लिमिटेडको शाखा २०१३ सालसम्म १२ थियो र यसको कुल निक्षेप रु. ३ करोड ५० लाख थियो। यस बेलासम्म उक्त बैंकको चुक्ता पूंजी रु. २५ लाख र जगेडा कोष करीब रु. ३० लाख पुगेको थियो।

### नेपाल राष्ट्र बैंकको स्थापनापछि

नेपाल बैंक स्थापना भएको धेरै वर्षपछिसम्म पनि नेपालमा बैंक तथा वित्तीय संस्थाहरूको विकासका लागि खास प्रयत्न भएको थिएन। २०१३ सालमा नेपाल राष्ट्र बैंकको स्थापना भएपछि यस क्षेत्रको विकासमा क्रमिक सुधारहरू देखापर्न थाले। नेपाल राष्ट्र बैंकको स्थापना एक राष्ट्रिय आवश्यकताको रूपमा भएको थियो र यसै समयदेखि नै नेपालमा आर्थिक विकासको प्रक्रियाले नयां कोल्टे फेर्नथालेको थियो। २०१३ सालदेखि नै नेपालमा योजनाबद्ध विकासको प्रक्रिया शुरुभयो र योजनालाई सघाउ पुर्‍याउने खालका वित्तीय एकाईहरूको स्थापनाको परिकल्पनाको शुरुवात पनि यसैताकादेखि हुनथाल्यो।

### विकास बैंकहरूको स्थापना

रु. १ करोडको अधिकृत पूंजी र रु. ६८ लाखको चुक्ता पूंजीबाट २०१६ मा स्थापना भएको नेपाल औद्योगिक विकास कर्पोरेशनबाट देशमा औद्योगिक वातावरणको सिर्जना गर्नमा ठूलो मद्दत पुग्यो भने २०१६ सालमा स्थापित सहकारी बैंकबाट कृषि क्षेत्रको कर्जाको आवश्यकताको केही हदसम्म भए पनि परिपूर्ति हुनगयो। देशको आर्थिक विकासको क्रममा क्रान्तिकारी कदमको रूपमा आएको भूमि सुधार कार्यक्रम अन्तर्गत संकलित बचतलाई वृहद् आर्थिक हित हुने गरी परिचालन गर्ने उद्देश्यले २०२३ मा भूमि सुधार बचत संस्थानको स्थापना भयो र वित्तीय परिचालनद्वारा कृषि क्षेत्रको विकासमा यसले सक्दो सहयोग गर्‍यो।

नेपालमा संस्थागत विकासको इतिहासमा महत्वपूर्ण घटनाको रूपमा २०२२ सालमा राष्ट्रिय वाणिज्य बैंकको स्थापना भयो। शुरुमा यस बैंकको अधिकृत पूंजी रु. १ करोड र चुक्ता पूंजी रु. २५ लाख थियो। देशको दोस्रो वाणिज्य बैंकको रूपमा यस बैंकको स्थापना भएपछि नेपालको बैंकिंग इतिहासमा नयां नयां क्षितिजहरूको उद्घाटन क्रमिक रूपबाट हुँदैगयो। बैंकहरूका शाखा धमाधम खुल्दै गए र बैंकिंग क्षेत्रको परिधि व्यापक हुँदैगयो। नयां नयां कार्यक्षेत्रहरूमा प्रवेश गरेर बैंकहरूले आफ्नो स्वरूपलाई आधुनिक बनाउँदै लगे।

२०२४ सालमा रु. ५ करोडको अधिकृत पूंजी र रु. ७४ लाख २४ हजारको चुक्ता पूंजीबाट कृषि विकास बैंकको स्थापना भयो। बढ्दै गएको कृषि कर्जाको आवश्यकतालाई यस बैंकले आंशिक रूपमा भए पनि परिपूर्ति गर्दैगयो र साधन र स्रोतको आधारमा आफ्नो क्रियाकलापलाई अघि बढाउँदै लग्यो। यसअघि स्थापना भएका सहकारी बैंक र भूमि सुधार बचत संस्थानको दायित्व पनि



नेपाल बैंक लिमिटेड : पुरानो भवन



नेपाल बैंक लिमिटेड :
प्रधान कार्यालयको
नयाँ भवन



राष्ट्रिय वाणिज्य बैंक, केन्द्रीय कार्यालय भवन

कृषि विकास बैंकले नै लियो र यसरी यस संस्थाको कामकारबाहीको परिधि विस्तृत हुँदैगयो। कृषि विकास बैंकमा परिणत हुनुअघि अर्थात् आर्थिक वर्ष २०३३।३४ सम्म सहकारी बैंकको अधिकृत पूँजी रु. २ करोड र चुक्ता पूँजी रु. ४८ लाख ४१ हजार थियो।

यसअघि नै वित्तीय संस्थाको रूपमा कर्मचारी संचय कोष २०१९ मा अस्तित्वमा आइसकेको थियो। कोषको क्रियाकलापहरू त्यति व्यापक नभए पनि सरकारी कर्मचारीहरूको आर्थिक हितका लागि र केही औद्योगिक परियोजनाहरूमा लगानी गरेर देशको आर्थिक लक्ष्य प्राप्तिमा यसले सहयोग गर्दैआएको छ।

व्यापक रूपमा साना उद्योगहरूको विकास गर्ने उद्देश्यले २०२० सालमा स्थापना भएको साना उद्योग विकास निगम यस क्षेत्रको विकासमा एक राम्रो प्रयास थियो।

**सहकारी तथा साझा संस्थाहरूको विस्तार**

नेपालमा गुठी, धर्म भकारी, अर्मापर्मा र थकालीहरूको ढिकुरी जस्ता प्रचलन प्राचीनकालदेखि नै विद्यमान रहेको भए तापनि कृषकहरूलाई संस्थागत स्रोतबाट आवश्यक सुविधाहरू उपलब्ध गराउने दृष्टिकोणले सहकारी प्रथा चाहिं प्रथम पंचवर्षीय योजनादेखि प्रारम्भ भयो। राप्तीदूनका बाढीपीडित र सुकुमबासीहरूको लागि संचालित बहुमुखी विकास आयोजना अन्तर्गत कृषकहरूलाई ऋण उपलब्ध गराउन श्री ५ को सरकारले २०१३ सालमा कार्यकारिणी आदेश जारी गरी सहकारी संस्थाहरूको गठन गऱ्यो। २०१६ सालमा सहकारी संस्था ऐन र २०१८ सालमा सहकारी संस्था नियमहरू प्रकाशमा आएपछि देशका विभिन्न भागहरूमा सहकारी संस्थाहरू गठन भए। यसरी पहिलो पंच-वर्षीय योजनाकाल (२०१३।१४-२०१८।१९) मा ३७८ र दोस्रो योजनाकाल (२०१८।१९-२०२१।२२) मा ५८२ सहकारी संस्था गठन भए।

दोस्रो योजनाकालको अन्तिम वर्ष अर्थात् आर्थिक वर्ष २०२१।२२ मा नेपालमा भूमि सम्बन्धी ऐन लागू भई अनिवार्य बचत संकलन कार्यक्रमको प्रारम्भ भयो। कृषकहरूबाट अनिवार्य रूपमा बचत संकलन गरी संकलित बचत कृषकहरूलाई नै ऋणको रूपमा उपलब्ध गराउन ग्रामीण तहमा यस्तो वित्तीय संस्थाको रूपमा वडा तथा ग्राम समितिहरू खडा भए। ग्राम स्तरमा समान उद्देश्यहरू भएका यी दुई संस्था—सहकारी संस्था तथा वडा/ग्राम समितिहरू बीच बढी समन्वय कायम गर्न आर्थिक वर्ष २०२४।२५ मा सहकारी विभागले गरिआएको सहकारी संस्थाहरूको संगठन, सम्बर्द्धन तथा प्रशासनिक कार्यहरूको जिम्मेवारी सहकारी विभागबाट भूमि सुधार विभागलाई सुम्पियो। सहकारी विभागको कार्य संस्थाहरूको लेखा परीक्षण तथा प्रशिक्षण दिने कार्यमा मात्र सीमित राखियो।

धेरैजसो सहकारी संस्थाहरू सदस्य संख्या र शेयर पूँजी कम भई कार्यक्षेत्र पनि सीमित रहन गएको कारणले आफ्नो कार्य-कलापमा त्यति सक्षम हुन नसकी निष्क्रिय भए। यी संस्थाहरूलाई बढी व्यवहारिक, जनोपयोगी र प्रभावकारी बनाउने उद्देश्यले आर्थिक वर्ष २०२८।२९ मा श्री ५ को सरकारले सहकारी संस्था-

नेपाल बैंक लिमिटेड :
बैंकिङ कारोबारको झलक





राष्ट्रिय वाणिज्य बैंक,
काठमाडौं शाखा :
व्यस्तताको क्षण

हरुको सञ्चालन कार्य कृषि विकास बैंकलाई दियो। कृषि विकास बैंकले निर्देशित सहकारी संस्थाहरु सबै बहुउद्देश्यीय रुपमा सञ्चालन गर्ने, संचालक समितिको व्यवस्था खारेज गरी सल्लाहकार समिति गठन गर्ने र यस्तो सल्लाहकार समितिको सदस्यहरुको मनोनयन सहकारी विभाग र कृषि विकास बैंकले संयुक्त रुपमा गर्ने तथा १० बिगाहाभन्दा बढी जग्गा जोत्ने कृषकहरुलाई निर्देशित सहकारी संस्थाको सदस्य नबनाउने व्यवस्था थप गर्‍यो।

ग्रामीण स्तरमा रहेको यस्तो वित्तीय एकाई ग्राम समितिहरुलाई पनि बढी क्रियाशील तुल्याउने उद्देश्यले श्री ५ को सरकारले आर्थिक वर्ष २०२९।३० देखि यी समितिहरुको संचालन कार्य पनि कृषि विकास बैंकलाई सुम्प्यो। यसरी चौथो योजना अवधिको अन्तिम वर्ष अर्थात आर्थिक वर्ष २०३१।३२ सम्ममा २५१ सहकारी संस्था र ४५३ ग्राम समिति कृषि विकास बैंकबाट निर्देशित रुपले संचालित भए।

आर्थिक वर्ष २०३२।३३ को अन्तमा श्री ५ को सरकारले ग्रामीण स्तरमा कृषकहरुलाई कृषि ऋण र मल बिउहरुको अतिरिक्त उपभोग्य वस्तुहरु र कृषि उपजको बेचबिखनको सुविधा पुर्‍याउने तथा उनीहरुबाट बचत संकलन पनि गर्ने जस्ता बहुउद्देश्यले प्रेरित ग्रामीण विकासको निमित्त संस्थागत व्यवस्था अन्तर्गत साझा कार्यक्रम लागू गर्‍यो। विशेष रुपले साना किसानहरुको आर्थिक समुन्नति गर्ने लक्ष्य रहेको यस कार्यक्रम सोही वर्ष अधि-राज्यका ३० जिल्लामा लागू भयो। त्यसबखत कृषि विकास बैंकबाट निर्देशित रुपले संचालित २१६ सहकारी संस्था र ३५० ग्राम समितिलाई साझा संस्था नामाकरण गरियो र ४८७ नयाँ साझा संस्थाको गठन भयो। यसरी आर्थिक वर्ष २०३३।३४ सम्ममा जम्मा १,०५८ साझा संस्था कार्यरत रह्यो।

धेरै संख्यामा खडा भएका यी साझा संस्थाहरुमध्ये कतिपय संस्थाहरु एक अर्कासंग धेरै नजिक भएको कारणले तिनीहरुको कारोबार कम हुनगई वित्तीय दृष्टिकोणले सक्षम हुन नसक्ने अवस्थामा पुगेकाले केही संस्थाहरुलाई एक अर्कोमा गाभ्ने नीतिलिई श्री ५ को सरकारले आर्थिक वर्ष २०३४।३५ मा साझा एकीकरण तथा सुदृढीकरण कार्यक्रमको तर्जुमा गरी विभिन्न साझा संस्थाहरुलाई एक अर्कोमा गाभ्यो।

श्री ५ को सरकारको यस नीति अनुरुप केही साझा संस्थाहरु एक अर्कोमा गाभिन गएकाले देशका ३० जिल्लामा हाल कार्यरत संस्थाहरुको संख्या जम्मा ५६१ मात्र रहन गएको छ।



नेपाल राष्ट्र बैंक, काठमाडौं बैंकिङ कार्यालय : लेजर काउण्टर

## निर्देशित सहकारी संस्थाहरूको प्रगति

| विवरण | आर्थिक वर्ष २०२७।२८ | आर्थिक वर्ष २०२८।२९ | आर्थिक वर्ष २०२९।३० | आर्थिक वर्ष २०३०।३१ | आर्थिक वर्ष २०३१।३१ |
|---|---|---|---|---|---|
| संस्थाहरूको संख्या | १०१ | १३० | १४७ | २०७ | २५१ |
| संस्थाहरूले ढाकेको जिल्ला संख्या | — | ३१ | ३२ | ५३ | ६१ |
| सदस्य संख्या | २४,४८८ | — | ३२,२७७ | ३६,१५७ | ४८,८९९ |
| शेयर पूँजी (रु. लाखमा) | ८.४६ | — | १२.०५ | १३.८६ | १८.१६ |
| कृषि विकास बैंकबाट लिएको ऋण (रु. लाखमा) | १८.८४ | ४१.१७ | १४४.७६ | २२७.१२ | ४२१.०० |
| कृषकहरूलाई वितरित ऋण (रु. लाखमा) | ३५.७६ | — | ८०.९१ | १०१.९० | १५६.३६ |

द्रष्टव्य: (१) तालिकामा देखाइएका सदस्य संख्या, शेयर पूंजी, कृषि विकास बैंकबाट लिएको ऋण, कृषकहरूलाई वितरित ऋणका तथ्यांकहरू आर्थिक वर्ष २०२८।२९ मा १३० संस्थाको, आर्थिक वर्ष २०२९।३० मा ९८ संस्थाको, आर्थिक वर्ष २०३०।३१ मा ११६ संस्थाको र आर्थिक वर्ष २०३१।३२ मा २४४ संस्थाको मात्र प्राप्त।

(२) —संकेतले तथ्यांक अप्राप्य जनाउंदछ।

## निर्देशित ग्राम समितिहरूको प्रगति

(आर्थिक वर्ष २०२९।३०-२०३१।३२)

| विवरण | आर्थिक वर्ष २०२९।३० | आर्थिक वर्ष २०३०।३१ | आर्थिक वर्ष २०३१।३२ |
|---|---|---|---|
| समितिहरूको संख्या | २७२ | १५३ | ४५३ |
| समितिहरूले ढाकेको जिल्ला | १६ | ३२ | ४६ |
| कृषि विकास बैंकबाट लिएको ऋण (रु. लाखमा) | २१.९६ | ४०.६२ | ६२.६३ |
| कृषकहरूलाई वितरित ऋण (रु. लाखमा) | २६.४४ | २७.२९ | ३८.०० |

द्रष्टव्य: कृषि विकास बैंकबाट प्राप्त ऋण, कृषकहरूलाई वितरित ऋणका तथ्यांकहरू आर्थिक वर्ष २०२९।३० मा ११६ समितिको, आर्थिक वर्ष २०३०।३१ मा १११ समितिको र आर्थिक वर्ष २०३१।३२ मा ११५ समितिको मात्र प्राप्त।

## साझा संस्थाहरूको प्रगति

| विवरण | आर्थिक वर्ष २०३३।३४ | आर्थिक वर्ष २०३४।३५ | आर्थिक वर्ष २०३५।३६ | आर्थिक वर्ष २०३६।३७ |
|---|---|---|---|---|
| साझा संस्थाहरूको संख्या | १०५८ | ५७३ | ५७३ | ५६१ |
| सदस्य संख्या | ७,७९,७७६ | ९,७४,१६३ | ९,७२,७७१ | १०,५६,२३४ |
| शेयर पूंजी (रु. लाखमा) | ८९२.८४ | १२८४.०५ | १२८७.०० | १३२४.४७ |
| कृषि विकास बैंकबाट प्राप्त ऋण (रु. लाखमा) | ९९८.२४ | १२१३.८४ | ८९९.८० | ५७३.६२ |
| कृषकहरूलाई वितरित ऋण (रु. लाखमा) | ४८२.५५ | ७१७.४६ | ६५२.७१ | ४४४.५६ |

## वाणिज्य बैंकिङ विकास

केन्द्रीय बैंकको रूपमा नेपाल राष्ट्र बैंक अस्तित्वमा आएको केही वर्षसम्म पनि देशको बैंकिङ क्षेत्रले राम्रो गति लिइसकेको थिएन। यसबेलासम्म वाणिज्य बैंकको रूपमा एक मात्र बैंक (नेपाल बैंक लिमिटेड) देशमा कार्यरत थियो र धेरै ठाउँमा यसका शाखाहरू फैलिन पनि सकेको थिएन। राष्ट्र बैंक स्थापना भएको झण्डै एक दशकपछि राष्ट्रिय वाणिज्य बैंकको उदय भयो। यसपछि बैंकिङ क्षेत्र गतिमान हुँदैगयो।

नेपाल राष्ट्र बैंकको स्थापनाकालसम्म नेपाल बैंकको जम्मा ६ शाखा अधिराज्यभित्र कार्यरत थिए। यी शाखाहरू पनि अधिकांश शहरी क्षेत्रमै सीमित थिए। पछि राष्ट्रिय वाणिज्य बैंक नखुलुन्जेलसम्म पनि शाखा विस्तारको गति मन्द नै रह्यो। यस बेलासम्म बैंकको शाखा जम्मा ३७ मात्र पुगिसकेको थियो।

बैंकिङ सेवालाई व्यापक नगराई वित्तीय साधनको परिचालन हुन नसक्ने र यसको पूर्वाधारको रूपमा शाखा विस्तार कार्यक्रमलाई अघि बढाउँदै लैजानु पर्ने भएकोले शुरूमा नेपाल राष्ट्र बैंकको ध्यान शाखा विस्तार कार्यक्रमतिरै केन्द्रित भयो। २०२५ सालमा स्थापना भएको "बैंकिङ प्रवर्द्धन समिति" यस क्रमको महत्वपूर्ण शुरुवात थियो।

वाणिज्य बैंकहरूको शाखा पश्चहरूरै जिल्लामा खोल्दैजाने उद्देश्यले नेपाल राष्ट्र बैंकले आर्थिक वर्ष २०२४।२५ देखि बैंकिङ विकास योजनाको तर्जुमा गरी शाखा विस्तार गराउँदै जाने क्रममा बैंक नभएका जिल्लाहरूमा आफैंले संभाव्यता सर्वेक्षण गरी वा वाणिज्य बैंकहरूलाई सर्वेक्षण गराई शाखाहरू खोल्न लगायो। यस प्रयोजनका लागि राष्ट्र बैंकले शुरूमा रु. २५ लाख राखी बैंकिङ विकास कोष खडा गरेको थियो।

बैंक शाखा नभएका कतिपय जिल्लाहरू दुर्गम तथा विकट क्षेत्रमा रहेका हुनाले त्यस्ता ठाउँहरूमा खुलेका शाखाहरू शुरूमा नोक्सानमा जाने संभावना रहेकाले सम्वन्धित वाणिज्य बैंकहरूको नाफा स्थितिमा प्रतिकूल असर नपरोस् र शाखा खोल्न उनीहरू प्रोत्साहित होउन् भन्ने हेतुले राष्ट्र बैंकले निर्देशित गरेको ठाउँमा शाखा खोल्दा हुने नोक्सानको क्षतिपूर्ति राष्ट्र बैंकले बेहोर्ने र कार्यकारी पूँजी जुटाउने व्यवस्था मिलाइयो।

शाखा खोल्दा हुनगएको नोक्सानको क्षतिपूर्ति शुरूका केही वर्षहरूमा पहिलो ३ वर्षको मात्र राष्ट्र बैंकले बेहोर्ने गरेकोमा पछि त्यस्ता शाखाहरू खुलेदेखि ४।५ वर्षसम्म पनि नोक्सानमा जाने गरेकाले पहिलो वर्षदेखि पाँचौं वर्षसम्म क्रमश: शतप्रतिशत, ७५ प्रतिशत, ५० प्रतिशत, २५ प्रतिशत र १० प्रतिशतका दरले नोक्सानी बेहोर्ने व्यवस्था भयो। यस व्यवस्था अनुरूप राष्ट्र बैंकले २०३७ असारसम्ममा दुवै वाणिज्य बैंकहरूलाई रु. ७५.५१ लाख नोक्सानको क्षतिपूर्ति प्रदान गरिसकेको छ।

नयाँ खुलेका शाखाहरूलाई कार्यकारी पूँजीको अभाव हुनसक्ने हुनाले यस्तो स्थिति नपरोस् भन्ने उद्देश्यले बैंकिङ विकास योजना अन्तर्गत खुलेका बैंक शाखालाई ३ वर्षभित्र चुक्ता गर्नेगरी रु. २ लाखसम्म निर्ब्याजी सापटी दिने व्यवस्था अपनाइयो। यो सुविधा अन्तर्गत २०३७ असारसम्ममा दुवै वाणिज्य बैंकहरूलाई रु. ७५.२५ लाख सापटी राष्ट्र बैंकले प्रदान गरिसकेको छ।

लक्ष्य अनुरूप आर्थिक वर्ष २०३४ असार मसान्तसम्ममा सम्पूर्ण जिल्लाहरूमा बैंकिङ सेवा उपलब्ध गराइयो। देशका सबै जिल्लामा कम्तीमा एउटा बैंक शाखा स्थापना भैसकेपछि राष्ट्र बैंकले परीक्षणको रूपमा धनकुटाको चौमाला र बर्दियाको मगरागढीमा सघन बैंकिङ कार्यक्रम अन्तर्गत काम गर्नेगरी क्रमश: राष्ट्रिय वाणिज्य बैंक र नेपाल बैंक लिमिटेडलाई आ-आफ्नो शाखा खोल्न लगायो। ती शाखाहरूले राष्ट्र बैंकले निर्देशित गरे अनुरूप निश्चित घरधुरीका ग्रामीण परिवारलाई आवश्यक पर्ने कृषि, औद्योगिक तथा उपभोग्य ऋण समेत दिनु पर्ने व्यवस्था छ। यस कार्यक्रमबाट खासगरी सानो हैसियतका ग्रामीण जनता लाभान्वित हुनुका साथै स्थानीय साहूकारको अनुचित दवाववाट उनीहरू मुक्त हुनसक्ने विश्वास गरिएको छ। कार्यक्रमका उपादेयताहरूमाथि दृष्टिगत गरी क्रमैसंग यो कार्यक्रम अन्य जिल्लाहरूमा पनि लागू गर्दैजाने लक्ष्य राष्ट्र बैंकले राखेको छ।

बैंक शाखा विस्तार सम्बन्धमा राष्ट्र बैंकबाट हालसम्म लिइएका विभिन्न कदमहरूको फलस्वरूप २०३७ असार मसान्तसम्म खुलेका कुल बैंक शाखा २४१ मध्ये ग्रामीण क्षेत्रमा १५८ र शहरी क्षेत्रमा ८३ शाखा हुनगई ग्रामीण क्षेत्रतर्फ बढी शाखा विस्तार गर्ने कार्यमा राष्ट्र बैंकलाई सफलता मिलेको छ। यसै विकास क्षेत्र अनुसार शाखाहरूको फैलावटतर्फ दृष्टि दिंदा यस अवधिमा पूर्वाञ्चल विकास क्षेत्रमा ६१, मध्यमाञ्चलमा १०३, पश्चिमाञ्चलमा ४१, सुदूर पश्चिमाञ्चलमा २१ र पाँचौं विकास क्षेत्रमा १५ शाखा पुगेका छन्।

## बैंकिङ प्रवर्द्धन समितिको क्रियाकलाप र उपलब्धि

बैंकिङ विकासका अतिरिक्त बैंक तथा वित्तीय संस्थाहरूका बीच आपसी समन्वयको विकास गर्ने उद्देश्यले २०२५ जेठ २७ गते राष्ट्र बैंकका डेपुटी गभर्नरको अध्यक्षतामा विभिन्न बैंक, वित्तीय संस्था तथा सरकारी र गैरसरकारी कार्यालयहरूका प्रतिनिधिहरू सदस्य भएको एक उच्चस्तरीय "बैंकिङ प्रवर्द्धन समिति" को गठन गरियो।



कृषि विकास बैंक, मुख्य कार्यालय भवन

यो समिति गठन भएपछि समितिको निर्णयानुसार ५ वटा बैंकिङ सम्बन्धी विभिन्न सेमिनार वा गोष्ठी सपन्न भैसकेका छन्। तीमध्ये "नेपालमा बैंकिङ विकास" विषय पहिलो अधिराज्यव्यापी सेमिनार विभिन्न दृष्टिकोणबाट उल्लेखनीय छ। अहिलेसम्म भएका गोष्ठीहरूमा प्राप्त सुझावहरू र समितिबाट लिइएका निर्णयहरू मध्ये धेरैजसोको कार्यान्वयन भैसकेको छ। साथै सबै बैंकहरूका लागि एउटा उपसमिति मार्फत बैंकिङ प्रचार-प्रसार गर्न राष्ट्र बैंकको संयोजकत्वमा बैंकिङ प्रचार प्रसार उपसमितिको पनि गठन गरियो। यस उपसमितिले वृत्तचित्रको निर्माण प्रदर्शन तथा फोल्डर, बुकलेट, पोष्टर आदि प्रचार प्रसारका माध्यमहरूद्वारा खास गरी ग्रामीण समूहमा बैंकिङ चेतना जगाउने काम गरिरहेको छ। रेडियो नेपालबाट संचालित बैंकिङ कार्यक्रम यस दिशाको एक अर्को महत्वपूर्ण प्रयास हो।

कर्जा सूचना निगम, कृषि आयोजना सेवा केन्द्र, सिक्योरिटी मार्केट सेन्टर जस्ता बैंक तथा वित्तीय संस्थाको कारोबारमा सघाउ पुऱ्याउने संस्थाहरूको स्थापना बैंक शाखा विस्तारकालागि विभिन्न योजनाहरूको तर्जुमा, बचत परिचालन र बैंकहरूको कारोबार विधि बारेको एवं समग्र मूल्याङ्कन राष्ट्र बैंकबाट चालिएका उल्लेखनीय कदमहरू हुन्।

**बैंक निक्षेप**

बैंकिङ व्यवसायको विकासको संकेत बैंकहरूको निक्षेपमा भएको क्रमिक वृद्धिले पनि स्पष्ट पार्दछ। यस दृष्टिबाट हेर्दा विगत १५ वर्षको अवधिमा बैंकहरूको निक्षेपमा सन्तोषजनक ढंगले वृद्धि हुँदैगएको पाइन्छ। २०२४ असारमा बैंकहरूको कुल निक्षेप रु. १८ करोड थियो भने २०२७ मा आएर रु. ३६ करोड ८६ लाख पुग्न गएको थियो। त्यसपछि २०३२ साल असारमा बैंकहरूको कुल निक्षेप रु. १ अरब १० करोड ६४ लाख पुग्नगई २०३७ साल असारमा रु. ३ अरब ३५ करोड २६ लाख पुग्नगयो।

यसरी बैंकहरूको साधनमा अधिक वृद्धि हुँदैगएकोले बढेको साधनलाई व्यापारिक क्षेत्र र केही सीमित औद्योगिक परियोजनाहरूमा मात्र सीमित नगराई कृषि स-साना उद्योग जस्ता व्यापक जन-सहभागितावाला क्षेत्रहरूमा लगाउन बैंकहरूलाई प्रोत्साहित गरियो। फलस्वरूप विगत केही वर्ष यतादेखि बैंकहरूको निक्षेपको केही प्रतिशत प्राथमिकता प्राप्त क्षेत्रमा प्रवाहित भएको छ।

**कर्जा तथा बचत परिचालनमा विविधता**

देशमा बैंकिङ व्यवसायको विकास तथा विस्तारको लागि



माछा पालन : फेवा ताल, पोखरा



कपास खेती : खजुरा, बाँके

उठाइएका विभिन्न कदमहरूको फलस्वरूप वाणिज्य बैंकहरूको क्रियाकलापमा विस्तार हुनुका साथै कर्जा संरचनामा समेत विविधता आएको छ । केही वर्षअघिसम्म वाणिज्य बैंकहरूको अधिकांश लगानी व्यापारिक कार्यमा भएकोमा २०३७ असारमा कुल कर्जा-लगानीको ५२ प्रतिशत मात्र व्यापारिक उद्देश्यका लागि भएको छ।

वाणिज्य बैंकहरूले प्रदान गर्ने कर्जा मुख्यतः व्यापारिक क्षेत्रमा मात्र प्रवाहित भै कृषि तथा उद्योग जस्ता उत्पादनशील क्षेत्र बैंकिङ सेवाको परिधिबाट बाहिरै रहेकाले देशको आर्थिक विकासलाई बढी गतिमान तुल्याउन बैंकिङ क्षेत्रलाई पनि यसतर्फ उन्मुख गराउनु आवश्यक थियो। मध्यम तथा दीर्घकालीन कर्जा प्रदान गर्नसक्ने कानूनी व्यवस्था नगरी वाणिज्य बैंकहरूलाई प्रभावकारी रूपमा कृषि तथा औद्योगिक लगानीमा सरीक गराउन नसकिने भएकाले २०३१ सालमा तत्सम्बन्धी व्यवस्थाहरू समेत समावेश गरी वाणिज्य बैंकिङ ऐनमा व्यापक संशोधन गरियो। तदनुरूप यस सालदेखि बैंकहरूलाई आफ्नो कुल निक्षेपको ५ प्रतिशत साना क्षेत्र (कृषि, साना उद्योग तथा सेवा व्यवसाय) मा सुरक्षित कर्जाको रूपमा लगाउन निर्देशन दिइयो। २०३३ सालमा औद्योगिक, सेवा व्यवसाय तथा सम्पूर्ण कृषि क्षेत्रलाई प्राथमिक क्षेत्र नामाकरण गरी बैंकहरूको कुल निक्षेपको ७ प्रतिशत यस क्षेत्रमा प्रवाहित गर्नुपर्ने गरियो। बैंकहरूले दीर्घकालीन लगानी पनि गर्नसक्ने व्यवस्था अनुरूप २०३३ सालमा कुल निक्षेपको ५ प्रतिशतसम्म दीर्घकालीन अवधिमा लगाउनसक्ने गरियो र २०३५ सालमा यसलाई १५ प्रतिशत पुऱ्याइयो। फलस्वरूप वाणिज्य बैंकहरूको कर्जा व्यापारिक उद्देश्यका साथै कृषि, उद्योग तथा सेवा व्यवसायमा पनि विस्तार हुनलाग्यो। २०३७ असार मसान्तमा निजी क्षेत्र तथा अर्ध-सरकारी क्षेत्रलाई गएको कर्जा रु. २७७.३६ करोडमध्ये ७.६१ प्रतिशत कृषि कार्यको लागि, १२.० प्रतिशत उद्योग र २.४ प्रतिशत यातायात सेवा र गोदामहरू बनाउने कार्यको लागि प्रवाहित भएको छ।

दक्ष जनशक्ति तथा उपयुक्त किसिमको प्रविधिको अभावमा बैंकहरूले भरसक्दो चुस्तगरेको प्राथमिक क्षेत्रमा कर्जा प्रवाह गर्ने कठिनाइ अनुभव गरिएकोले राष्ट्र बैंक, बैंकर्स प्रशिक्षण केन्द्रमा र विदेशमा समेत यी क्षेत्रमा कामगर्ने कर्मचारीहरूलाई तालीम-दिलाउने व्यवस्था शुरू गरिएको छ। यसका साथै आवश्यक कानूनी आधार प्रदान गर्ने, ग्रामीण क्षेत्रमा बैंक कर्जा प्रवाह गर्न आवश्यक सरकारी सहयोग प्राप्त गर्ने, बैंकको संगठनलाई ग्रामीणोन्मुखी बनाउने र कर्जा प्रदानगर्ने प्रक्रिया स्पष्टसंग उल्लेख भएको-निर्देशिका तैयारगर्ने जस्ता प्रयासहरू पनि भइरहेका छन्।

ग्रामीण क्षेत्रमा खुलेका शाखाबाट परिचालित बचतलाई ग्रामीण क्षेत्रको उत्पादन तथा आर्थिक कारोबार वृद्धि गर्नमा उपयोग गर्ने नीति अनुरूप ग्रामीण क्षेत्रका बैंक शाखाहरूबाट २०३७ असार-मसान्तमा संकलित निक्षेप रु. ६३.४३ करोडको ७७ प्रतिशत ग्रामीण क्षेत्रमा नै कर्जाको रूपमा लगानी भएको छ।



जनकपुर चुरोट कारखाना: औद्योगिक आत्मनिर्भरताको प्रयास



प्राथमिकता प्राप्त क्षेत्र: स्थानीय साधन र सीपको परिचालन



अलैंची खेती: इलाम



चिया खेती : कन्याम, इलाम



कफी खेती

वाणिज्य बैंकहरूबाट प्रवाहित कर्जाको उद्देश्य अनुसार मात्र विविधता नभई क्षेत्रीय आधारमा पनि विविधता आउन लागेको छ। वाणिज्य बैंकहरूको कुल कर्जा लगानीमध्ये २०३४ असारमा पूर्वाञ्चलमा २१.० प्रतिशत, मध्यमाञ्चलमा ६७.७ प्रतिशत, पश्चिमाञ्चलमा ६.४ प्रतिशत, सुदूर पश्चिमाञ्चलमा २.६ प्रतिशत र पाँचौं विकास क्षेत्रमा २.० प्रतिशत प्रवाहित भएकोमा २०३७ असार मसान्तमा पूर्वाञ्चलमा २२.४ प्रतिशत, मध्यमाञ्चलमा ६४.२ प्रतिशत, पश्चिमाञ्चलमा ६.६ प्रतिशत, सुदूर पश्चिमाञ्चलमा ३.३ प्रतिशत र पाँचौं विकास क्षेत्रमा ३.५ प्रतिशत प्रवाहित भएको छ।

यसरी बैंकिङ प्रणालीलाई देशका कुनाकाप्चासम्म लैजान गरिएका प्रयासहरू र मौद्रिक नीतिको कार्यान्वयनको फलस्वरूप देशका सम्पूर्ण भागका जनतामा बैंकप्रतिको चेतना तथा सद्भावनामा वृद्धि भएकोले देशको अर्थतन्त्रको क्षेत्रका बैंकहरूको बचत परिचालनमा वृद्धि भएको छ।

२०३४ असार र २०३७ असार बीचको अवधिमा बैंकहरूको कुल निक्षेप पूर्वाञ्चलमा रु. २६.४६ करोडबाट वृद्धि भै रु. ४१.६३ करोड, मध्यमाञ्चलमा रु. १५०.६३ करोडबाट रु. २३१.२५ करोड, पश्चिमाञ्चलमा रु. १७.०६ करोडबाट रु. ३०.४६ करोड, सुदूर पश्चिमाञ्चलमा रु. ८.४६ करोडबाट रु. १४.१३ करोड र पाँचौं विकास क्षेत्रमा रु. ४.१३ करोडबाट बढेर रु. ८.६५ करोड पुगेको छ।

**पूंजी कोष**

नेपालका वाणिज्य बैंकहरूले अधिकृत पूंजी बढाउन वाणिज्य बैंक ऐन, २०३१ (संशोधित समेत) को दफा १४ बमोजिम राष्ट्र बैंकको पूर्व स्वीकृति लिनुपर्ने कानूनी व्यवस्था छ। साथै राष्ट्र बैंकले निर्देशन दिएमा सम्बन्धित वाणिज्य बैंकले शेयर पूंजी बढाउनुपर्ने तर राष्ट्र बैंकले यस्तो निर्देशन दिंदा वाणिज्य बैंकको शेयर पूंजी र कर्जा निक्षेपको अनुपातको आधारमा मात्र बढाउन निर्देशन दिनुपर्ने व्यवस्था उक्त दफामा उल्लेख छ।

वाणिज्य बैंकहरूको वित्तीय स्थितिलाई ध्यानमा राखी राष्ट्र बैंकले बेलाबेलामा चुक्ता पूंजी र कुनैबेला सम्पूर्ण पूंजी कोष नै बढाउन पनि निर्देशन दिनेगरेको छ। यी निर्देशनहरूमध्ये २०३१ फागुनमा नेपाल बैंक लि. र राष्ट्रिय वाणिज्य बैंकलाई आ-आफ्नो पूंजी कोष (चुक्तानी पूंजी + जगेडा कोषहरू + संचित खुद आर्जन) क्रमश: रु. ४ करोड र रु. २ करोड पुऱ्याउन राष्ट्र बैंकले दिएको निर्देशन उल्लेखनीय छ।

नेपालका वाणिज्य बैंकहरूको चुक्ता पूंजी र जगेडा कोषहरू २०२८ असारमा रु. १.५७ करोड भएकोमा २०३७ असारमा रु. ८.०८ करोड पुगेको छ।



प्राथमिकता प्राप्त क्षेत्र अन्तर्गत भेडाबाख्रा पालन



गती : उडानमा तत्परता



काठमाडौंको एक आधुनिक होटेल

### पुनरकर्जा

राष्ट्र बैंकले मौद्रिक स्थिरतामा प्रतिकूल असर नपर्ने गरी साधन कमी भएको बेला पुनरकर्जा दिएर बैंकहरूको साधन बढाउनमा सहयोग गर्नेगरेको छ। साधारणतया यस्तो पुनरकर्जा बैंकहरूबाट सिंचाई, कृषि, उद्योग, निर्यात, सेवा क्षेत्रमा दिइएको कर्जा सम्बन्धी कागजातहरू, सरकारी ऋणपत्रहरू धितो लिएर दिइन्छ। यस्तो पुनरकर्जा बढीमा ६ महीनाको लागि बैंकहरूले आफ्ना ग्राहकहरूसंग लिने ब्याजदर भन्दा २ देखि ४ प्रतिशत कम ब्याजदरमा दिइन्छ।

### वाणिज्य बैंकहरूको निगरानी

वाणिज्य बैंकहरूको कामकारवाहीबाट देशमा आर्थिक अस्थिरता नआओस्, बैंकिंग व्यवस्थामा खलल आउने अवस्था उत्पन्न हुन नजाओस् तथा बैंकहरूबाट ग्राहकहरूसंग अनियमित कारबाही नहोस् भन्ने दृष्टिकोणले बैंकहरूले पेश गरेको सूचना तथा तथ्यांकहरू निरन्तर अध्ययन गर्नुका साथै बैंकहरूको सामान्य कारोबारमा समेत निगरानी गर्ने उद्देश्यले वाणिज्य बैंकहरूको संचालक समितिमा राष्ट्र बैंकको प्रतिनिधित्व हुने व्यवस्था छ। यसका साथै राष्ट्र बैंकबाट वाणिज्य बैंकहरूका विभिन्न कार्यालयहरूको कामकारवाहीको नियमित एवं आकस्मिक दुवै रूपमा निरीक्षण गर्ने व्यवस्था छ।

## वाणिज्य बैंकहरूको निक्षेपहरूको विवरण *

(रु० करोडमा)

| वर्ष | चल्ती निक्षेप | बचत निक्षेप | मुद्दती निक्षेप | कुल निक्षेप |
|---|---|---|---|---|
| २०१४ असार | २.३५ | ०.२४ | ०.८७ | ३.४६ |
| २०१५ असार | २.४२ | ०.२५ | १.०० | ३.६७ |
| २०१६ असार | ३.०४ | ०.३२ | १.४३ | ४.७९ |
| २०१७ असार | ४.५७ | ०.४३ | २.२२ | ७.२२ |
| २०१८ असार | ४.५१ | ०.५७ | २.४५ | ७.५३ |
| २०१९ असार | ४.३८ | ०.६० | २.९५ | ७.९३ |
| २०२० असार | ६.१४ | ०.६७ | ३.२६ | १०.०७ |
| २०२१ असार | ७.२८ | ०.७६ | ३.२० | ११.२४ |
| २०२२ असार | ८.६४ | १.०९ | ३.२५ | १२.९८ |
| २०२३ असार | ७.५८ | १.५२ | ३.४० | १२.५० |
| २०२४ असार | १०.८७ | १.९१ | ४.४६ | १७.२४ |
| २०२५ असार | ११.४२ | २.६१ | ७.३४ | २१.३७ |
| २०२६ असार | १६.२३ | ३.७८ | १०.९४ | ३०.९५ |
| २०२७ असार | १९.२४ | ५.२९ | १४.३९ | ३८.९२ |
| २०२८ असार | १९.६० | ६.८६ | १९.३७ | ४५.८३ |
| २०२९ असार | २१.८० | ८.८५ | २९.५१ | ६०.१६ |
| २०३० असार | २५.५५ | १२.१५ | ३५.७४ | ७३.४४ |
| २०३१ असार | ३१.०२ | १५.८१ | ४१.२० | ८८.०३ |
| २०३२ असार | ४४.६४ | १७.२७ | ५१.७४ | ११३.६५ |
| २०३३ असार | ५२.९४ | १९.८० | ८०.७७ | १५३.५१ |
| २०३४ असार | ७३.९० | २६.९२ | १०६.०८ | २०६.९० |
| २०३५ असार | ७०.४८ | ३६.११ | १३५.०६ | २४१.६५ |
| २०३६ असार | ८९.८७ | ४५.४५ | १४७.७७ | २८३.०९ |
| २०३७ असार | ८७.५४ | ५७.१२ | १८१.४९ | ३२६.१५ |

* मार्जिन निक्षेप बाहेक

श्रोत : नेपाल राष्ट्र बैंक

## वाणिज्य बैंकहरूको शाखा विस्तार
(असार मसान्तको स्थिति)

| वर्ष | नेपाल बैंक लिमिटेड | राष्ट्रिय वाणिज्य बैंक | जम्मा |
|---|---|---|---|
| २०१४ | १२ | — | १२ |
| २०१५ | १४ | — | १४ |
| २०१६ | १५ | — | १५ |
| २०१७ | १६ | — | १६ |
| २०१८ | २३ | — | २३ |
| २०१९ | २५ | — | २५ |
| २०२० | २७ | — | २७ |
| २०२१ | २८ | — | २८ |
| २०२२ | ३२ | — | ३२ |
| २०२३ | ३६ | ७ | ४३ |
| २०२४ | ३९ | १७ | ५६ |
| २०२५ | ४२ | १९ | ६१ |
| २०२६ | ४५ | २७ | ७२ |
| २०२७ | ४९ | ३१ | ८० |
| २०२८ | ५३ | ३३ | ८६ |
| २०२९ | ५८ | ३४ | ९२ |
| २०३० | ६३ | ४० | १०३ |
| २०३१ | ७२ | ४६ | ११८ |
| २०३२ | ८१ | ४९ | १३० |
| २०३३ | १०५ | ६८ | १७३ |
| २०३४ | १२७ | ८९ | २१६ |
| २०३५ | १३४ | ९७ | २३१ |
| २०३६ | १३४ | ९७ | २३१ |
| २०३७ | १३५ | १०६ | २४१ |

स्रोत : नेपाल राष्ट्र बैंक।

## कृषि विकास बैंक तथा नेपाल औद्योगिक विकास कर्पोरेशनको कर्जा वितरण

(रु० करोडमा)

| आर्थिक वर्ष | कृषि विकास बैंक | नेपाल औद्योगिक विकास कर्पोरेशन |
|---|---|---|
| २०१६।१७ | — | ०.०१ |
| २०१७।१८ | — | ०.०२ |
| २०१८।१९ | — | ०.३१ |
| २०१९।२० | — | ०.४३ |
| २०२०।२१ | ०.०८ | ०.५९ |
| २०२१।२२ | ०.०८ | ०.९० |
| २०२२।२३ | ०.२७ | ०.७४ |
| २०२३।२४ | ०.४० | ०.६१ |
| २०२४।२५ | ०.३६ | ०.२५ |
| २०२५।२६ | ०.८० | ०.१३ |
| २०२६।२७ | १.३६ | ०.८० |
| २०२७।२८ | १.९२ | १.२० |
| २०२८।२९ | २.३४ | ०.७६ |
| २०२९।३० | ३.५६ | १.४२ |
| २०३०।३१ | ७.६४ | २.३१ |
| २०३१।३२ | १८.१७ | ५.३८ |
| २०३२।३३ | ११.४३ | ३.६९ |
| २०३३।३४ | २२.२१ | ५.१९ |
| २०३४।३५ | २८.२५ | ५.८२ |
| २०३५।३६ | २१.८० | ४.३६ |
| २०३६।३७ | १४.१९ | २.११ |

स्रोत : कृषि विकास बैंक तथा नेपाल औद्योगिक विकास कर्पोरेशन

# वाणिज्य बैंकहरुको साधनको

| | असार २०१४ | असार २०१५ | असार २०१६ | असार २०१७ | असार २०१८ | असार २०१९ | असार २०२० | असार २०२१ | असार २०२२ | असार २०२३ |
|---|---|---|---|---|---|---|---|---|---|---|
| १. मूल धन | ०.२५ | ०.२५ | ०.२५ | ०.२५ | ०.२५ | ०.२५ | ०.२५ | ०.२५ | ०.२५ | ०.५० |
| २. जगेडा कोषहरू | ०.१२ | ०.१५ | ०.१७ | ०.२१ | ०.२५ | ०.२८ | ०.३१ | ०.३४ | ०.७३ | ०.७३ |
| ३. निक्षेपहरू | ३.४६ | ३.६७ | ४.७९ | ७.२२ | ७.५३ | ७.९३ | १०.०७ | ११.२४ | १२.९८ | १२.५० |
| ४. सापटी | — | — | — | — | — | — | — | — | ०.३० | २.९४ |
| ५. अन्य दायित्व (खूद) | ०.५० | ०.५२ | ०.६४ | ०.७६ | ०.७३ | १.१० | १.०२ | १.३८ | १.९८ | ३.०१ |
| ६. साधन=उपयोग | ४.३३ | ४.५९ | ५.८५ | ८.४४ | ८.७६ | ९.५६ | ११.६५ | १३.२१ | १६.२४ | १९.६८ |
| ७. नगद तथा बैंक मौज्दात | २.०७ | २.१८ | २.१९ | ४.९९ | ३.८५ | ३.५४ | ४.४० | ३.५६ | ३.६५ | १.८७ |
| ८. कुल कर्जा | २.१४ | २.२८ | ३.४३ | ३.२२ | ४.५६ | ५.७५ | ६.३८ | ९.१५ | ११.०२ | १६.५९ |
| ८.१ सरकारमाथि दावी | — | — | — | — | — | — | ०.४५ | ०.३० | ०.३३ | ०.३३ |
| ८.२सरकारी संस्थाहरूमाथि दावी | — | — | — | — | — | — | — | — | — | १.२२ |
| ८.३ निजी क्षेत्रमाथि दावी | २.१४ | २.२८ | ३.४३ | ३.२२ | ४.५६ | ५.७५ | ५.९३ | ८.८५ | १०.६९ | १५.०४ |
| ८.४ खरीद तथा डिस्काउण्ट गरेको विदेशी बिलहरू | — | — | — | — | — | — | — | — | — | — |
| ९. अन्य सम्पत्ति | ०.१२ | ०.१३ | ०.२३ | ०.२३ | ०.३५ | ०.२७ | ०.८७ | ०.५० | १.२७ | १.२२ |

स्रोत: नेपाल राष्ट्र बैंक।

# श्रोत तथा उपयोग

(रू. करोडमा)

| असार २०२४ | असार २०२५ | असार २०२६ | असार २०२७ | असार २०२८ | असार २०२९ | असार २०३० | असार २०३१ | असार २०३२ | असार २०३३ | असार २०३४ | असार २०३५ | असार २०३६ | असार २०३७ |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ०.६७ | ०.८० | ०.८० | ०.८० | ०.८० | ०.८० | ०.८० | ०.८० | ०.८० | १.५० | २.२५ | २.५० | ३.५० | ३.५० |
| ०.६२ | ०.७१ | ०.७१ | ०.७५ | ०.७७ | ०.७७ | १.०३ | १.०९ | १.५३ | २.०९ | २.९३ | ३.३५ | ३.३५ | ३.९१ |
| १७.२४ | २१.३७ | ३०.९५ | ३८.९२ | ४५.८३ | ६०.१६ | ७३.४४ | ८८.०३ | ११३.६५ | १५३.५१ | २०६.९० | २४१.६५ | २८३.०९ | ३२६.१५ |
| ०.३२ | १.०० | ०.१७ | २.०९ | १.०८ | ०.१३ | ०.७४ | १५.१० | ३६.८९ | २.४० | ५.५४ | १७.४१ | १६.८९ | २६.४४ |
| १.६५ | ४.६३ | ५.५३ | ७.७८ | १०.४५ | १५.०९ | १८.९५ | १७.३९ | २६.५० | ३३.६२ | ४०.९१ | ४३.५३ | ७६.०३ | ९३.११ |
| २१.४४ | २९.३९ | ३९.१६ | ५१.९२ | ६०.६५ | ७९.०९ | ९८.५७ | १२८.५१ | १८३.१२ | २००.१३ | २६६.३१ | ३१९.६४ | ३९१.८६ | ४५९.९३ |
| ५.२० | ७.६४ | १४.६७ | १५.७० | १९.०३ | २४.१२ | २९.२६ | ३०.४८ | ३७.०१ | ५१.९४ | ७३.८८ | ७२.०८ | ८६.५४ | ७७.२३ |
| १५.०० | २०.२६ | २०.५३ | २९.६९ | ३५.११ | ४६.५० | ५९.२८ | ८६.५२ | १२९.४७ | १२६.४४ | १६३.७४ | १९९.८४ | २३९.७५ | २९९.७७ |
| ०.३३ | ०.४३ | १.०० | १.७९ | १.७२ | ६.५८ | १०.०९ | ९.८३ | १०.०४ | ११.९६ | ४७.९९ | ३५.१५ | ३७.१८ | ३७.१२ |
| १.३८ | ०.७७ | ०.६६ | २.७३ | १.८४ | ०.७४ | ४.२३ | ८.४९ | ४३.२५ | ४५.१२ | ३३.२८ | ६०.९३ | ७२.५८ | ७५.८९ |
| १३.२९ | १९.०६ | १८.८७ | २५.१७ | ३१.५५ | ३९.१८ | ४४.९६ | ६८.२० | ७६.१८ | ६९.३६ | ८२.४७ | १०३.७६ | १२९.९९ | १८६.७६ |
| — | — | २.३६ | १.८५ | १.७७ | २.०४ | २.८८ | २.४१ | २.७३ | ४.६५ | ५.४० | ७.८८ | १८.५२ | १७.१५ |
| १.२४ | १.४९ | १.६० | ४.६८ | ४.७४ | ६.४३ | ७.१५ | ९.१० | १३.९१ | १७.१० | २३.२९ | ३९.८४ | ४७.०५ | ६५.७८ |

## वाणिज्य बैंकहरुको कर्जा को विवरण

| (रु० करोडमा) | | | | | |
|---|---|---|---|---|---|
| | सरकारलाई गएको | सरकारी संस्थाहरु लाई गएको | निजी क्षेत्र लाई गएको | खरीद तथा डिस्काउण्ट गरिएका विदेशी बिलहरु | कुल कर्जा |
| २०१४ असार | — | — | २.१४ | — | २.१४ |
| २०१५ असार | — | — | २.२८ | — | २.२८ |
| २०१६ असार | — | — | ३.४३ | — | ३.४३ |
| २०१७ असार | — | — | ३.२२ | — | ३.२२ |
| २०१८ असार | — | — | ४.५६ | — | ४.५६ |
| २०१९ असार | — | — | ५.७५ | — | ५.७५ |
| २०२० असार | ०.४५ | — | ५.९३ | — | ६.३८ |
| २०२१ असार | ०.३० | — | ८.८५ | — | ९.१५ |
| २०२२ असार | ०.३३ | — | १०.६९ | — | ११.०२ |
| २०२३ असार | ०.३३ | १.२२ | १५.०४ | — | १६.५९ |
| २०२४ असार | ०.३३ | १.३८ | १३.२९ | — | १५.०० |
| २०२५ असार | ०.४३ | ०.७७ | १९.०६ | — | २०.२६ |
| २०२६ असार | १.०० | ०.६६ | १८.८७ | २.३६ | २२.८९ |
| २०२७ असार | १.७९ | २.७३ | २५.१७ | १.८५ | ३१.५४ |
| २०२८ असार | १.७२ | १.८४ | ३१.५५ | १.७७ | ३६.८८ |
| २०२९ असार | ६.५८ | ०.७४ | ३९.१८ | २.०४ | ४८.५४ |
| २०३० असार | १०.०९ | ४.२३ | ४४.९६ | २.८८ | ६२.१६ |
| २०३१ असार | ९.८३ | ८.४९ | ६८.२० | २.४१ | ८८.९३ |
| २०३२ असार | १०.०४ | ४३.२५ | ७६.१८ | २.७३ | १३२.२० |
| २०३३ असार | ११.९६ | ४५.१२ | ६९.३६ | ४.६५ | १३१.०९ |
| २०३४ असार | ४७.९९ | ३३.२८ | ८२.४७ | ५.४० | १६९.१४ |
| २०३५ असार | ३५.१५ | ६०.९३ | १०३.७६ | ७.८८ | २०७.७२ |
| २०३६ असार | ३७.१८ | ७२.५८ | १२९.९९ | १८.५२ | २५८.२७ |
| २०३७ असार | ३७.१२ | ७५.८९ | १८६.७६ | १७.१५ | ३१६.९२ |

स्रोत : नेपाल राष्ट्र बैंक ।

# वाणिज्य बैंकहरूको निक्षेप विवरण



# वाणिज्य बैंकहरूको कर्जा लगानी विवरण



## वाणिज्य बैंकहरूको साधन तथा उपयोगको विवरण



## वाणिज्य बैंकहरूको शाखा विस्तार



# कृषि विकास बैंक तथा नेपाल औद्योगिक विकास कर्पोरेशनको कर्जा वितरण



# ५ नेपाली मुद्राको चलनचल्ती र विकास

**ऐतिहासिक विवेचना**

नेपालमा मुद्राको प्रचलन प्राचीनकालदेखि नै शुरूभएको पाइन्छ। काठमाडौंको हाँडीगाउंको शिलालेखमा पुराण, पण तथा धानबोटको अभिलेखमा कार्षापण मुद्राहरूको नाम उल्लेख गरिएको छ। यसका अतिरिक्त श्रीमानांक, श्रीगुणांक, पशुपति, वृष आदि प्राचीनकालीन तामाका मुद्राहरू पनि फेलापरेका छन्। यी कुराहरूबाट नेपालको मौद्रिक इतिहास धेरै लामो भएको पुष्टि हुन्छ।

प्राचीनकालदेखि वर्तमान अवस्थासम्म चलनचल्तीमा आएका मुद्राहरूलाई लिच्छवीकालीन र यसको समकालीन ठकुरी वंशीय, मल्लकालीन तथा शाहकालीन गरी तीन समूहमा राखी हेर्नसकिन्छ।

लिच्छवीकालका सूर्यवंशीय राजा श्री मानदेव (पांचौं शताब्दी) बाट मुद्रित श्रीमानांक मुद्रालाई नेपालको पहिलो मुद्रा मानिएको छ। त्यसवखत प्रसारित सबै मुद्राहरू हालसम्म तामा (धातु) बाट बनेको मात्र पाइएको छ।

मल्लकाल (ईश्वी बाह्रौं शताब्दीदेखि) मा प्रसारित मुद्राहरूमा काठमाडौंका मल्लकालीन अन्तिम राजा जयप्रकाश मल्ल (वि. सं. अठार सयको शुरुतिर) ले सुनको मुद्रा समेत चलाएका थिए।

मल्लकालमा नेपालको तिब्बतसंगको व्यापारिक सम्बन्ध अरू विकसित भएकोले त्यसताका नेपाली मुद्राको क्षेत्र तिब्बतसम्म पनि फैलिसकेको थियो। तिब्बती मुद्राहरू पनि त्यसबखत नेपालमा टकमरी हुनेगरेको कुरा इतिहासबाट थाहाहुन्छ।

काठमाडौं उपत्यका बाहिर टक्सार नाम गरेका धेरै ठाउंहरू भएकाले यसबाट नेपाली मुद्राको प्रचलन अघिदेखि नै उपत्यका बाहिर पनि हुनेगरेको अनुमान गर्न सकिन्छ। तर यसबारे बढी तथ्य प्रकाशमा आउन अझै बांकीनै छ।

सीमावर्ती भारतीय क्षेत्रहरूमा रेलहेडहरूको निर्माण भएपछि भारतसंगको नेपालको व्यापारमा अरू विस्तार भयो। आधुनिक सुविधा र कलकारखानामा बनेका सामानहरू नेपालमा सजिलैसंग आउन थाले। तराई क्षेत्रबाट भारतमा हुनेगरेको निर्यात व्यापार पनि बढ्दै गयो। निर्यात व्यापारबाट प्राप्त भारतीय रुपैयांलाई नेपाली मुद्रामा परिणत गर्ने र आयात कारोबारको निमित्त भारतीय रुपैयां प्रयोग गर्ने प्रक्रिया शुरू हुनथाल्यो। भारतीय रुपैयांलाई नियन्त्रण गरी नेपाली रुपैयांको मात्र प्रचलन गर्ने राम्रो व्यवस्था हुन नसकेको कारणले गर्दा भारतीय मुद्रा बढ्दै गएको आर्थिक कारोबारमा मात्र सीमित नभई अर्थ कानूनी ग्राह्यको रूपमा नेपालमा धेरै कालसम्म प्रचलनमा रहयो।

१९८७ ताका सुन्धारामा टक्सार स्थापना गरी नेपाली सिक्काको प्रसार बढाइयो। २००२ सालमा सदर मुलुकीखानाबाट नेपाली नोट निष्काशन गर्न शुरू गरेर नेपाली मुद्राको प्रयोग तथा प्रसार गर्नेतर्फ प्रभावकारी प्रयासको थालनी भयो। नेपाली मुद्राको क्षेत्र विस्तार गर्नेतर्फ अरू कुनै ठोस कार्यक्रम नभएकोले यस क्षेत्रमा अपेक्षित सुधार हुनसकेन। २००७ सालको राजनैतिक परिवर्तनपछि नेपालमा आर्थिक तथा सामाजिक चेतना बढ्दै गयो। देशमा राष्ट्र निर्माण र विकासतर्फ बढी चिन्तन हुनथाल्यो। जनआकांक्षा अनुरूप कार्यक्रम संचालन गर्नका लागि आन्तरिक व्यवस्था र साधनको परिचालन हुनु जरूरी भएको अनुभव गरिदैंगयो। नेपाली मुद्रालाई राष्ट्रिय मुद्राको रूपमा विकसित र सुदृढ गराउने कुरामा जोडदिदैं यसको निष्काशन र चलनचल्ती सुव्यवस्थित गर्न एक व्यवस्थित संगठित संस्थाको परिकल्पनाको फलस्वरूप राष्ट्र बैंकको स्थापना भयो। नेपालको मौद्रिक इतिहासमा यो एक महत्वपूर्ण घटना थियो।

यसपछि नेपालको मौद्रिक इतिहासमा उल्लेखनीय प्रगति हुंदैगयो। मौद्रिक क्षेत्रमा भएको क्रमिक विकासको फलस्वरूप नेपाली मुद्राले आज एक सुदृढ राष्ट्रिय मुद्राको रूप लिसकेको छ।

**राष्ट्र बैंक स्थापनाहुंदाको स्थिति र शुरूका प्रयासहरू**

राष्ट्र बैंकको स्थापनाकालमा नेपाली मुद्राको चलनचल्तीको क्षेत्र काठमाडौं उपत्यका र केही पहाडी भागमा मात्र सीमित थियो। अधिकांश सरकारी राजस्व र खर्च भारतीय मुद्रामा हुने गर्दथ्यो। चलनचल्तीमा रहेको नेपाली मुद्राको ५० प्रतिशतभन्दा

# लिच्छवीकालीन मुद्राहरु



## शाहकालीन मुद्राहरु















चलनचल्तीमा रहेका सिक्काहरु



बढी अंश सिक्काको रूपमा थियो। भारतीय रूपैयाँ प्रचलन हुने क्षेत्रमा सरकारी हिसाब र बैंक खाताहरू भारतीय रूपैयाँमा नै राखिने व्यवस्था थियो। यी सबै कारणले गर्दा नेपाली मुद्राको माग पनि धेरै कम थियो।

नेपाली मुद्राप्रति जनताको आस्था र विश्वास बढाउन नसकेसम्म राष्ट्रिय मुद्राको रूपमा नेपाली नोट र सिक्कालाई अघि बढाउने कुरा गाह्रो थियो। यसैले भारतीय रूपैयाँ र नेपाली रूपैयाँको सटही व्यवस्था मिलाउने र नेपाली मुद्राको प्रसारलाई बढाउनेतर्फ राष्ट्र बैंकले शुरूदेखि नै प्रयास गर्दैआयो। साथै सरकारी राजस्वहरू नेपाली मुद्रामा मात्र लिने र भारतीय मुद्राको क्षेत्रमा नेपाली मुद्रा मात्र खर्च गर्ने, न्यून वित्त परिचालनमा सावधानी अपनाउने तथा खाँचो भएका सिक्काहरू मात्र टकमरी गर्ने जस्ता सुझावहरू नेपाल राष्ट्र बैंकले श्री ५ को सरकार समक्ष प्रस्तुत गऱ्यो। नेपाली मुद्राको प्रतिष्ठा र प्रचलन बढाउन यी कदमहरू अत्यावश्यक थिए। नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन २०१४ को व्यवस्था पनि नेपाली मुद्राको प्रचलन र प्रसार बढाउँदै लैजाने क्रममा एउटा महत्वपूर्ण कदम थियो।

२०१४ सालदेखि श्री ५ को सरकारले यस बैंकको कार्यालय स्थापना भएको तराई क्षेत्रमा सरकारी मालपोत हिसाबलाई नेपाली रूपैयाँमा राख्ने निर्णय गऱ्यो। साथै सरकारले भा. रु. १००।- को रु. १२८।- दर कायम गरी नेपाली मुद्रामा पनि मालपोत बुझ्ने र तराई क्षेत्रका कर्मचारीहरूको तलबको २५ प्रतिशत उक्त दरमा परिणत गरी नेपाली रूपैयाँमा दिने समेत व्यवस्था गऱ्यो।

राष्ट्र बैंकको सल्लाह अनुसार २०१७ साल वैशाख १ गतेदेखि काठमाडौं उपत्यका, पूर्व र पश्चिमका १, २ र ३ नम्बरका जिल्लाहरू धनकुटा, भोजपुर, पश्चिम ४ नम्बर पाल्पा, बाग्लुङ, प्युठान, सल्यान, जुम्ला तथा दैलेख जिल्लाहरूमा नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन, २०१४ लागू गरी नेपाली रूपैयाँमा भुक्तानी लिन इन्कार गर्न नहुने कुराको घोषणा श्री ५ को सरकारले गऱ्यो। साथै २०१७ साल जेठ १ गतेदेखि ठेक्काको रकमको किस्ता र सलामी बाहेक श्री ५ को सरकारमा दाखिल हुने सबै रकमहरू (दाङ, देउखुरी, बैतडी, डडेलधुरा, डोटी र इलाम बाहेक) अधिराज्यभर नेपाली मुद्रामा मात्र बुझ्ने र खर्च पनि नेपाली मुद्रामा गर्ने निर्णय गरियो। साथै त्यस समयदेखि उक्त जिल्लाहरूमा जिमिन्दार, जिम्मावाल, मुखियाहरूले पनि नेपाली रूपैयाँ मै रैतीबाट तिरो असूलउपर गरी सरकारमा दाखिल गर्नुपर्ने र नेपाल राष्ट्र बैंकमा रहेको सरकारको सबै भारतीय रूपैयाँको खाता नेपाली रूपैयाँमा परिणत गर्ने समेत व्यवस्था भयो। २०२२ पुस १ गते सम्ममा अधिराज्यका सम्पूर्ण जिल्लाहरूमा क्रमिक रूपबाट उक्त व्यवस्था अपनाइयो।

**मौद्रिक व्यवस्थाका लागि भएका अरु प्रयासहरू**

मुलुकको आवश्यकता र माग अनुरूप नेपाली नोटको सुप्रबन्धका साथै श्री ५ को सरकारबाट निष्काशित सिक्काहरूको अधिराज्यभर वितरण गर्ने कार्यको अभिभारा नेपाल राष्ट्र बैंकमा रहेकोले यस बैंकले निम्न प्रकारबाट यी जिम्मेवारीहरू पूरा गर्दैआएको छ।

**कागजी मुद्रा निष्काशन र यसको सुप्रबन्ध:** नेपाल राष्ट्र बैंकले आफ्नो स्थापनाकालको केही वर्षपछि अर्थात् २०१६ साल फागुन ७ गतेदेखि मात्र नोट निष्काशन गर्न शुरु गऱ्यो। यस अघि साबिक मुलुकीखानाबाट निष्काशित नोटहरूको दायित्व पनि राष्ट्र बैंकले लियो।

२०१४ सालसम्म चलनचल्तीमा रहेको मुद्राहरूमा धातु मुद्राकै आधिक्य थियो। यसैवर्षको असार मसान्तसम्ममा चलनचल्तीमा रहेका रु. ८.४० करोडमध्ये कागजी मुद्रा रु. ३.९७ करोड र धातु मुद्रा रु. ४.४३ करोड (अनुपात ५२.७ प्रतिशत) थियो। २०१५ सालमा धातु मुद्राको अनुपात ४७.३ प्रतिशत थियो र धातु मुद्राको निष्काशनमा भएको वृद्धिको कारणबाट २०१६ सालमा यसको अनुपात ५१.७ प्रतिशत पुग्नगयो। यसै वर्षको असार मसान्तसम्ममा चलनचल्तीमा रहेको मुद्रा रु. ९.६२ करोडमध्ये कागजी मुद्रा रु. ४.६५ करोड र धातु मुद्रा रु. ४.९७ करोड थियो। यसपछि कुल मुद्रामा धातु मुद्राको अनुपात क्रमिक रूपबाट घट्दै गई २०२५ साल असारमा १०.२ प्रतिशत र २०३० साल असारसम्ममा ६.५ प्रतिशत रहन गयो। यस अवधिमा चलनचल्तीमा रहेको कुल मुद्रा रु. १९०.८७ करोडको तुलनामा धातु मुद्रा रु. १२.४३ करोड मात्र चलनचल्तीमा थियो।

२०२६ सालसम्म रु. १, ५, १० र १०० अंकित मूल्यका कागजी मुद्राहरू प्रचलनमा रहेकोमा २०२७ सालमा रु. १००० र २०२८ सालमा रु. ५०० अंकित मूल्यका कागजी मुद्राहरू पनि प्रचलनमा ल्याइयो। २०३४ सालमा आएर रु. ५० दरको कागजी मुद्रा प्रचलनमा आयो। यसरी हालसम्म रु. १, ५, १०, ५०, १००, ५०० र १००० दरका कागजी मुद्राहरू प्रचलनमा रहेका छन्।

**नोट छपाई र मौज्दात:** नेपाल राष्ट्र बैंक ऐन अनुसार नोट छाप्ने सर्वाधिकार राष्ट्र बैंकलाई छ र नोटको ढांचा र मूल्यमा परिवर्तन गर्नुपरेमा श्री ५ को सरकारको स्वीकृति लिनु आवश्यक पर्दछ।

**नोटको ढांचा:** नेपाली नोटको ढांचा र आकार प्रकारमा समय-समयमा परिवर्तन हुँदैआएको छ। हालसम्म प्रचलनमा आएका नोटहरूमा राष्ट्रिय एकताको प्रतीक राजसंस्था, कला, धर्म, संस्कृति, प्राकृतिक सम्पदाहरू प्रतिबिम्बित हुनेगरी यसको

## श्री ५ को सरकारद्वारा निष्काशित
## १० र ५ दरका नोटहरू






## हाल प्रचलनमा रहेका विभिन्न दरका नोटहरू











श्री
नेपाल राष्ट्र बैंक
५०
50
रुपैयाँ पचास




रुपैयाँ पचास
RUPEES FIFTY




१०
नेपाल राष्ट्र बैंक
10
रुपैयाँ दश

ढाँचा तयार गरिँदैआएको छ। सबै दरका नोटहरूमा राष्ट्रिय एकताको प्रतीकको रूपमा **श्री ५ महाराजाधिराज सरकारको** चित्र अंकित गरिएको छ भने सर्वोच्च शक्तिको रूपमा रहेको राजमुकुटलाई पानीचित्रको रूपमा उतारिएको छ। विभिन्न दरका नोटहरूमा चित्र र प्रतीकहरूको माध्यमबाट नेपालको कला, धर्म, संस्कृति तथा प्राकृतिक सम्पदाहरूको चित्रण गरिएको छ। सारांशमा नेपाली नोटको ढाँचाहरूले राष्ट्रिय चरित्रको प्रतिनिधित्व गरेको छ।

नोटको ढाँचामा नेपाली कला, धर्म, संस्कृति र प्राकृतिक संपदा आदि कुराहरू प्रतिबिम्बित गराउने उद्देश्यले नेपाल राष्ट्र बैंकले २०२८ सालमा तत्सम्बन्धी विज्ञहरू रहेको एक समिति गठन गर्‍यो। उक्त समितिले नोटहरूको ढाँचा तयार गरी स्वीकृतिका लागि बैंकको सञ्चालक समितिमा पेश गर्दछ। सञ्चालक समितिले ढाँचा स्वीकृति गरेपछि अनुमतिका लागि श्री ५ को सरकारमा पठाइन्छ र त्यहाँबाट स्वीकृत भै आएपछि नोटको ढाँचा मुद्रणयोग्य हुन्छ।







चलनचल्तीमा रहेको मुद्रामा
कागजी तथा धातु मुद्रा
रु. करोडमा
चलनचल्तीमा रहेको मुद्रा
कागजी मुद्रा
धातु मुद्रा
२००
१८०
१६०
१४०
१२०
१००
८०
६०
४०
२०
०
[असार मसान्त]

**नोटको सट्टा भर्ना सम्बन्धी व्यवस्था:** नेपाली नोटको सट्टा भर्ना दिने सम्बन्धमा नेपाल राष्ट्र बैंक (नोट सट्टा भर्ना) नियम, २०१८ मा यसबारे स्पष्ट व्यवस्था गरिएको छ। नियममा दावी पेशगर्ने हद म्याद, दावीको जाँचबुझ, फाटेको नोटको दावी, आधा नोटको दावी, आधा नोटको दावीको इन्कारी, बेजोडा नोटको दावी आदि कुराहरूका सम्बन्धमा अपनाउने प्रक्रियाहरूबारे उल्लेख छ र यसै नियम अनुसार नोट विभाग र यसका क्षेत्रीय कार्यालयहरूबाट जुत्रो, मैलो र च्यातिएका नोटहरूको सट्टा भर्ना गरिन्छ। नोट कोष रहेका स्थानहरूमा समेत यस्तो नोटको सट्टा भर्ना दिने व्यवस्था छ। यस व्यवस्थाले नेपाली नोटको विश्वसनीयतालाई अरू बढी दृढ बनाएको छ।

**जुत्रो नोट धुल्याउने प्रबन्ध:** नेपाल राष्ट्र बैंक (जुत्रो नोट धुल्याउने) नियमहरू अन्तर्गत जुत्रो नोटहरू धुल्याउने प्रबन्ध राष्ट्र बैंकले गर्दछ। नियमानुसार सट्टा भर्ना दिई संकलित भएका जुत्रा, मैला तथा फाटेका नोटहरूलाई नियमले तोकी दिएको कार्यालयका अधिकृतहरूको रोहबरमा धुल्याउने कार्य गरिन्छ।

**जाली नोट प्रचलनमा आउन नदिन गरेका उपायहरू:** जाली नोटको चलनचल्तीलाई रोक्न नोट छपाईको प्रारंभिक अवस्थामा नै यसमा विशेष सतर्कता अपनाइन्छ। कागजको गुणस्तर, विशेष प्रकारले छापिएको पानीचित्र र नोटमा रहेको सुरक्षा धागोले नेपाली नोटलाई बढी सुरक्षित तुल्याएको छ।

## चलनचल्तीमा रहेको मुद्रामा कागजी तथा धातु मुद्रा

(रु० करोडमा)

| वर्ष | चलनचल्तीमा रहेको मुद्रा | प्रतिशत वृद्धि | कागजी मुद्रा | धातु मुद्रा | धातु मुद्राको अनुपात |
|---|---|---|---|---|---|
| २०१४ असार | ८.४० | — | ३.९७ | ४.४३ | ५२.७ |
| २०१५ असार | ९.०२ | ७.४ | ४.७५ | ४.२७ | ४७.३ |
| २०१६ असार | ९.६२ | ६.७ | ४.६६ | ४.९६ | ५१.७ |
| २०१७ असार | १२.०३ | २५.१ | ६.७६ | ५.२७ | ४३.८ |
| २०१८ असार | १५.२२ | २६.५ | १०.७८ | ४.४४ | २९.२ |
| २०१९ असार | १६.५१ | ८.५ | १२.४८ | ४.०३ | २४.४ |
| २०२० असार | १७.८२ | ८.० | १४.०५ | ३.७७ | २१.२ |
| २०२१ असार | २५.८१ | ४४.८ | २२.११ | ३.७० | १४.३ |
| २०२२ असार | ३१.५६ | २२.२ | २७.६५ | ३.९१ | १२.४ |
| २०२३ असार | ३६.७२ | १६.३ | ३२.५४ | ४.१८ | ११.४ |
| २०२४ असार | ३९.१० | ६.५ | ३४.६९ | ४.४१ | ११.३ |
| २०२५ असार | ४४.९३ | १४.९ | ४०.३५ | ४.५८ | १०.२ |
| २०२६ असार | ५०.९५ | १३.४ | ४६.६० | ४.३५ | ८.६ |
| २०२७ असार | ५६.८७ | ११.६ | ५२.२७ | ४.६० | ८.१ |
| २०२८ असार | ६१.२१ | ७.६ | ५६.३२ | ४.८९ | ८.० |
| २०२९ असार | ६४.२६ | ५.० | ५९.०१ | ५.२५ | ८.२ |
| २०३० असार | ७४.०४ | १५.२ | ६८.४५ | ५.५९ | ७.६ |
| २०३१ असार | ९२.७१ | २५.२ | ८६.६१ | ६.१० | ६.६ |
| २०३२ असार | ९७.१२ | ४.८ | ९०.६४ | ६.४८ | ६.८ |
| २०३३ असार | १०२.४१ | ५.४ | ९५.५६ | ६.८५ | ६.७ |
| २०३४ असार | १२५.६४ | २२.७ | ११८.२५ | ७.३९ | ५.९ |
| २०३५ असार | १४२.६८ | १३.६ | १३३.९६ | ८.७२ | ६.१ |
| २०३६ असार | १७१.२२ | २०.० | १५९.७७ | ११.४५ | ६.७ |
| २०३७ असार | १९०.८७ | ११.५ | १७८.४४ | १२.४३ | ६.५ |

स्रोत : नेपाल राष्ट्र बैंक

# ६ नेपाल राष्ट्र बैंकको आन्तरिक लगानी

विभिन्न विकास कार्यहरूमा लगानी विस्तार गर्नुपरेको कारणले श्री ५ को सरकारको राजस्व आय र व्ययका बीच न्यून स्थितिको सिर्जना हुँदैआएकोले यस्तो न्यून पूर्ति गर्न र दीर्घकालीन रूपमा बचत परिचालन गर्न विकास ऋण-पत्र र छोटो अवधिको लागि रकम जुटाउन ट्रेजरी बिल निष्काशन गर्ने श्री ५ को सरकारको नीतिलाई सफलतापूर्वक कार्यान्वयन गराई पूंजी संकलन गर्ने कार्यमा नेपाल राष्ट्र बैंकले श्री ५ को सरकारको वित्तीय प्रतिनिधिको रूपमा प्रमुख भूमिका खेल्दैआएको छ। श्री ५ को सरकारको बैंकको रूपमा काम गर्दैआएको यस बैंकले आर्थिक वर्ष २०१८।१९ देखि आन्तरिक लगानी गर्न शुरूगर्‍यो। यस्तो लगानी सरकारी, वित्तीय तथा अन्य संस्थाहरू गरी जम्मा तीन क्षेत्रमा भएको छ। श्री ५ को सरकारले आर्थिक वर्ष २०१८।१९ मा पहिलो पटक रु. ७० लाखको ट्रेजरी बिल निष्काशन गरेको थियो। अन्य कुनै क्षेत्रबाट ट्रेजरी बिलमा लगानी नभएकोले यस बैंकले सम्पूर्ण निष्काशित बिलमा लगानी गर्नुपरेको थियो। यो नै बैंकको पहिलो आन्तरिक लगानी थियो।

श्री ५ को सरकारको ट्रेजरी बिल निष्काशन गर्ने प्रक्रिया आर्थिक वर्ष २०१८।१९ देखि आर्थिक वर्ष २०२५।२६ सम्म नियमित रूपमा जारी रह्यो। तदुप्रान्त आर्थिक वर्ष २०३०।३१ सम्म यस्तो बिल निष्काशन भएन। आर्थिक वर्ष २०३१।३२ देखि ट्रेजरी बिल निष्काशन गर्ने प्रथा पुनः प्रारम्भ भयो र यो प्रक्रिया हालसम्म कायमै रहेको छ। आर्थिक वर्ष २०२५।२६ सम्ममा निष्काशित विभिन्न ट्रेजरी बिलहरूमा लगानीगर्ने संस्थाहरूमा नेपाल राष्ट्र बैंकनै प्रमुख थियो र त्यसबेलासम्म निष्काशित ट्रेजरी बिलहरू स्यसै आर्थिक वर्षको अन्तसम्ममा चुक्तागर्ने गरिन्थ्यो। आर्थिक वर्ष २०१८।१९ र २०१९।२० मा भने ट्रेजरी बिल चुक्ता नभई क्रमश: रु. ७० लाख र रु. १.५५ करोड बांकी रहनगएको थियो।

आर्थिक वर्ष २०३१।३२ देखि आर्थिक वर्ष २०३३।३४ सम्ममा निष्काशित रु. ३५ करोडको ट्रेजरी बिलहरूमा वाणिज्य बैंकहरूले कुल रु. २१.१० करोड लगानी गरेका थिए। तर यसप्रपछि र पछिका वर्षहरूको लगानीमा अधिकांश भाग नेपाल राष्ट्र बैंकको नै रहेको छ। आर्थिक वर्ष २०३१।३२ मा निष्काशित रु. ५ करोडको ट्रेजरी बिलको भुक्तानी समयावधिभित्र चुक्ता गरिएको भए तापनि त्यसपछि निष्काशित ट्रेजरी बिलहरूको भुक्तानी अवधि समाप्त भएपछि पुराना बिलहरूको साटो नयां ट्रेजरी बिल निष्काशन गरी नवीकरण गर्ने व्यवस्था गर्नथालियो। आर्थिक वर्ष २०३१।३२ देखि हालसम्म निष्काशित कुल रु. ७२ करोडको ट्रेजरी बिलहरू-मध्ये हाल रु. ६७ करोड बराबरको ट्रेजरी बिलको रकम भुक्तानी हुन बांकी नै छ जसमध्ये राष्ट्र बैंकसंग रु. ६४.६५ करोड रहेको छ।

आर्थिक वर्ष २०२०।२१ देखि श्री ५ को सरकारले विकास ऋण-पत्र जारी गरी आन्तरिक ऋण उठाउने व्यवस्था गर्‍यो। निष्काशित विकास ऋण-पत्रहरूमध्ये अन्य क्षेत्रबाट खरीद भई बांकी रहेको जति ऋण-पत्रमा यस बैंकले लगानी गर्ने गरिआएको छ। आर्थिक वर्ष २०२०।२१ मा ऋण-पत्रमा यस बैंकको लगानी रु. १ लाख मात्र थियो। यसको पांच वर्षपछि अर्थात् आर्थिक वर्ष २०२५।२६ मा विकास ऋण-पत्रमा यस बैंकको लगानी रु. ३ लाख पुग्यो। आर्थिक वर्ष २०३०।३१ मा यस्तो लगानीमा क्रमश: वृद्धि हुंदैगई रु. ७.३४ करोड पुग्नगयो। आर्थिक वर्ष २०३६।३७ को अन्त्यसम्ममा भुक्तानीहुन बांकी ऋण-पत्र रु. ६५ करोड पुग्न-गएको थियो र यसमध्ये राष्ट्र बैंकको लगानी रु. ११.६५ करोड थियो।

ट्रेजरी बिल र विकास ऋण-पत्र बाहेक लामो अवधिमा भुक्तानी हुने केही विशेष ऋण-पत्र निष्काशन गरेर श्री ५ को सरकारले आन्तरिक साधनको परिचालन गर्दैआएको छ। यस किसिमको ऋण-पत्रमा हालसम्म नेपाल राष्ट्र बैंकले मात्र लगानी गरेको छ। यस्तो ऋण-पत्रमा राष्ट्र बैंकको लगानी आर्थिक वर्ष २०२६।२७ मा रु. ४.५१ करोड थियो भने आर्थिक वर्ष २०३१।३२ मा

# नेपाल राष्ट्र बैंकको
# आन्तरिक लगानी



रू. २१.३७ करोड पुगेको थियो। त्यसपछिका वर्षहरूमा यस प्रकारको लगानी केही घट्दै गई २०३७ माघसम्ममा रू. १७.७४ करोड पुग्नगएको थियो।

नेपाल राष्ट्र बैंकबाट सरकारी क्षेत्रमा भएको आन्तरिक लगानीलाई समष्टिरूपमा हेर्दा आर्थिक वर्ष २०१८।१९ मा यस क्षेत्रमा रू. ७० लाख लगानी भएकोमा त्यसको पांच वर्षपछि (आर्थिक वर्ष २०२३।२४) रू. १० लाखमा झरेको पाइन्छ। त्यसको पांच वर्षपछि (आर्थिक वर्ष २०२८।२९) यस्तो लगानीमा रू. ११.६४ करोडले वृद्धि भई रू. ११.७४ करोड पुगेकोमा फेरि अर्को पांच वर्षपछि (आर्थिक वर्ष २०३३।३४) रू.२६.५० करोडले वृद्धि भई रू. ३८.२४ करोड पुग्नगएको छ। यस्तैप्रकारले आर्थिक वर्ष २०३४।३५, २०३५।३६ र २०३६।३७ मा विगत वर्षको तुलनामा क्रमश: रू. ३३.६१ करोड, रू. १२.६४ करोड र रू. ६.१६ करोडले वृद्धि भई रू. ७१.८५ करोड, रू. ८४.४६ करोड र रू. ६३.६५ करोड पुग्नगएको छ।

**निष्काशित विशेष ऋण-पत्रहरू**

(रू. करोडमा)

| आर्थिक वर्ष | विशेष ऋण-पत्र | नेपाल राष्ट्र बैंकको लगानी |
|---|---|---|
| २०२६।२७ | ४.५१ | ४.५१ |
| २०२७।२८ | ७.८० | ७.८० |
| २०२८।२९ | १०.८६ | १०.८६ |
| २०२९।३० | १४.२१ | १४.२१ |
| २०३०।३१ | १८.५२ | १८.५२ |
| २०३१।३२ | २१.३७ | २१.३७ |
| २०३२।३३ | २१.२५ | २१.२५ |
| २०३३।३४ | २०.५७ | २०.५७ |
| २०३४।३५ | १६.६१ | १६.६१ |
| २०३५।३६ | १६.२८ | १६.२८ |
| २०३६।३७ | १७.०५ | १७.०५ |

आर्थिक वर्ष २०२४।२५ मा राष्ट्रिय बीमा संस्थान र कृषि विकास बैंकको शेयर पुंजीमा क्रमश: रू. ४ लाख र रू. २५ लाख लगानी गरेर बैंकले संस्थाहरूमा लगानीको शुरुवात गऱ्यो। राष्ट्रिय बीमा संस्थानमा गरिएको लगानीमा आर्थिक वर्ष २०२५।२६ मा रू. ४ लाख थप भयो। आर्थिक वर्ष २०२८।२९ मा पुन: रू. १० लाखको लगानी गरी कुल लगानी रू. १८ लाख पुऱ्याइयो। यसैप्रकार कृषि विकास बैंकको शेयर पुंजीमा आर्थिक वर्ष २०२४।२५ मा रू. २५ लाख लगानी भएकोमा आर्थिक वर्ष २०२९।३० मा रू. २५ लाख थप गरी रू. ५० लाख लगानी गरियो। आर्थिक वर्ष २०३०।३१, २०३१।३२ र २०३२।३३ मा क्रमश: रु. ३३ लाख, रू. १७ लाख, रू. २.०० करोड थप गरी कुल लगानी रू. ३ करोड पुग्यो। आर्थिक वर्ष २०३४।३५ मा कृषि विकास बैंकबाट निष्काशित रू. ४ करोडको डिबेन्चरमा यस बैंकले रू. २.०० करोड लगानी गरेबाट उक्त बैंकको शेयर पूंजी तथा डिबेन्चरमा गरी जम्मा लगानी रू. ५ करोड पुगेको छ।

आन्तरिक लगानीको प्रवाहलाई कृषि क्षेत्रका साथै देशको औद्योगिक क्षेत्रतर्फ पनि पुऱ्याउनु आवश्यक थियो। देशमा भरखरैमात्र स्थापना भएका उद्योगहरूलाई प्रत्यक्ष लगानी गरी टेवा दिनुपर्ने स्थिति पर्नआएकोले २०२१ साल पुसमा नेपाल राष्ट्र बैंक ऐनको दफा २४ ले दिएको अधिकार अनुसार वीरगन्ज चिनी कारखाना र जनकपुर चुरोट कारखानालाई रू. २.६५ करोडमा ननाघ्ने गरी ओभरड्राफ्ट सहुलियत दिइएको थियो। आर्थिक वर्ष २०२६।२७ मा श्री ५ को सरकारले नेपाल राष्ट्र बैंकको नाममा औद्योगिक ऋण-पत्र निष्काशन गरी यसमध्ये उठ्न बाकी रू. २ करोड ११ लाखको हिसाब टुंग्यायो। देशमा स्थिर मौद्रिक वातावरण कायम राख्ने जिम्मेवारी बोकेको नेपाल राष्ट्र बैंकले सोझै लगानीकर्ताहरूलाई ऋण दिने व्यवस्था कायम रहनदिनु उपयुक्त नदेखिएको हुंदा नेपाल राष्ट्र बैंक ऐन २०१२ को छैटौं संशोधनले नेपाल राष्ट्र बैंकले यसरी उद्योगमा प्रत्यक्ष लगानी गर्ने व्यवस्था खारेज गऱ्यो। देशमा आर्थिक कारोबारको लागि आवश्यक पर्ने रकम बैंक तथा वित्तीय संस्थाहरू मार्फत पुऱ्याउने व्यवस्था अनुरूप आर्थिक वर्ष २०२५।२६ मा नेपाल औद्योगिक विकास कर्पोरेशनको शेयर पूंजीमा यस बैंकले रू. ६५ लाख लगानी गऱ्यो। आर्थिक वर्ष २०२७।२८ मा स्थापना भएको साना उद्योग विकास निगममा पनि सोहीवर्ष रू. २५ लाख लगानी गरिएको थियो। आर्थिक वर्ष २०२८।२९ मा यस निगम नेपाल औद्योगिक विकास कर्पोरेशनमा गाभिएकोले उक्त निगममा लगानी भएको रकम पनि स्वत: नेपाल औद्योगिक विकास कर्पोरेशनको लगानीमा समावेश हुनगएकोले उक्त कर्पोरेशनको शेयर पूंजीमा यस बैंकको लगानी हाल रू. ९० लाख पुगेको छ।

वाणिज्य बैंकहरूबाट प्राथमिकता प्राप्त क्षेत्रमा जाने कर्जालाई सुरक्षण प्रदान गरी यी बैंकहरूलाई यस क्षेत्रमा लगानी बढाउँदै लैजान प्रोत्साहित गर्न नेपाल राष्ट्र बैंकको सक्रियतामा आर्थिक वर्ष २०३१।३२ मा स्थापना गरिएको कर्जा सुरक्षण निगमको शेयरमा राष्ट्र बैंकले रू. २० लाख लगानी गरेको छ।

विकास ऋण-पत्रहरू, ट्रेजरी बिल तथा अन्य शेयर पूंजी बजारको विकास गर्ने उद्देश्य राखी यस बैंकको तत्परतामा आर्थिक वर्ष

**निष्काशित भई चुक्ताहुन बाँकी विकास ऋण-पत्रहरू**

(रु. करोडमा)

| विवरण | आर्थिक वर्ष २०२०।२१ | आर्थिक वर्ष २०२५।२६ | आर्थिक वर्ष २०३०।३१ | आर्थिक वर्ष २०३५।३६ | आर्थिक वर्ष २०३६।३७ |
|---|---|---|---|---|---|
| कुल निष्काशन | १.३१ | ४.५० | २७.७५ | ६०.०० | ६५.०० |
| नेपाल राष्ट्र बैंक | ०.०१ | ०.०३ | ७.३४ | ८.७३ | ११.६५ |
| वाणिज्य बैंक र अन्य | १.३० | ४.४७ | २०.४१ | ५१.२७ | ५३.०५ |

**सरकारी क्षेत्रमा भएको लगानी**

(रु. करोडमा)

| लगानीको विवरण | आर्थिक वर्ष २०१८।१९ | आर्थिक वर्ष २०२३।२४ | आर्थिक वर्ष २०२८।२९ | आर्थिक वर्ष २०३३।३४ | आर्थिक वर्ष २०३४।३५ | आर्थिक वर्ष २०३५।३६ | आर्थिक वर्ष २०३६।३७ |
|---|---|---|---|---|---|---|---|
| ट्रेजरी बिल्समा | ०.७० | — | — | १३.६० | ४८.६७ | ५६.४८ | ६४.६५ |
| विकास ऋण-पत्रमा | — | ०.१० | ०.८५ | ३.७७ | २.६७ | ८.७३ | ११.६५ |
| विशेष ऋण-पत्रमा | — | — | १०.८६ | २०.५७ | १६.६१ | १६.२८ | १७.०५ |
| जम्मा | ०.७० | ०.१० | ११.७४ | ३८.२४ | ७१.८५ | ८४.४६ | ९३.३५ |

२०३३।३४ मा स्थापना भएको सिक्योरिटी खरीद बिक्री केन्द्रको शेयर पूंजीमा रु. ५ लाख लगानी गरियो। आर्थिक वर्ष २०३४।३५ मा पुनः रु. ३ लाख थप गरिएकोले हाल केन्द्रमा बैंकको लगानी रु. ८ लाख पुगेको छ।

गैर वित्तीय संस्थाहरुतर्फ नेपाल राष्ट्र बैंकको लगानीको हकमा वैज्ञानिक ढंगबाट तर्जुमा गरिएको आयोजनाहरू जनसमक्ष पुऱ्याई संस्थागत रूपमा कृषि कर्जा प्रदान गर्न सक्षम बनाई कृषिबाट उच्चतम प्रतिफल हासिल गराउने उद्देश्यले आर्थिक वर्ष २०३१।३२ मा स्थापना भएको कृषि आयोजना सेवा केन्द्रमा रु. १५ लाख लगानी गरियो। आर्थिक वर्ष २०३२।३३ र आर्थिक वर्ष २०३४।३५ मा क्रमशः रु. १५ लाख र रु. २० लाख थप गरी केन्द्रमा गरिएको लगानी हाल रु. ५० लाख पुगेको छ।

नेपाल राष्ट्र बैंकले सरकारी क्षेत्र र वित्तीय तथा गैर वित्तीय संस्थाहरुमा गरेको कुल आन्तरिक लगानीलाई समष्टिरूपमा हेर्दा आर्थिक वर्ष २०१८।१९ देखि आर्थिक वर्ष २०२३।२४ सम्म सरकारी क्षेत्रमा मात्र सीमित रहेको लगानी आर्थिक वर्ष २०२४।२५ देखि वित्तीय संस्थाहरूमा समेत प्रवाहित हुँदैआएको छ। आर्थिक वर्ष २०१८।१९ मा सरकारी क्षेत्रमा रु. ७० लाख लगानी भएकोमा त्यसको पांच वर्षपछि (आर्थिक वर्ष २०२३।२४) रु. १० लाख मात्र रह्यो। त्यसको पांच वर्षपछि (आर्थिक वर्ष २०२८।२९) लगानीमा निकै वृद्धि भई सरकारी र वित्तीय संस्थाहरू दुवैमा गरी जम्मा रु. १३.०७ करोड पुग्यो। आर्थिक वर्ष २०३३।३४ मा सरकारी, वित्तीय तथा गैर वित्तीय संस्थाहरूमा जम्मा रु. ४२.८७ करोड लगानी पुग्यो। यसैप्रकारले आर्थिक वर्ष २०३४।३५, २०३५।३६ र २०३६।३७ मा गतवर्षका वर्षहरूको तुलनामा क्रमशः रु. ३५.८४ करोड, रु. १२.६४ करोड र रु. ९.१६ करोडले वृद्धि भई रु. ७८.८१ करोड, रु. ९१.३५ करोड र रु. १००.५१ करोड पुग्यो। यसरी नेपाल राष्ट्र बैंकले आन्तरिक लगानीको माध्यमबाट सरकारी क्षेत्र र वित्तीय तथा गैर वित्तीय संस्थाहरूको आर्थिक क्रियाकलापमा योगदान दिंदैआएको छ।

## वित्तीय तथा गैर वित्तीय संस्थाहरूमा नेपाल राष्ट्र बैंकको लगानी

(रू. करोडमा)

| विवरण | आर्थिक वर्ष २०२४।२५ | आर्थिक वर्ष २०२९।३० | आर्थिक वर्ष २०३४।३५ | आर्थिक वर्ष २०३५।३६ | आर्थिक वर्ष २०३६।३७ |
|---|---|---|---|---|---|
| **क. वित्तीय संस्थाहरू** | ०.२९ | १.५८ | ६.३६ | ६.३६ | ६.३६ |
| (१) राष्ट्रिय बीमा संस्थान | ०.०४ | ०.१८ | ०.१८ | ०.१८ | ०.१८ |
| (२) कृषि विकास बैंक | ०.२५ | ०.५० | ५.००[1] | ५.०० | ५.०० |
| (३) नेपाल औद्योगिक विकास कर्पोरेशन | — | ०.६५ | ०.९०[2] | ०.९० | ०.९० |
| (४) साना उद्योग विकास निगम | — | ०.२५ | — | — | — |
| (५) कर्जा सुरक्षण निगम | — | — | ०.२० | ०.२० | ०.२० |
| (६) सिक्योरिटी खरीद बिक्री केन्द्र | — | — | ०.०८ | ०.०८ | ०.०८ |
| **ख. गैर वित्तीय संस्था** | — | — | ०.५० | ०.५० | ०.५० |
| (१) कृषि आयोजना सेवा केन्द्र | — | — | ०.५० | ०.५० | ०.५० |
| ग. क + ख | ०.२९ | १.५८ | ६.८६ | ६.८६ | ६.८६ |

[1]आर्थिक वर्ष २०३४।३५ मा खरीद गरिएको रू. २.०० करोडको डिबेन्चर समेत।
[2]आर्थिक वर्ष २०३०।३१ देखि साना उद्योग विकास निगममा गरिएको लगानी रू. २५ लाख नेपाल औद्योगिक विकास कर्पोरेशनमा सारिएको समेत।

# श्री ५ को सरकारको वाह्य ऋणको विवरण

| | २०१८।१९ | २०१९।२० | २०२०।२१ | २०२१।२२ | २०२२।२३ | २०२३।२४ | २०२४।२५ | २०२५।२६ | २०२६।२७ |
|---|---|---|---|---|---|---|---|---|---|
| १. प्रत्यक्ष ऋण | ०.१० | १.२६ | २.४० | २.८९ | २.८९ | २.८४ | ४.८२ | ४.०९ | १.५९ |
| क. द्वि-पक्षीय | ०.१० | १.२६ | २.४० | २.८९ | २.८९ | २.८४ | ४.८२ | ४.०९ | १.५५ |
| ख. वहु-पक्षीय | — | — | — | — | — | — | — | — | ०.०४ |
| २. अप्रत्यक्ष ऋण | ०.०२ | ०.२४ | ०.५० | १.५८ | २.११ | २.५१ | २.२१ | २.०८ | २.१५ |
| क. द्वि-पक्षीय | ०.०२ | ०.२४ | ०.५० | १.५८ | २.११ | २.५१ | २.२१ | २.०८ | २.१५ |
| ख. वहु-पक्षीय | — | — | — | — | — | — | — | — | — |
| ३. जम्मा (१+२) | ०.१२ | १.५० | २.९० | ४.४७ | ५.०० | ५.३५ | ७.०३ | ६.१७ | ३.७४ |

(रु. करोडमा)

| | २०२७।२८ | २०२८।२९ | २०२९।३० | २०३०।३१ | २०३१।३२ | २०३२।३३ | २०३३।३४ | २०३४।३५ | २०३५।३६ | २०३६।३७ |
|---|---|---|---|---|---|---|---|---|---|---|
| १. प्रत्यक्ष ऋण | १.९१ | ३.५० | ६.०१ | १२.२३ | १९.०२ | ३३.९४ | ५२.३० | ७६.४० | ११३.६५ | १६४.४४ |
| क. द्वि-पक्षीय | १.२५ | १.०४ | १.१३ | १.६९ | २.०८ | २.४९ | ७.७२ | १३.०४ | २३.०८ | ३८.३३ |
| ख. वहु-पक्षीय | ०.६६ | २.४६ | ४.८८ | १०.५४ | १६.९४ | ३१.४५ | ४४.५८ | ६३.३६ | ९०.५७ | १२६.११ |
| २ अप्रत्यक्ष ऋण | ३.११ | ३.१७ | ३.२० | ३.३७ | ४.२५ | ४.०३ | ३.८१ | ३.७४ | ३.४८ | ३.२१ |
| क. द्वि-पक्षीय | ३.११ | ३.१७ | ३.२० | ३.३७ | ४.२५ | ४.०३ | ३.८१ | ३.७४ | ३.४८ | ३.२१ |
| ख. वहु-पक्षीय | — | — | — | — | — | — | — | — | — | — |
| ३. जम्मा (१+२) | ५.०२ | ६.६७ | ९.२१ | १५.६० | २३.२७ | ३७.९७ | ५६.११ | ८०.१४ | ११७.१३ | १६७.६५ |

स्रोत: नेपाल राष्ट्र बैंक तथा
श्री ५ को सरकार अर्थ मन्त्रालयबाट प्रकाशित बजेट वक्तव्यहरू

# श्री ५ को सरकारको वाह्य ऋणको विवरण



# ७ नेपाल राष्ट्र बैंक र अन्तर्राष्ट्रिय संघ-संस्थाहरूसंगको सम्बन्ध

देशको आर्थिक विकासको स्थिति र आवश्यकताको दृष्टिकोण-बाट विभिन्न अन्तर्राष्ट्रिय तथा क्षेत्रीय वित्तीय तथा मौद्रिक संघ संस्थाहरू एवं परामर्श समूहहरूमा सम्मिलित भई अन्तर्राष्ट्रिय र क्षेत्रीय वित्तीय तथा मौद्रिक सहयोग, सद्भावना एवं सौहार्द्रताको प्रत्यक्ष भागीदार बन्ने नेपालको शुरूदेखि नै उद्देश्य रहिआएको छ। यसै सन्दर्भमा देशको केन्द्रीय बैंकको रूपमा नेपाल राष्ट्र बैंकसित सम्बन्धित यस्ता अन्तर्राष्ट्रिय र क्षेत्रीय संघ-संस्था तथा समूह-हरूसंगको नेपालको सम्बन्ध विकास हुँदैगएको छ।

## अन्तर्राष्ट्रिय मुद्रा कोष

संयुक्त राष्ट्र संघको मौद्रिक तथा वित्तीय सम्मेलन (ब्रेटन उड्स, १९४४) अन्तर्गत २००१ सालदेखि कार्यरूपमा परिणत भएको अन्तर्राष्ट्रिय मुद्रा कोषमा नेपालले २०१८ साल भदौमा ब्रेटन उड्स सम्झौता ऐन, २०१८ अन्तर्गत सदस्यता हासिल गर्‍यो। अन्तर्राष्ट्रिय मौद्रिक सौहार्द्रतालाई सघाउ पुर्‍याउने उद्देश्यका साथै शोधनान्तर समस्या भएका राष्ट्रहरूलाई वित्तीय सहायता प्रदान गर्नु मुद्रा कोषको मुख्य काम हो। यस उद्देश्य प्राप्तिका लागि कोषले गर्ने सदस्य राष्ट्रहरूको विनिमय दर, मौद्रिक तथा शोधनान्तर स्थितिका गतिविधिहरूको अध्ययन तथा विश्लेषणबाट नेपाल लाभान्वित हुँदैआएको छ।

नेपालले अन्तर्राष्ट्रिय मुद्रा कोषको सदस्यता हासिल गरेदेखि नै यसको "बोर्ड् अफ गभर्नर" मा नेपाल राष्ट्र बैंकको गभर्नर नै नेपालको लागि कोषको गभर्नर रहिआएको परम्परा छ। कोषको संझौताको धारा १४ अन्तर्गत सदस्य राष्ट्रको आर्थिक, वित्तीय स्थितिबारे वार्षिक छलफल हुने गर्दछ। नेपालसंग हुने यस प्रकारको छलफलमा नेपाल राष्ट्र बैंकले नै मुख्य भूमिका निभैगरेको छ।

२०३४ साल वैशाखमा कोष संझौता धारामा भएको दोस्रो संशोधनपछि देशको अर्थव्यवस्थाबारे छलफल गर्न आवश्यक परेमा कोष संझौताको धारा ४ बमोजिम कोषबाट विशेष टोली आउने व्यवस्था पनि छ।

ब्रेटन उड्स संझौता ऐन २०१८ को दफा ७(१) अनुसार नेपाल राष्ट्र बैंकलाई कोष संझौताको अनुसूची ५ को धारा ५ को दफा १ को प्रयोजनको लागि फिस्कल एजेन्सी र कोष संझौताको अनुसूची ६ को धारा १३ को दफा २ को प्रयोजनको लागि डिपोजिटरी मनोनीत गरिएको छ। सोही ऐन अनुसार श्री ५ को सरकारको तर्फबाट विशेष रकम झिक्ने अधिकार प्राप्त गर्ने, प्रयोग गर्ने र हस्तान्तरण गर्ने सबै काम तथा कोषसंग गरिने अन्य विनिमय कारोबार नेपाल राष्ट्र बैंकले गर्दछ। नेपाल र कोषको संझौता अनुसार कोषले नेपाल राष्ट्र बैंक मार्फत मात्र व्यवहार गर्दछ।

सदस्य राष्ट्रको आर्थिक विकासको स्तर अनुरूप कोषले प्रत्येक सदस्य राष्ट्रहरूको कोटा यस. डि. आर (५ परिवर्त्य मुद्राको टोकरी) तोकेको हुन्छ। प्रत्येक मौद्रिक कारोबार यही कोटा अनुरूप नै भइरहन्छ। कोषको यो एक विशेषता हो। कोषको सदस्यता हासिल गर्दा नेपालको कोटा यु. एस. डलर ७५ लाख बराबर मात्र थियो। नेपाली मुद्राको सुनसंगको विनिमय दर त्यतिबेलासम्म नतोकिएको हुंदा कोषको नियम मुताबिकको सम्पूर्ण रकमहरू नेपालले बुझाउनु परेको थिएन र अमेरिकी डलर २६२,००० मात्र सुनमा तिरेको थियो। २०२३ सालमा भएको कोटा वृद्धि अनुसार नेपालको कोटा अमेरिकी डलर १ करोड भयो। त्यसबेला पनि बढेको कोटाको अर्थात् डलर २५ लाख बराबरको सुन तथा रूपैयांमा भुक्तानी गरिएको थियो। २०२४ सालमा नेपाली मुद्राको सुनसंग समदर तोकिएपछि (डलर १=रू. १०.१२५) कोषको नियम अनुसार नेपालले कोटाको २५ प्रतिशत सुन र अमेरिकी डलरमा र बाँकी ७५ प्रतिशत रूपैयांमा भुक्तानी गर्‍यो। २०२८ मा भएको कोटा पुनरावलोकन अन्तर्गत नेपालको कोटा यस. डि. आर. एक करोड ४० लाख पुर्‍याउने निर्णय गरिए तापनि सुनको अन्तर्राष्ट्रिय बजार भाउ र कोषले तोकेको भाउमा अन्तर पर्नगएको हुंदा नेपालले केवल यस. डि. आर. १ करोड २४ लाख मात्रको कोटा भुक्तानी गरेको थियो। संझौता धारामा दोस्रो

संशोधन भएपछि बाँकी एस. डि. आर. १६ लाखको भुक्तानी २०३३ सालमा गरियो। २०३५ सालमा नेपालको कोटा एस. डि. आर. १ करोड ६० लाख पुग्यो। प्रत्येक पाँचवर्षमा गरिने कोटा पुनरावलोकन अन्तर्गत सातौं कोटा वृद्धिमा नेपालको साबिकको कोटा ५० प्रतिशतले वृद्धि हुनगई २०३७ पुसदेखि एस. डि. आर. २ करोड ८५ लाख पुगेको छ।

२०३३ साल चैत अघिसम्म नेपालले कोषसंग विनिमय कारोबार गरेको थिएन। नेपाल तथा कोष बीच कोटा भुक्तानी कारोबार मात्र भएको थियो। आर्थिक वर्ष २०३२।३३ मा नेपालको शोधनान्तर स्थिति प्रतिकूल हुँदैगएकोले नेपालले पहिलोपटक कोषसंग विदेशी मुद्रा खरीद गर्‍यो। पहिलो क्रेडिट ट्रान्चेको नामले जानिने यो सुविधा एस. डि. आर. ४५ लाख नेपालले २०३३ साल जेठमा खरीद गर्नुअघि कोटाको २५ प्रतिशत सुन तथा डलरमा भुक्तानी गरेको रकम एस. डि. आर. ३१ लाख उपयोग गर्नुपर्ने कोषको नियम भएकोले त्यो आर्थिक वर्षमा एस. डि. आर. ७६ लाख बराबरको सुविधा विदेशी मुद्रामा लियो। मौद्रिक संचितिमा वृद्धि भएमा वृद्धि भएको संचितिको ५० प्रतिशत रकम पुनः खरीद गर्नुपर्ने कोषको नियम अनुसार नेपालले २०३४ माघमा एस. डि. आर. ३१ लाख र असार २०३५ मा एस. डि. आर. ३५ लाख गरी एस. डि. आर. ६६ लाख कोषसंग पुनः खरीद गर्‍यो। २०३७ साल बैशाखमा नेपालले कोषलाई पुनः एस. डि. आर. ५ लाख फिर्ता गरेकोले नेपालले कोषबाट उपयोग गरेको ट्रान्चे सुविधा रकम एस. डि. आर. ५ लाख रह्यो।

निर्यात व्यापारमा खास कुनै वस्तुको निर्यातमा तीव्र ह्रास आई शोधनान्तर स्थिति प्रतिकूल भएको अवस्थामा कोषले सदस्य राष्ट्रहरूलाई क्षतिपूर्तिको रूपमा कर्जा सुविधा प्रदान गर्ने गर्दछ। यस सुविधा अन्तर्गत २०३५ असारमा नेपालले एस. डि. आर. ६५ लाख (कोटाको ५० प्रतिशत) को सुविधा प्राप्त गरेको थियो। २०३६ साल जेठमा नेपालले कोषलाई पुनः एस. डि. आर. १० लाख फिर्ता गर्‍यो। यस्तो सुविधा सदस्य राष्ट्रहरूको कोटाको ५० प्रतिशतसम्म पाउनेमा २०३६ साउनदेखि यो सुविधा सदस्य राष्ट्रको कोटाको १०० प्रतिशतसम्म पाइने व्यवस्था भयो। यस व्यवस्थाबाट नेपालले थप एस. डि. आर. १०५ लाख २०३७ साल भदौमा प्राप्तगर्‍यो।

कागजी सुनको रूपमा परिचित एस. डि. आर. एक प्रकारको अन्तर्राष्ट्रिय संचिति हो। यसको प्रयोग सदस्य राष्ट्र तथा कोष बीचको कारोबारमा हुन्छ। डलर, पाउण्ड जस्ता प्रमुख मुद्राहरूको भाउमा आइरहने उतार चढावले गर्दा विश्व व्यापारमा अनिश्चितता देखापरेको र स्थिर र विश्वसनीय अन्तर्राष्ट्रिय संचिति सम्पत्तिको स्थापनार्थ एस. डि. आर. को व्यवस्था भएको हो। एस. डि. आर. लाई अन्तर्राष्ट्रिय मुद्रा कोषले निष्काशन गर्दछ। २०२७ सालदेखि प्रचलनमा ल्याइएको एस. डि. आर. हालसम्म २१.४३३ अरब सिर्जना गरिएकोमा नेपालले ८१.०५ लाख प्राप्त गरेको छ। यसमध्ये नेपालले ६०.६६ लाख प्रयोग गरिसकेको छ। २०३७ साल पुससम्ममा नेपालको संचिति एस. डि. आर. २०.३६ लाख रहेको छ।

अन्तर्राष्ट्रिय मौद्रिक व्यवस्थामा सुनको भूमिकालाई क्रमशः घटाउँदै लैजाने उद्देश्यले कोषले २०३३ जेठदेखि सुन लीलाम गर्न-थाल्यो। यसरी बेचिएको सुनबाट प्राप्त हुने नाफाबाट कोषले सदस्य राष्ट्रहरूलाई ३ प्रकारले लाभान्वित गराएको छ। ती हुन् (१) ट्रष्ट फण्डको सिर्जना (२) नाफाको बाँडफाँड र (३) सुन फिर्ता। ट्रष्ट फण्डबाट विकासोन्मुख राष्ट्रहरूलाई मात्र ऋण दिइन्छ। यस अन्तर्गत नेपालले २०३७ असारसम्ममा एस. डि. आर. १३६ लाख प्राप्त गरेको छ। सुन फिर्तागर्ने कार्यक्रम अनुसार नेपालले हालसम्म १०६११.६१८ फाइन आउन्स सुन तथा नाफाको बाँडफाड अन्तर्गत २०३७ असारसम्ममा अमेरिकी डलर १६.४६ लाख प्राप्त गरेको छ।

हालसम्म नेपालले प्राविधिक सहायता कार्यक्रम अन्तर्गत कोषबाट १० सल्लाहकारको सेवा प्राप्त गरिसकेको छ। यसैगरी कोष प्रशिक्षण कार्यक्रम अन्तर्गत नेपालले लाभ उठाएको छ।

**विश्व बैंक समूह**

नेपालले विश्व बैंकको सदस्यता पनि मुद्रा कोषमा सदस्य भएकै ऐन–ब्रेटन उड्स संझौता ऐन, २०१८ अन्तर्गत प्राप्त गरेको हो। हाल विश्व बैंकमा नेपालको शेयर पूंजी एस. डि. आर. १ करोड ४६ लाख छ। बैंकको नियमानुसार सदस्य राष्ट्रले आफ्नो सब्स्क्रिप्सनको १० प्रतिशत रकमको भुक्तानी गरी बाँकी ९० प्रतिशत रकमको वचन मात्र दिए पुग्छ। १० प्रतिशत भुक्तान गर्नुपर्ने रकममध्ये पनि १ प्रतिशत सुन वा डलर र बाँकी ९ प्रतिशत राष्ट्रिय मुद्रामा भुक्तानी गरे हुन्छ। यस नियम अनुसार नेपालले बैंकलाई जम्मा अमेरिकी डलर २६ लाख ३४ हजार बराबरको सुन, अमेरिकी डलर र राष्ट्रिय मुद्रा बुझाएको छ र अमेरिकी डलर १ करोड ७४ लाख २ हजारको वचन दिएको छ।

विश्व बैंकबाट नेपालले हालसम्म सोझै कुनै ऋण लिएको छैन। विश्व बैंकको ब्याज दर विश्व बजारको हाराहारीमा नै हुनेहुंदा यसबाट कर्जा लिनु विकासोन्मुख राष्ट्रहरूलाई महँगो पर्दछ। त्यसैले गरीब विकासोन्मुख देशलाई मात्र सहुलियत दरमा ऋण उपलब्ध गराउने गरी विश्व बैंकको सहयोगी संस्थाको रूपमा २०१७ सालमा अन्तर्राष्ट्रिय विकास संघको स्थापना भयो। नेपालले

२०२० सालमा मात्र यस संघको सदस्यता हासिल गऱ्यो र हालसम्म यसै संस्थाबाट मात्र नेपालले कर्जा प्राप्त गर्दैआएको छ।

२०२० साल जेठमा नेपालले सदस्यता प्राप्त गरिसकेको भए तापनि अन्तर्राष्ट्रिय विकास संघको क्रियाकलाप वास्तवमा आर्थिक वर्ष २०२६।२७ देखि मात्र नेपालमा शुरूभयो। शुरूमा डलर १७ लाखको टेलिकम्यूनिकेशन प्रोजेक्ट ऋण मात्र विकास संघबाट प्राप्त भएको थियो भने हालसम्म उक्त संघबाट २४ आयोजनाका लागि डलर २७ करोड ११ लाखको ऋण स्वीकृति भएको छ।

| ऋण सहयोग | | |
|---|---|---|
| क्षेत्र | संख्या | रकम (लाख डलरमा) |
| १. सिंचाई | ६ | ७८५ |
| २. खाने पानी तथा ढल निकास | ३ | ४६८ |
| ३. विद्युत | १ | ४०८ |
| ४. टेलिकम्यूनिकेशन | ३ | २१७ |
| ५. सडक | २ | १९२ |
| ६. ग्रामीण विकास | २ | १९० |
| ७. पुनर्वास, पर्यटन, वन, उद्योग आदि | ७ | ४५१ |
| जम्मा | २४ | २,७११ |

स्वीकृत रकम डलर २७ करोड ११ लाखमध्ये १५ असोज २०३७ सम्म डलर ७ करोड ३४ लाख विभिन्न आयोजनाहरूमा खर्च भैसकेको छ।

राष्ट्रिय तथा अन्तर्राष्ट्रिय पूंजीको परिचालनद्वारा निजी क्षेत्रको विकास गरी कम विकसित राष्ट्रहरूको आर्थिक विकासमा सघाउ पुऱ्याउने उद्देश्यले २०१३ सालमा स्थापित अन्तर्राष्ट्रिय वित्त निगममा नेपालले २०२३ सालमा सदस्यता प्राप्त गऱ्यो। अन्तर्राष्ट्रिय वित्त निगमबाट देशको निजी क्षेत्रलाई सरकारको ग्यारेण्टीमा ऋण प्रदान गरिन्छ। नेपालले पर्यटन क्षेत्रमा होटेल विकासको निमित्त उक्त निगमबाट अहिलेसम्म केवल १ आयोजनाको लागि मात्र आर्थिक वर्ष २०३१।३२ मा डलर ३१ लाखको ऋण प्राप्त गरेको छ।

**एशियाली विकास बैंक**

एशियाली विकास बैंकसंग नेपाल यसको स्थापना कालदेखि नै संलग्न छ। २०२३ सालमा स्थापित उक्त बैंकको उद्देश्य पनि करीब करीब विश्व बैंक अनुरूपको नै छ। यो बैंकले एशियाली राष्ट्रहरूको आवश्यकता अनुरूप विकास आयोजनाहरूका लागि ऋण प्रदान गर्दछ।

एशियाली विकास बैंकसंग रहेको साधन साधारण पूंजी कोष र विकास कोष गरी दुई भागमा बाँडिएको छ। सदस्य राष्ट्रहरूले दुवै स्रोतबाट कर्जा प्राप्त गर्न सक्दछन्। तर साधारण पूंजी कोषबाट प्राप्त ऋणमा ब्याजको अंश केही बढी हुन्छ भने विकास कोषबाट प्राप्त ऋणमा सहुलियतपूर्ण ब्याजदर हुन्छ। साधारण पूंजी कोषबाट नेपालले जूट विकासको लागि डलर २० लाखको ऋण २०२७ मा प्राप्तगऱ्यो। विकास कोषबाट हालसम्म २५ आयोजनाका लागि डलर २१ करोड ५७ लाखको ऋण स्वीकृत भसकेको छ। यसबाहेक एशियाली विकास बैंकबाट ३८ आयोजनाका लागि डलर १ करोड २५ लाख बराबरको प्राविधिक सहायता पनि स्वीकृत भैसकेको छ।

| | ऋण सहयोग | | प्राविधिक सहयोग (लाख डलरमा) | |
|---|---|---|---|---|
| क्षेत्र | संख्या | रकम | संख्या | रकम |
| १. यातायात | ५ | ४१९.१० | ३ | ६.६६ |
| २. कृषि | ४ | २६४.०० | १० | २२.९८ |
| ३. शक्ति | ४ | २७६.०० | ४ | १८.१४ |
| ४. उद्योग | ३ | ४२०.३० | १ | ०.९० |
| ५. सिंचाई | ३ | १९६.०० | ६ | २८.१५ |
| ६. ग्रामीण विकास | ३ | २७०.०० | ५ | १४.७२ |
| ७. मत्स्य विकास | १ | ११८.०० | २ | १८.२० |
| ८. पशुपालन | १ | १२२.८० | ३ | १२.५० |
| ९. वन | १ | ४९.०० | २ | ०.८६ |
| १०. शिक्षा | १ | ४२.०० | १ | ०.९५ |
| ११. स्वास्थ्य | — | — | १ | ०.८० |
| कुल | २६ | २,१७७.२० | ३८ | १२४.८६ |

**सियन्जा**

सियन्जा क्षेत्रीय केन्द्रीय बैंकका गभर्नरहरूको एक समूह हो। यसमा दक्षिण पूर्वी एशियाका धेरै देशहरूका साथै न्यूजिल्याण्ड र अष्ट्रेलिया पनि सदस्य छन्। यसको स्थापना २०१४ सालमा भएको हो। यो केन्द्रीय बैंकको समूहमा नेपाल २०२४ सालदेखि सम्मिलित भएको हो। यो समूहको मुख्य उद्देश्य क्षेत्रीय केन्द्रीय बैंकहरूसंग परामर्श गर्नु र केन्द्रीय बैंक सम्बन्धी तालीम प्रदान गर्नु हो।

प्रत्येक २।२ वर्षमा केन्द्रीय बैंकहरूका गभर्नरहरूको आफ्नो परामर्श हुन्छ र सदस्य बैंकहरूले पालैपालो तालीम संचालन गर्ने गर्दछन्। हालसम्म नेपालले यस्तो तालीममा १५ अधिकृत पठाएको छ। समूहको क्रियाकलापमा पर्नआएको केही व्ययभार सदस्य बैंकहरूले वहन गर्नुपर्दछ।

### सियासन

यो समूह पनि दक्षिण पूर्वी एशियाली केन्द्रीय बैंकहरूको नै हो। २०२३ सालमा थाइल्याण्डमा अनौपचारिक छलफलद्वारा यस समूहको स्थापना भएको थियो। यो समूहमा नेपाल शुरूदेखि नै सम्मिलित छ। नेपालको अतिरिक्त यो समूहमा बर्मा, कम्बुचिया, लाओस, भियतनाम, थाइल्याण्ड, मलेशिया, फिलिपिन्स, इन्डोनेशिया, सिंगापुर तथा श्रीलंकाका केन्द्रीय बैंकहरू सम्मिलित छन्। वर्षको १ पटक अनौपचारिक तवरले समूहका गभर्नरहरू विश्व मौद्रिक परिस्थिति, राष्ट्रिय आर्थिक गतिविधि तथा क्षेत्रीय विषयहरूमा परामर्श गर्दछन्। गभर्नरहरूको नवौं वार्षिक सम्मेलन २०३० पुस २१ गते काठमाडौंमा भएको थियो। शुरूमा अन्तर्राष्ट्रिय मुद्रा कोष तथा विश्व बैंक कार्यकारी समूहमा यस क्षेत्रको सामूहिक प्रतिनिधित्व गराउने उद्देश्यले गठन भएको यो समूह हाल त्यस विषयमा असहमत हुन गए तापनि समूहले आफ्नो अन्य क्रियाकलाप भने जारी राखेको छ। २०२५ सालमा मुद्रा कोष तथा विश्व बैंकमा यस क्षेत्रको प्रतिनिधित्व गर्ने गरी नेपाल, बर्मा, थाइलैण्ड, मलेशिया, इण्डोनेशिया, सिंगापुर, फिजी, लाओस र भियतनामको एक समूह गठन भयो। समूहको संझौता अनुरूप नेपालले विश्व बैंक र मुद्रा कोषमा प्रतिनिधित्व गर्न हालसम्म ५ जना अधिकृत ती संस्थाहरूमा पठाएको छ।

यो समूहले एक अनुसन्धान तथा तालीम केन्द्र क्वालालम्पुरमा स्थापना गरेको छ। क्षेत्रीय विषयमा अनुसन्धान तथा समूहका केन्द्रीय बैंकका कर्मचारीहरूलाई तालीम प्रदान गर्नु यो केन्द्रको मुख्य उद्देश्य हो। २०३४ सालमा केन्द्र स्थापना भएदेखि यसले ३ विषयमा ६ तालीम कार्यक्रम संचालन गरेको छ र नेपालबाट २१ अधिकृत तालीममा सम्मिलित भएका छन्। यस केन्द्रको व्यय-भार सामूहिक रूपमा सदस्य केन्द्रीय बैंकहरूले बेहोर्दछन।

### एशियन क्लियरिंग युनियन

एशियाली क्षेत्रमा व्यापारको अभिवृद्धि गर्ने, विशेष व्यापार भुक्तानी प्रणालीको व्यवस्था गर्ने र बैंकिंग क्षेत्रको अरू विकास गर्ने उद्देश्यले २०३१ साल पुसमा एशियन क्लियरिंग युनियनको स्थापना भएको हो। यसमा नेपाल लगायत भारत, बंगलादेश, पाकिस्तान, ईरान, श्रीलंका र बर्मा सदस्य छन्। हाल सातौं वर्षमा प्रवेश गरेको यस युनियनले सदस्य केन्द्रीय बैंकहरूका साथै युनियन मार्फत व्यापार भुक्तानी तथा अन्य कारोबार गर्न स्वीकार गरेका विभिन्न मौद्रिक संस्थाहरूलाई प्रतिनिधित्व गर्ने एक संस्थाको रूपमा कार्य गर्दैआएको छ। युनियनले एशियन मनिटरी युनिट वा एस. डि. आर. को माध्यमद्वारा आफ्नो सदस्य राष्ट्रहरूसंग कारोबार गर्दछ।

नेपाल राष्ट्र बैंक यस युनियनको संस्थापक सदस्य हो। नेपालको विदेशी विनिमय नियन्त्रण प्रणालीमा विशेष व्यवस्था गरी अन्त-र्राष्ट्रिय व्यापारको केही अंशको भुक्तानी नेपालले युनियनको माध्यमबाट गराउंदै आएको छ। राष्ट्र बैंकले वाणिज्य बैंक-हरूसंग रहेको बढी विदेशी मुद्रा खरीद गरिदिने र आवश्यक परेमा सदस्य राष्ट्रहरूको मुद्रा तुरुन्त भुक्तानी दिने व्यवस्थाको साथै वाणिज्य बैंकहरूलाई सदस्य राष्ट्रहरूसंगको कारोबार युनियनको माध्यमद्वारा गर्न निर्देशन दिएको छ। २०३७ साल पुससम्ममा नेपालले युनियन मार्फत रु. १ करोड २३ लाख बराबरको निर्यात र रु. ८५ लाख बराबरको आयात गरेको छ। नेपाल र भारत तथा पाकिस्तान र ईरान बीचको व्यापार भुक्तानी भने यस युनियन मार्फत गरिदैन।

### एशिया तथा प्रशान्त प्रादेशिक कृषि कर्जा संघ

२०३४ असोज महीनामा भारत सरकार र विश्व खाद्य तथा कृषि संगठनद्वारा नयां दिल्लीमा आयोजित कृषि कर्जा सम्मेलनमा स्थापना भएको एशिया तथा प्रशान्त प्रादेशिक कृषि कर्जा संघमा नेपाल राष्ट्र बैंक संघको स्थापनाकालदेखि नै सदस्य रहिआएको छ। सदस्य राष्ट्रहरूका बीच कृषि कर्जा सम्बन्धी सूचना सामग्रीहरू तथा अनुभवको आदानप्रदान गराउने, कृषि क्षेत्रको विभिन्न पक्षहरूमा समयसमयमा तालीम तथा गोष्ठीहरूको आयोजना गर्ने, सदस्य राष्ट्रहरूको कृषि विकास सम्बन्धी नीति, योजना तथा कार्यक्रमहरूको तर्जुमा गर्ने, प्राविधिक सहयोगको आवश्यकता परेमा सोको व्यवस्था गर्न यथोचित कदमहरू उठाउने जस्ता उद्देश्यहरू लिई खडा भएको यस संघमा नेपाल राष्ट्र बैंक पहिलो ३ वर्ष लगातार कार्यकारिणी सदस्यको रूपमा सम्मिलित थियो।

संघले संचालन गर्ने कर्मचारी विनिमय तालीम कार्यक्रम तथा समयसमयमा आयोजना गर्ने गोष्ठी तथा सम्मेलनहरूमा नेपाल राष्ट्र बैंकले कर्मचारीहरूलाई सरीक गराइआएको छ। साथै संघले प्रकाशित गर्ने त्रयमासिक समाचारपत्रको माध्यमबाट नेपाल र अन्य मित्र राष्ट्रहरूका बीच कृषि क्षेत्रको विकासको निमित्त समयसमयमा उठाएका कदमहरू र संचालन गरेको अध्ययन तथा अनुसन्धान कार्यहरूबारे जानकारी आदानप्रदान हुने गरेको छ।

# ८ मुद्रा बैंकिंग तथा कर्जा सम्बन्धी कानूनी व्यवस्था र यसमा भएका क्रमिक सुधारहरू

नेपालमा आधुनिक बैंकिंग सम्बन्धी कानूनी व्यवस्था नेपाल बैंक ऐन, १९९४ बाट शुरू भयो। यसभन्दा अघि कर्जा सापटी वा अन्य रूपले वित्तीय सहायता पुऱ्याउने प्रयास एकाध सरकारी कार्यालयले गरेका थिए। यस सम्बन्धमा पृथ्वीनारायण शाहको शासनकालमा स्थापना भएको कौसी तोषाखानाको विशेष महत्व छ। १९६२ मा जारी गरिएको खड्ग निशान सवालले कर्मचारीहरूलाई तलब, ऋण, पेन्सन दिने जस्ता अधिकार प्रदान गरेर केही सुधारात्मक कदम चालियो। १९८७ पुसमा एक सूचना जारी गरी सरकारी कार्यालयको रूपमा तेजारथ अड्डाको स्थापना भयो।

सरकारी रकम राख्ने ढुकुटी मुलुकीखानाको नामले श्री ५ सुरेन्द्रको पालामा स्थापना भयो। १९९० वैशाख ७ गते जारी भएको सनद अनुसार मुलुकीखानामा दैनिक चल्तीमा आउने रकम एक सांचोमा र चल्तीको मौज्दात तीन साँचे ढुकुटीमा राख्ने व्यवस्था भयो। २००२ सालको लालमोहरले दिएको अधिकार प्रयोग गरी मोहोरबर्षे नेपाली नोटको निष्काशन भयो। २०१३ साल वैशाख १४ मा नेपालको केन्द्रीय बैंकको रूपमा नेपाल राष्ट्र बैंकको स्थापना भयो। मुद्रा, बैंक तथा कर्ज सम्बन्धी कानूनको विकासको क्रममा यो वर्षलाई एक महत्वपूर्ण वर्ष मान्न सकिन्छ। नेपाल राष्ट्र बैंकले एक परंपरागत केन्द्रीय बैंकका साथै देश विकासको एक सक्रिय एकाईको रूपमा आफ्नो भूमिकाको निर्वाह गर्ने क्रममा विभिन्न ऐनको तर्जुमा गर्नमा र विभिन्न वित्तीय एकाईहरूको स्थापना र विकासमा प्रत्यक्ष वा अप्रत्यक्ष रूपले संबद्ध रहँदै आएको छ।

मुद्राको प्रचलन व्यवस्थित गर्न, चलनचल्ती बढाउन र विदेशी विनिमय नियन्त्रण गर्न नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन २०१४, नेपाली मुद्रा ऐन २०१६ र विदेशी विनिमय सटही (नियन्त्रण) ऐन २०१७, विदेशी विनिमय (नियमित गर्ने) ऐन २०१९ को व्यवस्था भयो। नेपालको बढ्दो अन्तर्राष्ट्रिय सम्बन्धको क्रममा ब्रेटन उड्स संझौता ऐन २०१८ र अन्तर्राष्ट्रिय फाइनेन्स सदस्यता प्राप्त गर्ने ऐन २०२२ को व्यवस्था गरियो।

कृषि तथा औद्योगिक क्षेत्रमा लगानी बढाउने प्रयासको फलस्वरूप नेपाल औद्योगिक विकास कर्पोरेशन ऐन, २०१६ र सहकारी बैंक ऐन, २०१९ का साथै देशको वित्त परिचालनमा सघाउ पुऱ्याउन र आवश्यक क्षेत्रमा सेवा समेत उपलब्ध गराउन कर्मचारी संचय कोष ऐन, १०१९ र पछि बीमा समिति ऐन, २०२४ र बीमा संस्थान ऐन, २०२४ को समेत व्यवस्था भयो। आन्तरिक साधनको परिचालनको लागि राष्ट्र ऋण ऐन, २०१९ को व्यवस्था भयो। समसामयिक आवश्यकता अनुरूप ऐनहरूमा सुधार गर्दै जाने क्रममा भएका महत्वपूर्ण परिवर्तनहरूको विवेचना तल गरिएको छ।

**नेपाल राष्ट्र बैंक ऐन, २०१२ र यसमा भएका क्रमिक सुधारहरू**

२०१२ साल कात्तिक १८ गतेको लालमोहरबाट नेपाल राष्ट्र बैंक ऐन बन्यो। बैंकको मूलधन रु. एक करोड हुने र यसको गठनमा एक गभर्नर र गभर्नरको अध्यक्षतामा अरू चारजना संचालक समेत भएको एक संचालक समिति रहने व्यवस्था भयो।

ऐनको दफा १८ अन्तर्गत नोट निष्काशन गर्नेबारे २०१२ साल वैशाख १६ को लालमोहर अनुसार नेपाली नोट चलनचल्तीमा ल्याउने एकाधिकार राष्ट्र बैंकले पायो। यो दफा लागू भएपछि सरकारले नोट निष्काशन नगर्ने, सरकार र बैंकले निर्धारण गरेको अवधिसम्म सरकारले छापिराखेको नोट सरकारबाट बुझिलिई बैंकले निष्काशन गर्ने, सो अवधिपछि बैंकले आफै नोट छापी सरकारको स्वीकृति लिई निष्काशन गर्ने, बैंकद्वारा निष्काशन गरेको नोटको भुक्तानी बैंकले दिन नसकेमा तत्सम्बन्धी जवाफदेही सरकारको हुने, सरकारले निकालेको नोटको दायित्व बैंकको नोट विभागमा सारिने आदि नोट निष्काशन र दरको प्रबन्ध सम्बन्धी कुराहरूको पनि ऐनमा व्यवस्था गरियो।

सरकारी कारोबार (दफा १९), पूंजी परिचालन र राष्ट्र ऋण व्यवस्था (दफा २०), विदेशी विनिमय (दफा २१), उधार नियन्त्रण (दफा २२) आदि कार्यहरू समेत राष्ट्र बैंकले गर्नुपर्ने गरी ऐनमा तोकियो।

वित्तीय क्षेत्रमा संस्थागत विकासको प्रक्रिया शुरू भैनसकेको र बैंकिंग क्रियाकलाप राम्ररी विकसित हुनसकेको त्यसबेलाको स्थितिलाई ध्यानमा राखी कृषि कर्जा सम्बन्धी अध्ययनको निमित्त बैंकले कृषि शाखा खोल्ने (दफा १५), बैंक प्रथालाई प्रोत्साहन दिने (दफा २३), उद्योगधन्धाको विकासको लागि ऋण दिनसक्ने (दफा २४), कृषि, सहकारी संस्थाहरूलाई वित्तीय सहयोग प्रदान गर्नसक्ने (दफा २५ उप-दफा ५) जस्ता कुराहरूको ऐनमा व्यवस्था गरी नेपाल राष्ट्र बैंकलाई देशको आर्थिक विकासको महत्वपूर्ण कामहरू सुम्पियो।

ऐनबाट बैंकलाइ तोकिदिएको कार्यहरू सम्पादन गर्ने सिलसिलामा आवश्यक नियमहरू बनाउनसक्ने पनि व्यवस्था गरियो। ऐन अनुसार श्री ५ को सरकारको स्वीकृति लिएर हालसम्म नेपाल राष्ट्र बैंक (नोट सट्टा भर्ना) नियमहरू २०१४, नेपाल राष्ट्र बैंक (मुवो नोट भुल्याउने) नियमहरू २०१८ र नेपाल राष्ट्र बैंक (नगद सम्बन्धी) नियमहरू २०२० आदि नियमहरू बनाई तत्सम्बन्धी कार्यहरू संचालन गर्नका लागि स्पष्ट नीति र व्यवस्था अपनाइको छ।

देशको बदलिदो मौद्रिक तथा वित्तीय परिस्थितिलाई ध्यानमा राखी हालसम्म नेपाल राष्ट्र बैंक ऐनमा ६ पटक संशोधन भैसकेको छ। ऐन अन्तर्गत बनाइएका नियमहरूमा पनि सामयिक रूपमा सुधारहरू गरी नियमहरूलाई बढी स्पष्ट र व्यवहारिक गराउँदै लगिएको छ।

**(क) पहिलो संशोधन**: २०१५ साल जेठ २ गते लालमोहर सदर भई लागू गरिएको संशोधन अनुसार मूलऐनको दफा ६ मा परिवर्तन गरी संचालकहरूको पदावधि निश्चित गरियो।

**(ख) दोश्रो संशोधन**: २०१७ साल जेठ २० गते लालमोहर सदर भई लागू गरिएको दोश्रो संशोधनले मूल ऐनको दफा ७, १८, २१, २३ र २५ मा केही परिवर्तनहरू र दफा ३१ लाई खारेज गर्‍यो। यस संशोधनमा मुख्यतः नोट निष्काशन सम्बन्धी ऐनको दफा १८ मा आधारभूत परिवर्तन गरियो र निष्काशित नोटको सुरक्षण राख्नुपर्ने व्यवस्थामा महत्वपूर्ण सुधार गरियो। यसबाट नेपाली नोटको बढ्दो चलनचल्ती र आर्थिक विकासको माग अनुरूप नोट निष्काशन गर्ने कार्यमा मद्दत पुग्नगयो। साथै दफा २३ को संशोधनबाट राष्ट्र बैंकले देशको अन्य बैंकलाई घर गोदामको धितोमा कर्जा दिनसक्ने र दफा २५ को संशोधनबाट सर्वप्रकारको सहकारी बैंकलाई ऋण सुविधा प्रदान गर्नसक्ने व्यवस्था गरियो।

**(ग) तेश्रो संशोधन**: २०१६ असोज ११ मा भएको तेश्रो संशोधनले ऐनको दफा १४ का उपदफाहरू (१) र (२) मा परिवर्तन गरी बैंकको हरहिसाब तथा कामकारवाही प्रकाशित गरी श्री ५ को सरकारमा पेश गर्नुपर्ने व्यवस्था गर्‍यो। ऐनको दफा १७ मा भएको संशोधन अनुसार सोही दफामा खण्ड (ट) र (ठ) थपिए। यसबाट विनिमयको व्यवस्थाबारे र बैंक र श्री ५ को सरकारका बीच हुने कामकारवाहीका शर्तहरूबारे बैंकको संचालक समितिले नियम बनाउनसक्ने अधिकार पायो। ऐनको दफा २१ मा विदेशी मुद्रा नियन्त्रण गर्नेबारे बैंकको राय लिई श्री ५ को सरकारले नियम बनाउने थप व्यवस्था भयो। दफा २४ को ठाउंमा नयां दफा कायम गरी श्री ५ को सरकारको स्वीकृति भएमा बैंकले निजी, सरकारी र अर्ध सरकारी क्षेत्रमा आधारभूत उद्योगहरूलाई कर्जा दिनसक्ने भयो। ऐनको दफा २५ को उपदफा (११) को ठाउंमा अर्को उपदफा (१) राखी श्री ५ को सरकारले बैंकसंग लिएको सापटी ८ महीनाभित्र तिरिसक्नुपर्ने गराइयो। ऐनको दफा ३० पछि नयां दफा ३१ थपियो। यस दफामा ऐन संशोधन सम्बन्धी व्यवस्था भयो।

**(घ) चौथो संशोधन**: ऐनमा भएको चौथो संशोधनले दफा ११ को ठाउंमा नयां दफा ११ कायम गर्‍यो। दफा ७ को उपदफा (२) मा भएको संशोधनले सरकारी वा गैर-सरकारी कम्पनी वा कर्पोरेशनको संचालक पदमा बहाल रहेको सरकारी कर्मचारीको हकमा बैंकको संचालक हुन वा रहन बाधा नपर्ने गराइयो। दफा ११ मा भएको नयां व्यवस्था अनुसार संचालक समितिलाई श्री ५ को सरकारले मुलतवी राखी बैंकको संचालन गर्ने कुनै व्यक्ति वा संस्थालाई मुकर्रर गर्नसक्ने भयो।

**(ङ) पांचौं संशोधन**: २०२३ साल असोज ८ गते लालमोहर सदर भई लागू भएको नेपाल राष्ट्र बैंक पांचौं संशोधनले मूल ऐनको दफा २, ३, ५, ६, ७, ६, १०, १२, १४, १५, १८, २२, २३, २४, २५ र २८ संशोधन गरी दफा ३२, ३३, ३४, ३५, ३६ र ३७ नयां दफाहरू थप गरिए।

दफा २ देखि १४ सम्म भएको संशोधनले नेपाल राष्ट्र बैंकलाई वैधानिक रूपबाट केन्द्रीय बैंकको स्वरूप प्रदान गरी बैंकको संगठनमा सुधार गरिनुका साथै डेपुटी गभर्नरहरू समेत संचालक समितिको सदस्य हुने व्यवस्था गरेर समितिको व्यवस्थामा महत्वपूर्ण सुधार गर्‍यो। मूल ऐनको दफा १५ मा उपदफा (१) थपी बैंकले मौद्रिक

स्थितिमाथि विचार गरी कृषि कर्जा दिने अन्य बैंक वा संस्थालाई आवश्यक जमानत लिई कर्जा दिनसक्ने भयो। दफा २२ को संशोधनबाट बैंकिंग व्यवस्था र कर्जा सम्बन्धमा निर्देशन दिने र नियम बनाउने अधिकार राष्ट्र बैंकले पायो। दफा २५ को ठाउंमा परिवर्तित नयां दफा २४ अनुसार मौद्रिक स्थितिमाथि विचार गरी निजी सरकारी र अर्धसरकारी क्षेत्रमा खुलेका उद्योगहरूलाई कर्जा दिने, अन्य बैंक वा संस्थालाई आवश्यक जमानत लिइ बैंक कर्जा दिनसक्ने भयो। यस्तै दफा २५ मा खण्ड (१६) थप गरी कृषि उद्योग तथा बैंकिंग विकासको निमित्त आवश्यक भएमा अन्य बैंक र वित्तीय संस्थाहरूको सेयर वा डिवेन्चर खरीद बिक्री गर्न वा अण्डरराइट गर्नसक्ने व्यवस्था भयो। नयाँ थप गरिएको दफा ३२ मा नेपाल राष्ट्र बैंक ऐन र सन अन्तर्गतका नियम वा आदेश निर्देशनको उल्लंघन गर्ने बैंक उपर राष्ट्र बैंकले कार्वाही गर्नसक्ने व्यवस्था गरियो। कर्मचारी सम्बन्धी व्यवस्थाका लागि दफा ३३ र ३४ थप गरियो।

(च) **छैठौं संशोधन**: २०३१ साल कार्तिक ५ गते भएको छैठौं संशोधनमा मूल ऐनको विभिन्न दफा तथा उपदफाहरूमा परिवर्तन तथा केही दफा उपदफाहरू थप समेत गरियो। यस संशोधनबाट नोट निष्काशनको सुरक्षण (दफा १८ को उपदफा २) को सम्बन्धमा भइरहेको व्यवस्थामा श्री ५ को सरकारले स्वीकृति दिएमा पच्चीस प्रतिशतमा नघटाई सुन वा चाँदी वा विदेशी मुद्रा वा विदेशी सिक्योरिटी वा विदेशी विनिमय-पत्र सुरक्षणमा राखी नोट निष्काशन गर्नसकिने भन्ने समेतको थप व्यवस्था गरियो। दफा २१ मा भएको संशोधनबाट श्री ५ को सरकारले तोकिदिएको समदरको आधारमा बैंकले सटही दर निर्धारण गर्ने भयो। साथै समदरको निर्धारण गर्दा बैंकको राय लिइने भयो।

दफा २२ को संशोधन तथा दफा २३ क, ख, ग थप गरी बैंक तथा वित्तीय संस्थाहरूले लिने दिने ब्याज दर, बैंकमा राख्नुपर्ने कोष तथा कायम गर्नुपर्ने तरलता सम्बन्धी कुरामा राष्ट्र बैंकले दिएको निर्देशन वाणिज्य बैंक र वित्तीय संस्थाहरूले समेत पालन गर्नुपर्ने ऐनमा व्यवस्था भयो। ऐनमा थप दफा २३ समावेश गरी देशमा बैंकिंग तथा अन्य वित्तीय संस्थाको विकासको लागि राष्ट्र बैंकले वाणिज्य बैंक, कृषि कर्जा वा औद्योगिक कर्जा दिने बैंक वा वित्तीय संस्थालाई कर्जा वा पुनकर्जा दिनसक्ने भयो। यसपछि निजी, सरकारी र अर्धसरकारी क्षेत्रका आधारभूत उद्योगहरूलाई बैंकले सिधै कर्जा दिनसक्ने ऐनको दफा २४ को व्यवस्थामा पुरै परिवर्तन गरी यसको सट्टा विनिमय-पत्र खरीद गर्न, पुनः भुक्तानी गर्न वा ऐन अन्तर्गत खरीद गर्नसक्ने अन्य व्यापारिक पत्र खरीद गर्न बैंक दर तोकनसक्ने व्यवस्था भयो। ऐनमा भएको अन्य संशोधनबाट बैंक तथा वित्तीय संस्थाहरूको रेखदेख गर्ने र निर्देशन दिने कुराका साथै कर्जा नियन्त्रण सम्बन्धी व्यवस्थामा पनि सुधार गरियो। यसका साथै मुनाफा कमाउने उद्देश्य नभएको तर देशको आर्थिक तथा बैंकिंग विकासको लागि आवश्यक पर्ने संस्थाहरूको स्थापना गर्न, स्थापनामा भाग लिन वा सहायता दिनसक्ने पनि भयो। यसरी नेपाल राष्ट्र बैंक ऐनमा भएको छैठौं संशोधनले नेपाल राष्ट्र बैंकको कामकारवाहीलाई बढी स्पष्ट, विकासमूलक र व्यापक गराउने प्रयत्न गर्‍यो।

**नेपाली मुद्रा तथा विदेशी विनिमय सम्बन्धी ऐनहरू**

नेपाली मुद्राको चलनचल्ती र यसको टकमरी गराउने व्यवस्था धेरै अघिदेखि भए तापनि यस सम्बन्धी संगठित कानूनी व्यवस्था २०१३ सालसम्म हुनसकेको थिएन। नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन २०१४ र नेपाली मुद्रा ऐन २०१६ यस दिशामा एक महत्वपूर्ण पाइला हुनगयो। यी ऐनहरूबाट परंपरागत मुद्रा व्यवहारलाई बढी व्यवस्थित गराउन र देशमा नेपाली मुद्राको मात्र चलन गराउन कानूनी आधार प्राप्त हुनगयो।

२०१४ असार २६ गते लालमोहर सदर भएको नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन २०१४ लाई २०१७ बैशाख १ गतेदेखि काठमाडौं उपत्यका, पूर्व र पश्चिमका १, २ र ३ नं. का जिल्लाहरू धनकुटा, भोजपुर पश्चिम ४ नं. पाल्पा, बागलुंग, प्यूठान, सल्यान, जुम्ला र दैलेखमा लागू गरी ती जिल्लाहरूमा नेपाली मुद्रामा भुक्तानी लिन इन्कार गर्न नहुने कानूनी व्यवस्था भयो। २०२२ साल पुस १ गतेसम्मा यो ऐन क्रमशः अधिराज्यभर लागू गरियो।

विदेशी विनिमयलाई प्रभावकारी रूपमा नियन्त्रण गर्नको लागि २०१७ साल जेठ २० गते देखि विदेशी विनिमय सटही नियन्त्रण ऐन २०१७ को व्यवस्था भयो। यस ऐन अन्तर्गत राष्ट्र बैंकको इजाजत नलिई विदेशी विनिमय सटही गरी लिन वा दिन नहुने गरियो। २०१७ साल कात्तिक १ गतेदेखि काठमाडौं उपत्यकामा राष्ट्र बैंकसंग लाइसेन्स नलिई कसैले पनि विनिमय कारोबार गर्न नपाउने भयो।

विदेशी विनिमय सम्बन्धी कारोबारलाई अझ बढी नियमित गर्न विदेशी विनिमय (नियन्त्रण) ऐन २०१७ लाई खारेज गरी २०१६ भदौ १ गतेदेखि विदेशी विनिमय (नियमित गर्ने) ऐन, २०१६ लागू भयो। यस ऐन अन्तर्गत बनेका नियमहरू २०१६ कात्तिकमा लागू गरियो।

**वाणिज्य बैंकिङ ऐन र यसमा भएका सुधारहरू**

नेपालको बैंकिंग कानूनको इतिहासमा १९६४ साल एक महत्व-पूर्ण वर्ष हो। यसैसाल नेपाल बैंक ऐन १९६४ लागू भई

नेपाल बैंक लिमिटेडको स्थापना भएर नेपालमा एक संगठित बैंकिंग इतिहासको थालनी हुनगयो। यस ऐनमा बैंकले उठाउने शेयरमध्ये कमसेकम चारखण्डको एकखण्ड शेयर सरकारबाट लिने र बांकी शेयर नेपाली ग्राहकहरूले लिनपाउने व्यवस्था गरिएको थियो।

२०२० सालमा वाणिज्य बैंक ऐन २०२० को व्यवस्था भएपछि नेपाल बैंक ऐन १९९४ खारेज भई नपाल बैंक समेत यसै अन्तर्गत संचालित भयो। यस ऐनले नेपाल राष्ट्र बैंकको स्वीकृति लिई निजी क्षेत्रमा वाणिज्य बैंक खडा गर्न सकिने भयो। नेपाल राष्ट्र बैंकले अन्य बैंकहरूको निरीक्षण गर्नसक्ने, थिनीहरूको शाखा खोल्न स्वीकृति दिने आदि व्यवस्था भई राष्ट्र बैंक र वाणिज्य बैंकहरूको बीच विधिवत सम्बन्ध स्थापना हुनगयो।

बैंकिंग व्यवसाय संचालन गर्ने निजी क्षेत्रले तत्काल खास चाख लिएको नदेखिएको हुनाले एक अर्को वाणिज्य बैंकको आवश्यकतालाई ध्यानमा राखी राष्ट्रिय वाणिज्य बैंक ऐन, २०२१ अन्तर्गत २०२२ साल माघ १० गते श्री ५ को सरकारको पूर्ण स्वामित्वमा राष्ट्रिय वाणिज्य बैंकको स्थापना गरियो। नेपाल राष्ट्र बैंक नभएको स्थानहरूमा यो बैंकले राष्ट्र बैंकको एजेण्टको रूपमा समेत काम गर्नथाल्यो।

२०३१ सालमा वाणिज्य बैंक ऐन २०२० र राष्ट्रिय वाणिज्य बैंक ऐन २०२२ खारेज गरी वाणिज्य बैंक ऐन २०३१ लागू गरियो र दुवै वाणिज्य बैंक यसै ऐनद्वारा संचालित भए। नयां वाणिज्य बैंक ऐनको प्रमुख उद्देश्य दुई ऐनको एकीकरण गर्नु मात्र नभई बैंकहरूलाइ देशको आर्थिक विकासमा प्रत्यक्ष रूपबाट सहभागी गराउने कानूनी आधार खडागर्नु पनि थियो। ऐनमा गरिएका व्यवस्थाहरूले बैंकको संगठनमा सुधार गरी राष्ट्र बैंक र यस बैंकको सम्बन्धलाई अरू स्पष्ट गरायो। साथै कृषि, घरेलु उद्योग र अन्य उत्पादनशील क्षेत्रहरूमा सरल ढंगबाट वित्तीय सहयोग प्रदान गरी यी क्षेत्रहरूमा मध्यम र दीर्घकालीन ऋण समेत दिनसक्ने ऐनमा व्यवस्था भयो। नेपालको बैंकिंग प्रथालाई अरू विकासमूलक गराउने उद्देश्यले २०३४ सालमा केही महत्वपूर्ण संशोधनहरू भए। ऐनको दफा १२ मा भएको संशोधनले वाणिज्य बैंकहरूलाइ १० वर्षसम्मको म्यादमा कर्जा दिनसक्ने अधिकार दियो। ऐनको दफा ४७ मा भएको संशोधनले वाणिज्य बैंकले दिने २ लाखसम्मको कर्जामा लिखत रजिष्ट्रेशन गर्नुनपर्ने भयो। यसैगरी दफा ४७ (क) थप गरी कुनै व्यक्ति, संस्था वा उद्योगले बैंकसंग भएको कर्जाको सम्झौता वा शर्त कबुलियत पालना नगरेमा वा म्याद भित्र बैंकको कर्जा चुक्ता नगरेमा आवश्यकता अनुसार बैंकलाई लेखी दिएको धितो वा राखेको सुरक्षण बैंक मार्फत लीलाम बिक्री गर्नसक्ने अधिकारको समेत ऐनमा व्यवस्था गरियो।

**संस्थाहरूको स्थापनाका लागि जारी गरिएका विशेष ऐनहरू**

२०१० सालमा श्री ५ को सरकारले सहकारी विभाग खडा गरी सहकारी संस्था मार्फत कर्जा दिने संस्थागत व्यवस्था मिलायो। संस्थागत माध्यमबाट कृषि कर्जा प्रदान गर्न यसरी संचालित सहकारी संस्थाहरूलाई वित्तीय सहायता उपलब्ध गराउने उद्देश्यले २०१९ सालमा सहकारी बैंक ऐन, २०१९ अन्तर्गत सहकारी बैंकको स्थापना गरियो। २०२४ सालमा सहकारी बैंकलाई कृषि विकास बैंक ऐन, २०२४ अन्तर्गत एक विकास बैंकको रूपमा परिणत गरी तत्कालीन सहकारी बैंक ऐन, २०१९ समेत खारेज गरियो।

भूमि सुधार कार्यक्रम अन्तर्गत अनिवार्य बचत संकलन गर्ने र कृषि ऋण समेत वितरण गर्नसक्ने गरी छुट्टै संस्थाको रूपमा २०२३ माघ १ गतेदेखि कार्य गर्दैआएको भूमि सुधार बचत संस्थानलाई साउन २०३० मा कृषि विकास बैंकमा विलय गरी यसको सम्पत्ति र दायित्व समेत उक्त बैंकमा सारियो। कृषि विकास बैंक ऐन, २०२४ मा २०२८ साल, २०३० साल र २०३३ साल गरी तीनपटक भएको संशोधनबाट कृषि ऋण तथा लगानीबाई बढी सुलभ गराउने प्रयास भएको छ।

घरेलु तथा ग्रामीण उद्योगको लागि वित्तीय सहायता प्रदान गर्न २०१४ सालमा घरेलु ग्रामीण तथा साना उद्योग विभागको स्थापना गरियो। त्यसैवर्ष मझौला तथा ठूला उद्योगलाई प्राविधिक र वित्तीय सहायता प्रदान गर्न औद्योगिक विकास केन्द्रको गठन गरियो।

निजी क्षेत्रमा उद्योगहरूको प्रवर्द्धन तथा विस्तार गर्ने कार्यमा अरू तीव्रता ल्याउन आवश्यक पर्ने प्रविधिक तथा वित्तीय सहयोग प्रदान गर्न तत्कालीन औद्योगिक विकास केन्द्रलाई विघटन गरी नेपालको पहिलो विकास बैंकको रूपमा नेपाल औद्योगिक विकास कर्पोरेशन ऐन, २०१६ अन्तर्गत नेपाल औद्योगिक विकास कर्पोरेशनको गठन २०१६ सालमा भयो।

घरेलु तथा ग्रामीण उद्योगलाई ऋणदिने छुट्टै संस्थाको रूपमा कंपनी ऐन (संशोधन समेत), २०१९ अन्तर्गत २०२७ सालमा स्थापना भएको साना उद्योग विकास निगमलाई २०२८ सालमा नेपाल औद्योगिक विकास कर्पोरेशनमा नै विलय गरियो र केही समयसम्म यस कर्पोरेशनबाट यी उद्योगहरूलाई समेत ऋण प्रदान गर्ने व्यवस्था मिलाइएको थियो।

संचय कोष तथा बीमा व्यवसाय गर्ने संस्थाहरूको विकासले पनि देशको वित्तीय विकासमा महत्वपूर्ण भूमिका खेल्ने भएकोले

विशेष कानूनी व्यवस्थाद्वारा खडा भएको तत्कालीन सैनिक द्रव्य कोष र निजामती प्रोभिडेन्ट फण्डलाई गाभी कर्मचारी संचय कोष ऐन, २०१६ अन्तर्गत एक कोषको गठन भयो। २०२४ अघि अधिकांश बीमा व्यवसाय विदेशी कम्पनीहरूद्वारा संचालित थियो। राष्ट्रिय बीमा समिति ऐन, २०२४ र राष्ट्रिय बीमा संस्थान ऐन, २०२४ को व्यवस्थाले एक नीति निर्देशन दिने अधिकारसम्पन्न समिति र एक बीमा संस्थाको व्यवस्थाका लागि कानुनी आधार प्रदान गर्‍यो।

### अन्तर्राष्ट्रिय संघसंस्था सम्बन्धी ऐन

२०१८ सालसम्ममा राष्ट्रिय र वैदेशिक मुद्राको क्षेत्रमा भएका घटनाहरू र अन्तरराष्ट्रिय सहयोगको सिलसिलामा अन्तरराष्ट्रिय मुद्रा कोष र विश्व बैंक र यसका सहयोगी संस्थाहरूको सदस्यता ग्रहण गर्नु नेपालको लागि आवश्यक हुनगयो। अन्तर्राष्ट्रिय मुद्रा कोष र विश्व बैंकको सदस्यता ग्रहण गर्नुअघि केही शर्तहरू पूरा गर्नुपर्ने भएकोले २०१८ साउन ५ गते ब्रेटन उड्स सम्झौता ऐन, २०१८ को व्यवस्था भयो। क्रमिक आवश्यकता र परिवर्तित शर्तहरू अनुसार २०२७ र २०३४ सालमा यस ऐनमा दुईपटक संशोधन गरियो।

अन्तरराष्ट्रिय फाइनेन्स कर्पोरेशनको स्थापना र संचालनका निमित्त अन्तरराष्ट्रिय सम्झौताहरू स्वीकार गरी यसको सदस्यताका लागि चाहिने शर्तहरू पूरागर्न २०२२ सालमा अन्तरराष्ट्रिय फाइनेन्स कर्पोरेशनको सदस्यता प्राप्त गर्ने ऐन, २०२२ लागू गरियो।

### अन्य ऐन कानूनी व्यवस्था

अन्य केही महत्वपूर्ण ऐनहरूले बैंक तथा यस सम्बन्धी क्षेत्रको विस्तारमा प्रत्यक्ष वा अप्रत्यक्ष रूपबाट सहयोग पुर्‍याउँदै आएको छ। बचतलाई प्रोत्साहित गरी मुलुकको आर्थिक विकास र प्रगतिमा मद्दत पुर्‍याउने ऋणपत्रहरू निष्काशन गरी राष्ट्र ऋण उठाउने व्यवस्थाको लागि राष्ट्र ऋण ऐन, २०१७ को व्यवस्था भयो। यस ऐन अन्तर्गत राष्ट्र बैंकको सल्लाह लिई श्री ५ को सरकारले नियमहरू बनाउनसक्ने व्यवस्था गरिएको छ।

बैंकिङ कारोबारलाई सुव्यवस्थित गराउन विनिमेय अधिकार पत्रहरूको परिभाषा हुनु जरूरी देखियो। यसका लागि २०३४ पुस १८ गतेको लालमोहरबाट विनिमेय अधिकार पत्र ऐन, २०३४ को व्यवस्था गरियो।

विदेशी लगानी नियन्त्रण गर्नु आवश्यक भएकोले लगानी गर्न प्रतिबन्ध लगाउने ऐन, २०२१ लागू गरियो। यसमा गरिएको व्यवस्था अनुसार कुनैपनि नेपाली नागरिकले श्री ५ को सरकारले छुट दिएको सिमित र अवधि बाहेक अरू कुनै प्रकारबाट विदेशमा लगानी गर्न नपाउने भयो।

# ९ अन्य केही विकासमूलक क्रियाकलापहरू

आर्थिक विकासको निमित्त अपरिहार्य केही कार्यहरू सम्बन्धित निकायहरूबाट तत्काल हुननसक्ने हुंदा परम्परागत केन्द्रीय बैंकिंग भूमिकामा नपरे पनि नेपाल राष्ट्र बैंकले गर्ने गरिआएको छ। यस प्रसंगमा राष्ट्र बैंकले गरेका केही विशेष कामहरूको यहां चर्चा गरिन्छ।

**कृषि कर्जा**

संस्थागत कर्जालाई बढाउंदै लैजाने उद्देश्यले कृषि विकास बैंकको स्थापनाकालको शुरूमै रु. २५ लाखको शेयर खरीद गरी नेपाल राष्ट्र बैंकले कृषि विकासको क्षेत्रमा वित्तीय सहयोग पुऱ्याएको थियो। वित्तीय संस्थाहरूमा पूंजीको सहभागिता बढाउने दृष्टिले शेयर रकम बढाउंदै लगी आर्थिक वर्ष २०३३।३४ सम्ममा रु. ३ करोड पुऱ्याइयो। यो रकम कृषि विकास बैंकको हालको कुल शेयर पुंजीको २२.८७ प्रतिशत हुनआउंछ।

कृषि कर्जाको प्रचलित गैर संस्थागत ब्याज दर, कर्जा प्रवाहमा प्राथमिकता दिनुपर्ने क्षेत्र जस्तै सिंचाई, खाद्यान्न उत्पादन, नगदेबाली, पशुपालन आदि विषयमा व्यवस्थित अध्ययन र अनुसन्धानको कमी थियो। यस कमीलाई पूर्तिगर्न आर्थिक वर्ष २०२६।२७ मा यातायातको सुविधा पुगेका अधिराज्यका ३२ जिल्लामध्ये २२ जिल्लाका ५२ गाउं पंचायतमा कृषि कर्जा सर्वेक्षण गरियो। यो सर्वेक्षणबाट कृषि कर्जा सम्बन्धमा धेरै महत्वपूर्ण जानकारीहरू प्राप्त भए।

सर्वेक्षण वर्षमा कृषकवर्गलाई संस्थागत क्षेत्रबाट २१ प्रतिशत र निजी क्षेत्रबाट ७९ प्रतिशत कर्जा प्रदान भएको देखियो। यस्तो कर्जा परम्परागत खेतीका लागि चाहिने मात्राको केवल ५४ प्रतिशत मात्र हुनसकेको र त्यसमा पनि अधिकांश ठूला किसानले प्रयोग गरेको देखियो। उक्त वर्ष केवल ३८ प्रतिशत कृषक परिवारले कर्जा लिई ४४ प्रतिशत पारिवारिक खर्चमा, ३३ प्रतिशत पूंजीगत खर्चमा, १८ प्रतिशत मात्र खेतीपातीमा र बांकी अन्य खर्चमा उपयोग गरेको पाइयो। सर्वेक्षण वर्षमा लिएको कर्जा औसतमा प्रतिपरिवार रु. १३२ र सो वर्षको आखिरीसम्म तिर्न बांकी कर्जा रु. ४१६ देखियो।

उपर्युक्त स्थितिमा कृषि क्षेत्रमा संस्थागत कर्जा बढाउंदै लैजानु कम कठिन कुरो थिएन। नेपाल राष्ट्र बैंकमा यो काम गर्ने छुट्टै एक निकाय हुनुपर्ने सर्वेक्षण समितिको सिफारिस अनुसार २०२६ सालमा कृषि कर्जा विभागको स्थापना गरियो। यस विभागले प्रत्येक आर्थिक वर्ष शुरुहुनु अगावै कृषि विकास बैंकको वार्षिक योजना, श्री ५ को सरकारको कृषि विकास नीति, योजना आयोगको विकास लक्ष्य अनुरूप र देशमा विद्यमान मौद्रिक वित्तीय तथा मूल्य स्थितिलाई ध्यानमा राखी कृषि पुनरकर्जा योजना तैयार गर्दैआएको छ।

कृषि क्षेत्रलाई आवश्यक पर्ने कर्जा र अन्य सेवा सुविधा पुऱ्याउंदै आएका ४२५ सहकारी तथा निर्देशित ग्राम समितिमध्ये ६१ को आर्थिक वर्ष २०३०।३१ को गतिविधि अध्ययन गरी प्रतिवेदन प्रकाशित गरियो।

वाणिज्य बैंकहरूलाई आफ्नो निक्षेपको निश्चित रकम प्राथमिकता प्राप्त क्षेत्रमा लगानी गर्न निर्देशन दिइएपछि कृषि क्षेत्रमा पनि वाणिज्य बैंकहरूले लगानी गर्नुपर्ने भयो। वाणिज्य बैंकका कर्मचारीहरूमा खेतीपातीमा लाग्ने खर्चको प्राविधिक आधार अनुसारको ज्ञान र अनुभवको कमी भएको अवस्थामा परियोजना विश्लेषण गर्न सहयोग पुगोस् भन्ने दृष्टिले खेतीमा लाग्ने खर्च र हुनसक्ने आम्दानी सम्बन्धी कुराको अध्ययन गरी आर्थिक वर्ष २०३३।३४ मा वाणिज्य बैंकहरूलाई उपलब्ध गराइयो।

श्री ५ को सरकारले आर्थिक वर्ष २०३३।३४ मा ३० जिल्लामा साझा कार्यक्रम लागू गरी क्रमिक रूपले यसलाई देशव्यापी बनाउंदै-लाने नीति लिएपछि ग्रामीण स्तरीय वित्तीय संस्था साझा भएकोले र बैंकबाट प्रदान गरिने पुनरकर्जाको अधिकांश भाग उत्पादन कर्जाको रूपमा साझा संस्था मार्फत प्रयोग हुनेहुंदा साझा संस्थाको गतिविधि अध्ययन गर्नु आवश्यक अनुभव गरियो। तदनुरूप देशभर रहेका १०५८ साझामध्ये ११५ संस्थाको आर्थिक वर्ष २०३३।३४ को गतिविधि अध्ययन गरी प्रतिवेदन प्रकाशमा ल्याइयो।

कृषि कर्जा सर्वेक्षण सम्पन्न भएको सातवर्ष बितिसकेपछि सर्वेक्षणका सुझावहरू के कति कार्यान्वित भै कृषि क्षेत्रमा के कस्तो

## कृषि पुनरकर्जाको विवरण

(रु. करोडमा)

| अवधि | ०३२।०३३ | | | ०३३।०३४ | | | ०३४।०३५ | | | ०३५।०३६ | | | ०३६।०३७ | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | (१) | (२) | (३) | (१) | (२) | (३) | (१) | (२) | (३) | (१) | (२) | (३) | (१) | (२) | (३) |
| अल्पकालीन | ४.४७ | ३.४४ | ३.५० | ११.३२ | ७.५० | ७.१६ | १०.०० | १०.३३ | ९.८५ | १२.०० | १०.९६ | १३.९६ | ३.५९ | २.५६ | १५.२३ |
| मध्यमकालीन | १.२० | — | ०.२२ | ०.६८ | ०.२५ | ०.४० | ०.१० | ०.०८ | ०.४० | १.९९ | ०.८९ | १.१० | ०.५७ | ०.१६ | १.२५ |
| दीर्घकालीन | — | — | ०.३६ | — | ०.११ | १.४० | १.४० | १.१६ | २.४६ | १.२६ | ०.८६ | २.९४ | — | — | २.८४ |
| जम्मा | ५.६७ | ३.४४ | ४.०८ | १२.०० | ७.८६ | ८.९६ | ११.५० | ११.५७* | १२.७१ | १५.२५ | १२.७१ | १८.०० | ४.१६ | २.७२ | १९.३२ |

(१) स्वीकृत सीमा। (२) उपयोग गरेको रकम। (३) लगानीमा बाँकी रहेको।
*अल्पकालीन पुनरकर्जा रु. ७ करोडको उपसीमा रिवल्भिङ रूपमा स्वीकृत गरिएकोले बढी देखिएको।

परिवर्तन हुनसक्यो, कृषकहरूलाई संस्थागत कर्जा सेवा के कति पुऱ्याउन सकियो भन्ने जस्ता कुराहरूको जानकारी लिनु आवश्यक देखिएकोले अधिराज्यका १४ जिल्लामा आर्थिक वर्ष २०३३।३४ मा कृषि कर्जा (पुनरावलोकन) सर्वेक्षण संचालन गरी प्रतिवेदन प्रकाशमा ल्याइयो। प्रतिवेदन अनुसार संस्थागत कर्जा ४२ प्रतिशत र निजी क्षेत्रबाट गएको कर्जा ५८ प्रतिशत देखियो। कर्जा लिने ५१ प्रतिशत कृषक परिवारले ४५ प्रतिशत पूंजीगत खर्चमा, २८ प्रतिशत पारिवारिक खर्चमा, २२ प्रतिशत खेतीपातीमा र बाँकी अन्य खर्चमा उपयोग गरेको देखियो। संस्थागत र निजी दुबै क्षेत्रबाट लिइएको कर्जा प्रतिकृषक परिवार औसतमा रु. ५८६ पुगेको र सो वर्षको अन्तमा तिर्न बाँकी रु. ६०७ रहेको देखियो। संस्थागत कर्जाको सेवा र परिमाण बढ्दै गएको यस परिस्थितिमा दीर्घकालीन कर्जा नीति तर्जुमा गरी कार्यान्वयन गराउन कृषि कर्जा योजना संचालन गर्न सर्वेक्षण समितिले सुझाव दिएको छ।

सुझाव अनुसार चालु छैठौं योजनामा योजनाबद्ध रूपले कृषि कर्जा प्रदान गर्न र कर्जाको असरको समेत निरन्तर अध्ययन गर्न दीर्घकालीन कृषि कर्जा नीति तर्जुमा गर्न आवश्यक पर्ने सल्लाहकारको सेवा र कर्मचारीहरूको तालीम आदिका लागि आवश्यक व्यवस्था गरिएको छ।

### औद्योगिक कर्जा

"विकासको निमित्त पूंजीलाई गतिशील बनाई राज्यको उद्योग-धन्दालाई समेत प्रोत्साहन दिनु" नेपाल राष्ट्र बैंक स्थापनाको एक प्रमुख उद्देश्य थियो। केन्द्रीय बैंकले प्रत्यक्ष रूपमा उद्योगहरूलाई ऋण प्रदान गर्नसक्ने ऐनमा गरिएको व्यवस्था अनुरूप श्री ५ को सरकारको आंशिक वा पूर्ण स्वामित्वमा रहेका चुरोट कारखाना तथा चिनी कारखाना जस्ता औद्योगिक एकाईहरूलाई नेपाल राष्ट्र बैंक मार्फत प्रत्यक्ष वित्तीय सहयोग प्रदान गरेको थियो। प्रत्यक्ष लगानी गर्नसक्ने व्यवस्था खारेज भएपछि नेपाल राष्ट्र बैंकले औद्योगिक विकासमा प्रत्यक्ष सम्बन्ध राख्ने नेपाल औद्योगिक विकास कर्पोरेशनलाई कर्जाको रूपमा वित्तीय साधन उपलब्ध गराई उक्त कर्पोरेशन मार्फत औद्योगिक विकासमा वित्तीय साधन पुऱ्याउँदै आएको छ।

देशमा विद्यमान औद्योगिक वातावरणको पूर्ण जानकारी लिने, उद्योग स्थापनाको लागि सर्वेक्षण कार्य गर्ने, उद्योग सम्बन्धी विविध जानकारी हासिल गर्ने र आवश्यक सुझाव प्रदान गर्ने उद्देश्यले २०३१ सालमा औद्योगिक कर्जा शाखाको स्थापना भयो। औद्योगिक कर्जाको प्रवाहमा प्रत्यक्ष योगदान पुऱ्याउने हेतुले नेपाल औद्योगिक विकास कर्पोरेशनको उच्चस्तरीय कर्जा समिति र निगमको विभिन्न क्षेत्रीय कार्यालयहरूको कर्जा समितिहरूमा समेत नेपाल राष्ट्र बैंकको प्रतिनिधित्व रहिआएको छ।

रु. दुईलाखभन्दा बढी पूंजीमा स्थापना भई चालू रहेका उद्योगहरूको क्षमता उपयोगको यथार्थ स्थितिको जानकारी हासिल गर्न र उद्योगले भोग्नुपरेका कठिनाईहरूको समाधान समेत पत्ता लगाई सुझावहरू पेश गर्ने उद्देश्य राखी २०३४ सालमा औद्योगिक सर्वेक्षण कार्य संपन्न भयो। उक्त सर्वेक्षणमा १६४ विभिन्न उद्योगहरू-लाई समावेश गरिएको थियो।

विभिन्न औद्योगिक एकाईहरूलाई कर्पोरेशनले प्रदान गरेको ऋणको तमसुकको सुरक्षणमा २०३२।३३ देखि २०३६।३७ सम्म नेपाल राष्ट्र बैंकले रु. १२ करोडको पुनर कर्जा प्रदान गरेको छ। यसरी प्रदान भएको पुनरकर्जामध्ये २०३७ माघसम्म रु. ६ करोड ५० लाख उठ्न बाँकी छ।

नेपाल औद्योगिक विकास कर्पोरेशनसंग सुरक्षणको लागि ऋण तमसुकको अभाव रहेकोले अचल सम्पत्तिको धितोमा पनि यस बैंकले चालू आर्थिक वर्ष २०३७।३८ को निमित्त रु. ३ करोडको कर्जा रकम स्वीकृत गरेको छ।

**मूल्य तथ्यांक**

नेपाल राष्ट्र बैंकको स्थापनापछि मात्र नेपालमा आवश्यकीय उपभोग्य वस्तुहरूको खुद्रा बजार भाउ संकलन गर्ने कार्य शुरू भयो। काठमाडौंमा छानिएका १५ आवश्यकीय उपभोग्य वस्तुहरूको पाक्षिक खुद्रा मूल्य संकलन गर्नेगरी मूल्य संकलन कार्य प्रारम्भ भयो। देशको बढ्दो आर्थिक क्रियाकलाप अनुरूप २०१७ सालमा बजार भाउ संकलनको फेहरिस्तमा खाद्यान्न बाहेक मोटो कानाका कपडाहरू, मट्टीतेल आदि दैनिक जीवनयापनका लागि अत्यावश्यक केही वस्तुहरू समावेश गरी मूल्य संकलन गर्ने वस्तुहरूको संख्या १५ बाट बढाई ३१ सम्म पुऱ्याइयो र भाउ संकलन अवधि साप्ताहिक गरियो। २०१६ सालदेखि राष्ट्र बैंकका पहाड तथा तराईका कार्यालयहरूबाट पनि मूल्य संकलन गराइयो। २०२२ सालदेखि मूल्य संकलन फेहरिस्तको स्थायी व्यवस्था भयो र मूल्य संकलन गरिने वस्तुहरूको संख्या पनि ३१ बाट ४६ पुऱ्याइयो। राष्ट्रिय वाणिज्य बैंकको सम्पूर्ण शाखाहरूबाट पनि मूल्य संकलन गराई अनुसन्धान विभागमा पठाउनुपर्ने गरियो।

आर्थिक वर्ष २०२९।३० को शुरूदेखि प्रमुख तराई क्षेत्रका बजारहरूको निकटतम भारतीय बजारहरूबाट पनि वस्तु बजार भाउ तथा ज्याला सम्बन्धी तथ्यांकहरू सम्बन्धित क्षेत्रीय अनुसन्धान केन्द्र मार्फत संकलन गराउने व्यवस्था गरियो। २०३२ सालदेखि प्रमुख क्षेत्रीय अनुसन्धान केन्द्रहरू र केन्द्रबाट समेत कम्तीमा १३० देखि अधिकतम २०० सम्म वस्तुहरू तथा सेवा शुल्कहरूको मूल्य संकलन गर्ने व्यवस्था मिलाइयो।

२०१३ साल बैशाख १ गतेका वस्तुहरूको बजार भाउलाई आधार मानी २०१४ सालमा १५ प्रमुख उपभोग्य वस्तुहरू समावेश गरी काठमाडौंको अनाभारित मूल्य सूची विकास गरी प्रकाशित भएको थियो। २०१६ सालमा २०१७-१८ को औसत वार्षिक मूल्यलाई आधार मानी तराईका चार प्रमुख क्षेत्रहरू—वीरगञ्ज, विराटनगर, भैरहवा, नेपालगन्जलाई समावेश गरी तराई क्षेत्रको अनाभारित मूल्य सूची प्रकाशित गरियो। २०२० सालमा २०१८-१९ को औसत वार्षिक मूल्यलाई आधार मानी पहाडी क्षेत्र अन्तरगत पोखरा, भोजपुर तथा डोटीलाई समावेश गरी पहाडी क्षेत्रको समेत अनाभारित मूल्य सूची प्रकाशित भयो।

२०२३ सालमा काठमाडौं, पहाड तथा तराई क्षेत्रको अनाभारित मूल्य सूचीहरूलाई २०१८-१९ को आधार वर्षमा परिणत गरी यी मूल्य सूचीहरूको औसत मूल्य सूचीलाई अखिल नेपाल अनाभारित मूल्य सूचीको नामाकरण गरी मूल्य सूची प्रकाशित गर्नेगरियो।

## शहरी क्षेत्रको राष्ट्रिय उपभोक्ता मूल्य सूची

(आधार वर्ष २०२९।३०=१००)

| आर्थिक वर्ष | सबै वस्तुहरू | खाद्य वस्तुहरू | गैर खाद्य वस्तुहरू |
|---|---|---|---|
| २०३०।३१ | ११८.२ | १२२.१ | १०६.५ |
| २०३१।३२ | १३८.० | १४१.४ | १३०.३ |
| २०३२।३३ | १३७.० | १३५.७ | १३६.८ |
| २०३३।३४ | १४०.७ | १३६.१ | १४६.६ |
| २०३४।३५ | १५६.४ | १५६.४ | १५६.२ |
| २०३५।३६ | १६१.८ | १५८.८ | १६७.८ |
| २०३६।३७ | १७७.६ | १७६.२ | १८०.७ |
| २०३७।३८ | | | |
| पहिलो चयमास | १९९.८ | २००.५ | १९८.७ |
| दोस्रो चयमास | १९९.४ | १९८.४ | २०२.१ |

स्रोत : नेपाल राष्ट्र बैंक।

## शहरी क्षेत्रको राष्ट्रिय उपभोक्ता मूल्य सूची

(आधार वर्ष २०२९/३०=१००.००)



२०२१ सालमा केन्द्रीय तथ्यांक विभागद्वारा काठमाडौंको उपभोक्ता मूल्य सूची प्रकाशित गर्नुभन्दा यी मूल्य सूचीहरू नै देशको मूल्य प्रवृत्तिबारे जानकारी दिने प्रमुख साधन थिए। केन्द्रीय तथ्यांक विभागद्वारा उपत्यकाका तीनै शहरको उपभोक्ता मूल्य सूची तैयार पार्ने र प्रकाशन गर्ने कार्य २०२१ सालदेखि शुरू गरिएपछि पनि क्षेत्रगत मूल्य सूची तयार पार्ने कार्य अन्य कुनै पनि निकायहरूबाट नभएको हुंदा नेपाल राष्ट्र बैंकद्वारा तराई तथा पहाडी क्षेत्रका अनाधारित मूल्य सूचीहरू संकलन गर्ने कार्यलाई कायम नै राखियो।

केन्द्रीय तथ्यांक विभागद्वारा २०२३ सालदेखि नै मूल्य सूची विकास गर्नेतर्फ कारवाही हुंदै आए तापनि २०२५ सालसम्म पनि विभागको योजना कार्यरूपमा परिणत हुनसकेन। उपभोक्ता मूल्य सूची सम्बन्धी तथ्यांकहरूको देशमा बढ्दै गएको मागलाई दृष्टिगत गरी नेपाल राष्ट्र बैंकले २०२५ सालमा श्री ५ को सरकार, केन्द्रीय तथ्यांक विभाग, खाद्य कृषि मन्त्रालय, आर्थिक विश्लेषण तथा योजना शाखा र नेपाल राष्ट्र बैंकका प्रतिनिधिहरू सहितको एक "मूल्य सूची सुधार समिति" गठन गऱ्यो। समितिको निर्णय अनुरूप खुद्रा मूल्य सम्बन्धी कार्य केन्द्रीय तथ्यांक विभागद्वारा, कृषिजन्य वस्तुहरूको खलिहान मूल्य खाद्य कृषि मंत्रालयद्वारा र थोक मूल्य सूची सम्बन्धी कार्य राष्ट्र बैंकद्वारा गरिनु बढी उपयुक्त हुने देखियो। तर समितिको निर्णय कार्यरूपमा परिणत हुनसकेन र केही वर्षसम्म राष्ट्र बैंकले आफ्नो कार्य यथावत नै संचालन गरिरहनु पऱ्यो। यसैबीच श्री ५ को सरकारद्वारा गठित "उच्चस्तरीय मूल्य व्यवस्था समिति" ले पारिवारिक बजेट सर्वेक्षण कार्य खाद्य कृषि मन्त्रालय र केन्द्रीय तथ्यांक विभागको समेतको सहयोगमा राष्ट्र बैंकद्वारा संचालन गर्ने भन्ने निर्णय गरे अनुरूप २०२८ सालमा पारिवारिक बजेट सर्वेक्षण समिति गठन भयो। मूल्य सूची विकासको लागि चाहिने आधारभूत तथ्यांक संकलन गर्ने कार्य संचालन गर्न पारिवारिक बजेट सर्वेक्षण योजना कार्यालयको छुट्टै व्यवस्था भई आर्थिक वर्ष २०३०।३१-२०३१।३२ भित्रमा योजना कार्यालयद्वारा पारिवारिक बजेट सर्वेक्षण समितिद्वारा स्वीकृत कार्यक्रम अनुरूप प्रथम चरणमा छानिएका ११ नगर पंचायत तथा विकास केन्द्रहरूमा र द्वितीय चरणमा छानिएका ७ क्षेत्रमा सर्वेक्षण संचालन गरी २०३३ मंसीरसम्ममा सम्पूर्ण क्षेत्रहरूको सर्वेक्षण प्रतिवेदन तयार भयो।

यसप्रकार भारित उपभोक्ता मूल्य सूची विकास गर्न प्रारंभिक रूपमा संचालन हुनुपर्ने सर्वेक्षण कार्य पूरा भै "भार" विकास गर्ने कार्य पनि पूरा भएकोले २०३२ साल असोजमा अनुसन्धान विभाग अन्तरगत "मूल्य सूची विकास शाखा" स्थापना भयो। यस शाखाद्वारा काठमाडौं, वीरगन्ज, विराटनगर, भैरहवा, नेपालगन्ज, पोखरा, धोबलडुंगा, इलाम, हेटौंडा र सुर्खेत गरी जम्मा १० क्षेत्रको उपभोक्ता मूल्य सूची विकास गरी त्यसको आधारमा क्षेत्रीय तथा राष्ट्रिय उपभोक्ता मूल्य सूची विकास गर्ने कार्य २०३४ भदौमा पूरा भयो। मूल्य महाशाखाको स्थापना पश्चात् २०३५ असारदेखि तराईका केही प्रमुख बजारहरूबाट र २०३७ साउनदेखि काठमाडौंको बजारबाट समेत थोक मूल्य संकलन गर्ने कार्यको थालनी भई मासिक रूपमा प्रकाशन गर्ने व्यवस्था मिलाइयो। त्यस्तै २०३७ साल साउनदेखि काठमाडौं लगायत तराईका विभिन्न बजारहरूबाट केही प्रमुख निर्माण तथा विकास सामग्रीहरूको समेत मूल्य संकलन गर्ने कार्यको शुरुवात गरियो।

**बैंकर्स प्रशिक्षण केन्द्र**

केन्द्रीय बैंकको हैसियतले नेपाल राष्ट्र बैंकले अन्य बैंक तथा वित्तीय संस्थाहरूलाई नियन्त्रणको दृष्टिकोणबाट मात्र नहेरी संस्थाहरूको कामकारवाहीमा सामन्जस्यता ल्याई गुणात्मक अभिवृद्धि गर्ने र राष्ट्रिय हितको निमित्त यी संस्थाहरूको क्रियाकलापहरू विकासोन्मुख बनाउने कार्यमा पनि संलग्न रहनु त्यत्तिकै महत्वपूर्ण हुनआउंछ। बैंकिंग सेवाको उत्पादकत्व बढाई राष्ट्रिय विकासको आकांक्षा अनुरूप काम गर्न नेपालको बैंकिंग व्यवस्थाको निमित्त प्रशिक्षित कर्मचारीहरूको अभाव हुंदा एकातिर बैंकको आफ्नो संचालन खर्चहरू बढ्न गई लाभ कम हुनजाने र अर्कोतिर नयां प्रयोग र ज्ञानको अनभिज्ञताले गर्दा विकासक्रम अन्तर्गतका प्राथमिक क्षेत्रहरू उपेक्षित रहन गई प्रयोजनपूर्ण नहुने हुंदा यो अभावको परिपूर्ति गर्ने उद्देश्य लिएर २०२७ साल वैशाखमा नेपाल राष्ट्र बैंक, बैंकर्स प्रशिक्षण केन्द्रको स्थापना गरियो।

शुरुमा बैंकर्स प्रशिक्षण केन्द्रले बैंक तथा वित्तीय संस्थाहरूका सहायकस्तरीय कर्मचारीहरूको निमित्त साधारण बैंकिंग विषय ३ महीने कार्यक्रम संचालन गरेको थियो। २०२६ साल पुस महीनामा केन्द्रले अधिकृतस्तरीय साधारण बैंकिंग तालीम पनि प्रारम्भ गऱ्यो।

केन्द्रको क्रियाकलापलाई समयानुकूल विस्तार गर्ने उद्देश्यले प्रभावकारी तालीमहरू संचालन गर्न २०३० सालमा अन्य बैंक तथा वित्तीय संस्थाहरूका अधिकृतहरूलाई पनि केन्द्रको प्रशिक्षकको रूपमा करीब २ वर्षसम्मलाई काजमा थोलाई प्रशिक्षण कार्यक्रमहरूमा विविधीकरण गरी कार्यक्रमहरू संचालन गरिएको थियो। सम्बन्धित बैंक तथा वित्तीय संस्थाहरूको तालीम आवश्यकता अध्ययन गरी सोही अनुसार पाठ्यक्रमहरू तर्जुमा गरी कार्यक्रम संचालन हुनथालेपछि तालीमप्रति सम्बन्धित निकायहरूको अभिरूचिमा वृद्धि हुंदैगयो। तत्कालीन आवश्यकता अनुसार बैंकर्स प्रशिक्षण केन्द्रले देशका वाणिज्य बैंकहरू, कृषि विकास बैंक, नेपाल औद्योगिक विकास कर्पोरेशन तथा अन्य कतिपय संस्थाहरू र श्री ५ को सरकारको केही विभागहरूलाई पनि तालीम सुविधा उपलब्ध गराउने गरेको थियो।

केन्द्रको गतिविधिमा विविधता ल्याउने र संचालित कार्यक्रमहरूबाट सम्बन्धित संस्थाको कामकारवाहीमा प्रभावकारी परिणाम



**बैंकर्स प्रशिक्षण केन्द्र : गभर्नरद्वारा तालीम कक्षाको उद्घाटन**

ल्याउने उद्देश्यले बेलाबेलामा देशभित्रका र छिमेकी मुलुकका तत्सम्बन्धी विशेषज्ञहरूलाई समेत सल्लाहकारको रूपमा आमन्त्रण गरी प्रशिक्षण सम्बन्धी कार्यक्रमको तर्जुमा, विषयवस्तुको चयन, समयानुकूल प्रशिक्षण प्रविधिहरूको विकास तथा विस्तार गरी प्रशिक्षण व्यवस्थापनमा गतिशीलता ल्याउने केन्द्रले प्रयास गर्दै आएको छ।

शुरूमा ३ जना प्रशिक्षकबाट कार्य संचालन गरिआएकोमा हाल ६ जनाबाट कार्यसंचालन भई केन्द्रको कार्य विस्तृत हुँदैछ। प्रायः सबैजसो प्रशिक्षक अधिकृतहरूले प्रशिक्षण प्रविधि तथा व्यवस्थापन विषयमा तालीम प्राप्त गरेका छन्। केन्द्रद्वारा संचालित तालीम कार्यक्रमहरूबाट कर्मचारीहरूको वृत्तिविकास र कार्य-कुशलताको अभिवृद्धिमा निकै सघाउ पुगेको छ।

हाल संचालन गर्नेगरिएका कार्यक्रमहरूमा नेपाल राष्ट्र बैंकका उच्च अधिकृतहरूको निमित्त प्रभावकारी व्यवस्थापन विषयको करीब १० दिने गोष्ठी, मध्यमस्तरीय व्यवस्थापन विषय २ हप्ते गोष्ठी, साधारण बैंकिंग विषय अधिकृतस्तरीय एक महीने तालीम, प्राथमिकता प्राप्त क्षेत्रको विकास विषय एक महीने तालीम, प्रारंभिक बैंकिंग विषय प्रधान सहायक तथा सहायकस्तरीय एक महीने तालीम, केन्द्रीय बैंकिंग विषय प्रधान सहायक तथा सहायकस्तरीय एक महीने तालीम, राष्ट्र ऋण, विदेशी विनिमय तथा सरकारी कारोबार विषय एक महीने तालीम, नेपाल राष्ट्र बैंकको लेखा पद्धति विषय प्रधान सहायक तथा सहायक स्तरीय १५ दिने तालीम आदि प्रमुख छन्। यसका अतिरिक्त केन्द्रले आफ्नो वार्षिक कार्यक्रम तर्जुमा गर्दा प्रत्येक वर्ष सम्बन्धित संस्थाको माग तथा आवश्यकता अनुसार नयां विषयको तालीम कार्यक्रम तर्जुमा गर्ने गरिआएको छ। वाणिज्य बैंकहरूलाई प्राथमिकता प्राप्त क्षेत्रमा कर्जा लगानी गर्दा आवश्यक पर्ने परियोजनाको तर्जुमा, विश्लेषण, मूल्यांकन प्रविधि जस्ता विषयहरूमा तालीम कार्यक्रम संचालन गर्ने पनि बैंकर्स प्रशिक्षण केन्द्रले लक्ष्य लिएको छ।

स्थापनाकालदेखि २०३७ साल फागुन मसान्तसम्ममा केन्द्रले अधिकृत विशिष्टदेखि अधिकृत "ग" स्तरसम्मका लागि ४४ अधिकृत स्तरीय कार्यक्रम, प्रधान सहायक तथा सहायकस्तरका विभिन्न विषय र अवधिका ९२ गरी जम्मा १३६ कार्यक्रम संचालन गरिसकेको छ। हालसम्ममा केन्द्रले सबै कार्यक्रममा गरी जम्मा २८१४ कर्मचारीलाई तालीममा सरिक गराएको छ। नेपाल राष्ट्र बैंकका २९२, नेपाल बैंक लिमिटेडका २०७, राष्ट्रिय वाणिज्य बैंकका १८६ र अन्य संस्थाहरू जस्तै कृषि विकास बैंक, नेपाल औद्योगिक विकास कर्पोरेशन, कर्मचारी संचय कोष, राष्ट्रिय बीमा संस्थान, कृषि सामग्री संस्थान, नेपाल खाद्य संस्थान, कृषि आयोजना सेवा केन्द्र, औद्योगिक सेवा केन्द्र, शाही नेपाल वायुसेवा निगम, श्री ५ को सरकार, अर्थ मन्त्रालय, घरेलु तथा ग्रामीण उद्योग विभाग, सहकारी विभाग, राष्ट्रिय व्यापार निगम, कर्जा सुरक्षण निगम समेतका ११७ जना अधिकृत गरी जम्मा ७२२ अधिकृतले केन्द्रको तालीम कार्यक्रममा भाग लिइसकेका छन्। त्यस्तै प्रधान सहायक तथा सहायकस्तरीय विभिन्न कार्यक्रमहरूमा नेपाल राष्ट्र बैंकका ८२१, नेपाल बैंक लिमिटेडका ५१६, राष्ट्रिय वाणिज्य बैंकका ४३१, अन्य संस्थाहरूमा कृषि विकास बैंक, नेपाल औद्योगिक विकास कर्पोरेशन, कर्मचारी संचय कोष, कृषि सामग्री संस्थान, राष्ट्रिय बीमा संस्थान, राष्ट्रिय व्यापार निगम, अर्थ मन्त्रालय, सहकारी विभाग, घरेलु तथा ग्रामीण उद्योग विभाग, नेपाल इन्स्योरेन्स एण्ड ट्रान्सपोर्ट कम्पनी, नेपाल खाद्य संस्थान, सिक्योरिटी खरीद बिक्री केन्द्र समेतका ३२१ गरी जम्मा २०९२ कर्मचारीले तालीम हासिल गरिसकेका छन्।

# १० आन्तरिक संगठन र कार्यव्यवस्था

### संगठनात्मक स्वरूप

नेपाल राष्ट्र बैंक ऐन २०१२ को प्रस्तावनामा बैंक स्थापनाको उद्देश्य र यसको उत्तरदायित्व सम्बन्धमा (१) नेपाली नोट निष्काशनको सुप्रबन्ध गर्नु (२) नेपाली मुद्रा चलनचल्तीमा ल्याउने सुव्यवस्था मिलाउनु (३) विनिमय दरमा स्थिरता कायम राख्नु (४) विकासको निम्ति पूँजीलाई गतिशील बनाई उद्योग–धन्धालाई प्रोत्साहन दिनु (५) नेपालमा बैंक प्रथाको विकास गराउनु—जस्ता कुराहरू उल्लेख गरिएको छ।

उपर्युक्त निर्धारित उद्देश्यको कार्यान्वयनका लागि ऐनको परिच्छेद ३ (समयसमयमा भएको संशोधन सहित) मा राष्ट्र बैंकको काम-कारवाही स्पष्ट गरिएको छ। यस अनुसार नोट निष्काशन, सरकारी कारोबार, पूँजीको परिचालन र राष्ट्र ऋणको व्यवस्था, विदेशी विनिमय, बैंकिंग व्यवस्था र कर्जा नियन्त्रण, बैंकिंग प्रथा विकसित गराउने र अन्य बैंकहरूलाई कर्जा दिने, बैंक तथा वित्तीय संस्थाहरूको रेखदेख गर्ने र निर्देशन दिने, बैंक दर तोक्ने जस्ता कामहरूको दायित्व नेपाल राष्ट्र बैंकमाथि रहेको छ।

माथि उल्लिखित कामकारवाहीहरू सुचारूरूपले संचालन गर्न संगठनको माथिल्लो एकाईको रूपमा संचालक समिति रहेको छ र समितिको अध्यक्षको रूपमा गभर्नर तथा सदस्यको रूपमा दुई डेपुटी गभर्नर र श्री ५ को सरकारद्वारा मनोनीत अन्य ४ जना सदस्य रहने कुरा ऐनले नै व्यवस्थित गरेको छ। संचालक समितिद्वारा निर्धारित नीतिहरूको कार्यान्वयन गभर्नरद्वारा हुन्छ र दुई डेपुटी गभर्नरले सहायकको रूपमा गभर्नरको कामकारवाहीमा सहयोग पुयाउंदछन्।

बैंकको कार्यलाई सुव्यवस्थित रूपले संचालन गर्न खडा गरिएका विभिन्न विभागहरूलाई दुई डेपुटी गभर्नर मातहत रहने गरी विभाजन गरिएको छ र तदनुरूप आफू सम्बन्धित विभागहरूको रेखदेख र निर्देशन डेपुटी गभर्नरहरूद्वारा हुन्छ।

राष्ट्र बैंकको सर्वोच्च प्रशासकको रूपमा वर्तमान गभर्नर समेत गरी हालसम्म ८ जना व्यक्तिले बैंकको गभर्नरको कार्यभार सम्हाली सक्नुभएको छ। डेपुटी गभर्नरको रूपमा ५ जनाले आफ्नो सेवा बैंकलाई प्रदान गर्नुभएको छ।

**गभर्नरहरू**

| नाम | कार्यकाल |
|---|---|
| १. श्री हिमालय शमशेर ज. ब. रा. | (२०१३-२०१७) |
| २. श्री लक्ष्मीनाथ गौतम | (२०१७-२०२२) |
| ३. श्री प्रद्युम्नलाल राजभण्डारी | (२०२२-२०२३) |
| ४. डा. भेषबहादुर थापा | (२०२३-२०२४) |
| ५. डा. पुष्करनाथ पन्त* | (२०२४-२०२५) |
| ६. डा. यादवप्रसाद पन्त | (२०२५-२०३०) |
| ७. श्री कुलशेखर शर्मा | (२०३०-२०३५) |
| ८. श्री कल्याणविक्रम अधिकारी (वर्तमान) | (२०३६- ) |

* कायममुकायम गभर्नर

**डेपुटी गभर्नरहरू**

| नाम | कार्यकाल |
|---|---|
| १. श्री धीरविक्रम शाह | (२०२६-२०३१) |
| २. श्री कुमारदास श्रेष्ठ | (२०२६-२०३१) |
| ३. श्री दुर्धीर शमशेर थापा (वर्तमान) | (२०३१- ) |
| ४. श्री गणेशबहादुर थापा | (२०३१-२०३५) |
| ५. श्री ईश्वरीराज पाण्डे (वर्तमान) | (२०३६- ) |



संचालक समितिको बैठक



नेपाल राष्ट्र बैंकको केन्द्रीय सभाकक्ष

कानूनी व्यवस्था अनुसार नोट निष्काशन गर्ने कार्यका लागि नोट विभाग र अन्य बैंकिंग कार्यका लागि बैंकिंग विभागको स्थापना शुरुमै भएको थियो भने बैंकको आन्तरिक सुदृढीकरणका लागि केन्द्रीय कार्यालय अन्तर्गत अरु विभागहरू क्रमशः पछि खुल्दै गए। आर्थिक अनुसन्धानात्मक कार्यका लागि शुरुमा सानो रूपमा रहेको अनुसन्धान एकाई थोरै वर्षपछि नै एक सुसंगठित विभागमा परिणत भयो। राष्ट्र बैंकका विभिन्न कार्यालयहरूको निरीक्षण गरी बैंकको आन्तरिक कार्य व्यवस्थालाई बढी सुसंगठित पार्ने सुझाउ प्रस्तुत गर्ने र बैंकको आन्तरिक लेखा परीक्षकको रूपमा समेत काम गर्ने निरीक्षण तथा चेक विभाग (हाल निरीक्षण विभाग) को स्थापना २०१४ सालमा भयो। बढ्दै गएको प्रशासनिक कार्यलाई सुव्यवस्थित गर्ने प्रशासन विभाग (हाल कर्मचारी प्रशासन विभाग) र बैंकको आय-व्यय सम्बन्धी हिसाबलाई व्यवस्थित रूपले राख्न हिसाब विभाग (हाल लेखा तथा खर्च विभाग) को स्थापना २०१५ सालमा भयो। यसपछि २०१६ सालमा विदेशी एजेन्सी विनिमय र लगानी विभाग (हाल विदेशी विनिमय विभाग) र २०१६ सालमा राष्ट्र ऋण विभाग खुल्यो।

राष्ट्रिय वाणिज्य बैंक स्थापना भएपछि देशमा स्वस्थ बैंकिंग परम्पराको विकास गर्ने उद्देश्यले बैंक व्यवस्था तथा विकास विभाग (हाल बैंकिंग विकास तथा कर्जा विभाग) को स्थापना २०२३ सालमा भयो। पहिले प्रशासन विभागभित्र रहेको कानूनी एकाईलाई २०२५ सालमा एक छुट्टै विभागको रूपमा परिणत गरियो। अध्ययन अनुसन्धानको माध्यमबाट देशको कृषि क्षेत्रको विकासमा सघाउ पुऱ्याउने हेतुले २०२६ सालमा कृषि कर्जा विभागको स्थापना गरियो। खर्चको निकासा तथा सम्भार कार्यलाई प्रशासन विभागबाट अलग गराई तत्सम्बन्धी कार्य एक छुट्टै एकाईद्वारा गराउने गरी सामान्य सेवा विभाग खडा भयो र बैंकको वार्षिक बजेटको तर्जुमा र खर्च पद्धतिलाई स्वस्थ रूपबाट नियन्त्रण गर्ने उद्देश्यले बजेट नियन्त्रण शाखा खुल्यो।

बैंकिंग विकास, कर्जा नियन्त्रण, प्राथमिकता प्राप्त क्षेत्र, तथ्यांक प्रशोधन, वाणिज्य बैंकहरूको निरीक्षण, तथा औद्योगिक विकास सम्बन्धी कार्यहरू बैंकिंग विकास तथा कर्जा विभागबाट नै भइरहेकोमा तत्सम्बन्धी कामहरूलाई बढी दक्षतापूर्वक संचालन गर्न यसै विभाग अन्तर्गत रहने गरी बैंक व्यवस्था महाशाखा, बैंक निरीक्षण महाशाखा र औद्योगिक कर्जा शाखाहरू खुले। कृषि कर्जा विभाग पनि कृषि कर्जा महाशाखाको रूपमा यसै विभाग अन्तर्गत रह्यो।

देशको शोधनान्तर स्थितिको विभिन्न पक्षको अध्ययन गरी यसलाई प्रकाशमा ल्याउने तथा देशका विभिन्न क्षेत्रको मूल्य स्थितिको जानकारी लिई मूल्य सूची तयार गर्ने उद्देश्यले अनुसन्धान विभाग अन्तर्गत रहने गरी शोधनान्तर महाशाखा तथा मूल्य सूची विकास महाशाखाका अतिरिक्त बैंकको संगठनात्मक विकासका लागि नियमित अध्ययन गरी सुझाउ सल्लाह दिन कर्मचारी प्रशासन विभाग अन्तर्गत संगठन तथा कार्य प्रणाली महाशाखा पनि स्थापना गरियो।

नेपाल राष्ट्र बैंकका साथै अन्य बैंक तथा वित्तीय संस्थाहरूका कर्मचारीहरूलाई विभिन्न विषयका तालीमहरूको माध्यमबाट उनीहरूको कार्यक्षमतामा वृद्धि गरी संस्थागत कामकारवाहीलाई समयानुकूल बनाउने उद्देश्यले यसअघि २०२७ सालमै बैंकमा प्रशिक्षण केन्द्रको स्थापना भैसकेको थियो।

शुरुदेखि नै गभर्नरको कार्यालयको नामले एक छुट्टै कार्यालय रहेको भए तापनि यसको संगठनात्मक स्वरूपलाई विस्तृत रूप दिने काम २०२७ सालमा भयो। यस कार्यालयले गभर्नर र अन्य विभागहरू बीच एक महत्वपूर्ण सम्पर्कसूत्रको रूपमा काम गर्दछ।

बढ्दै गएको विभागीय कामकर्तव्य र उत्तरदायित्वलाई ध्यानमा राखी हाल अधिकांश विभागहरू विशिष्ट अधिकृत मातहत रहने व्यवस्था गरिएको छ। गभर्नर समक्ष नियमित रूपमा विभागीय प्रमुखहरू भेलाभई विभागीय कामकारवाहीमा भएको प्रगति अवगत गराउने परिपाटी कायम गरिनुका साथै विभागीय प्रमुखहरूले आफ्नो मातहतका अधिकृतहरूसंग नियमित छलफल गरी विभागीय गतिविधिलाई अघि बढाउने परम्परा बसालिएको छ।

राष्ट्र बैंकको स्थापनादेखि नै आवश्यकता अनुरूप काठमाडौं उपत्यका बाहिरका जिल्लाहरूमा बैंकले आफ्नो कार्यालयहरू स्थापना गर्न शुरु गरिसकेको थियो। २०१३ सालदेखि शुरु भएको कार्यालय विस्तारको क्रम २०२२ सालसम्म रह्यो। यस अवधिमा विराटनगर, वीरगंज, भैरहवा, नेपालगंज र अन्य तराई क्षेत्रहरूका अतिरिक्त इलाम, भोजपुर, धनकुटा, पोखरा, पाल्पा, बैतडी, डोटी जस्ता पहाडी क्षेत्रहरूमा शाखा, उपशाखा, प्रशाखा तथा डिपोको रूपमा कुल २७ कार्यालय स्थापना भएका थिए। त्यसबेला देशको एउटै मात्र वाणिज्य बैंकले आवश्यकता अनुरूप बैंकिंग सेवा पुऱ्याउन नसकेकाले यसको व्यापक आवश्यकतालाई ध्यानमा राखी २०२२ सालमा राष्ट्रिय वाणिज्य बैंकको स्थापना भएपछि यस बैंकले राष्ट्र बैंकको एजेन्टको रूपमा श्री ५ को सरकारको समेत कारोबार गर्नेभयो। तदनुरूप उक्त बैंकलाई सक्षम जनशक्ति उपलब्ध गराइ शुरुमै संगठित रूपबाट कार्य गराउन राष्ट्र बैंकका कार्यालयहरू यसै बैंकलाई हस्तान्तरण गर्ने प्रक्रियाको थालनी भयो। हालसम्म विभिन्न स्थानका कुल १६ कार्यालय राष्ट्रिय वाणिज्य बैंकमा हस्तान्तरण भैसकेका छन्। हाल निम्न स्थानहरूमा नेपाल राष्ट्र बैंकका कार्यालयहरू कार्यरत छन्।

| शाखा कार्यालय | उपशाखा कार्यालय | प्रशाखा कार्यालय | सटही प्रबन्ध टोली कार्यालय |
|---|---|---|---|
| १। काठमाडौं बैंकिङ कार्यालय | १। जनकपुर उपशाखा | १। इलाम प्रशाखा | १। सटही प्रबन्ध टोली कार्यालय भद्रपुर |
| २। विराटनगर शाखा | २। पोखरा उपशाखा | | २। सटही प्रबन्ध टोली कार्यालय [illegible] |
| ३। वीरगंज शाखा | ३। कैलाली उपशाखा | | ३। सटही प्रबन्ध टोली कार्यालय गौरीहुवा |
| ४। भैरहवा शाखा | | | |
| ५। नेपालगंज शाखा | | | |



गभर्नरद्वारा डेपुटी गभर्नर तथा विभागीय प्रमुखहरूसंग छलफल

# नेपाल राष्ट्र बैंक

## संगठन तालिका

### संचालक समिति

अध्यक्ष तथा गभर्नर

सदस्य, सदस्य, सदस्य, सदस्य, डेपुटी गभर्नर, डेपुटी गभर्नर

केन्द्रीय कार्यालय

गभर्नरको कार्यालय

**डेपुटी गभर्नरको कार्यालय**

- कर्मचारी प्रशासन विभाग
- सामान्य सेवा विभाग
- कानून विभाग
- नोट विभाग
- निरीक्षण विभाग

**डेपुटी गभर्नरको कार्यालय**

- अनुसन्धान विभाग
- विदेशी विनिमय विभाग
- बैंकर्स प्रशिक्षण केन्द्र
- लेखा तथा खर्च विभाग
- बैंकिङ्ग विकास तथा कर्जा विभाग
- राष्ट्र ऋण विभाग

काठमाडौं बैंकिङ कार्यालय — विराटनगर शाखा — वीरगंज शाखा — भैरहवा शाखा — नेपालगंज शाखा

जनकपुर उपशाखा — पोखरा उपशाखा — कैलाली उपशाखा

इलाम प्रशाखा

टोली कार्यालय भद्रपुर — टोली कार्यालय मलंगवा — टोली कार्यालय तौलिहवा

### कर्मचारी संख्या

गभर्नर तथा चिफ एकाउन्टेण्टका अतिरिक्त ५ अधिकृत र १६ अन्य कर्मचारी गरी कुल २३ जनशक्तिबाट बैंकको कार्य प्रारम्भ भएको थियो। शाखा विस्तारको क्रमसँगै कर्मचारीहरूको संख्या पनि बढ्दै गयो। यसपछि क्रमिक रूपबाट विस्तृत हुँदैगएको बैंकको कार्यक्षेत्र र विभागीय संगठनमा भएको विस्तारले गर्दा कर्मचारीहरूको संख्यामा पनि लगातार वृद्धि हुँदै गैरहेको छ। बैंकको कार्य संचालनमा हाल विभिन्न तहका पुगनपुग २१०० स्थायी कर्मचारी संलग्न रहेका छन्। शुरुदेखि हालसम्ममा कर्मचारी-हरूको संख्यामा अनुमानातीत वृद्धि भएको छ। तह अनुसार कर्मचारीहरूको संख्या हाल निम्नानुसार छ।

| तह | संख्या |
|---|---|
| अधिकृत "विशिष्ठ" | १४ |
| अधिकृत "क" | २७ |
| अधिकृत "ख" | ६० |
| अधिकृत "ग" | १३३ |
| प्रधान सहायक स्तर | २६६ |
| सहायक स्तर | ८०१ |
| अन्य स्तर | ७६० |
| कुल | २०६१ |

### प्रकाशनहरू

देशको आर्थिक, मौद्रिक तथा बैंकिंग स्थिति प्रतिबिम्बित हुने-गरी नेपाल राष्ट्र बैंकले नियमित रूपमा विभिन्न प्रकाशनहरू प्रकाशित गर्नेगरेको छ। वार्षिक आर्थिक प्रतिवेदन; बैंकको कामकाज र हरहिसाबबारेको वार्षिक प्रतिवेदन; नेपाल राष्ट्र बैंक—त्रैमासिक बुलेटिन; मासिक, मेन इकोनोमिक इण्डिकेटर्स जस्ता प्रकाशनहरू अनुसन्धान विभागको प्रकाशन एकाईबाट प्रकाशित हुन्छन्। यसका अतिरिक्त कर्मचारी प्रशासन विभागबाट मासिक नेपाल राष्ट्र बैंक—समाचार, बैंकर्स प्रशिक्षण केन्द्रबाट त्रैमासिक बैंकर्स प्रशिक्षण तथा बैंक व्यवस्था महाशाखाबाट अर्धवार्षिक बैंकिंग तथ्यांक प्रकाशित गरिन्छ।

बैंकर्स क्लबको आफ्नै दुई प्रकाशन छन्—आर्थिक तथा साहित्यिक सामयिक संकलन द्वैमासिक–मिर्मिरे तथा वर्षको ३ पटक प्रकाशित हुने आर्थिक प्रकाशन–नेपालीज इकोनोमिक जर्नल।

### अन्य क्रियाकलापहरू

**(क) भवन निर्माण:** २०२२ सालसम्म राष्ट्र बैंकको आफ्नो कुनै भवन थिएन। श्री ५ को सरकारसँग बालुवाटार स्थित ललिता निवास खरीद गरी त्यसै सालको मंसिर महिनामा केन्द्रीय कार्यालय आफ्नै भवनमा सर्यो। त्यसपछि थापाथलीमा अर्को



वीरगंज शाखा भवन



नेपालगंज
शाखा भवन



पोखरा
उपशाखा भवन



नेपाल राष्ट्र बैंकको
मुद्रा संग्रहालय



बिलियर्ड हल :
बैंकर्स क्लब

भवन खरीद गरी काठमाडौं बैंकिंग कार्यालय त्यहीं सारियो। यी भवनहरूका अतिरिक्त वीरगंज, पोखरा, भैरहवा र नेपालगंजमा राष्ट्र बैंकको आफ्नै आधुनिक भवनहरू छन्। विराटनगर, जनकपुर र कैलालीमा भवन निर्माणका लागि जग्गा खरीद गरिएको छ।

(ख) **संचार व्यवस्था :** केन्द्रीय कार्यालय तथा शाखाहरू बीच सरल संचार माध्यम कायम गरी बैंकको कार्यलाई अरू सरल र प्रभावकारी गराउने उद्देश्यले टोली कार्यालय बाहेक अन्य सबै कार्यालयहरूमा आकाशवाणी सेट जडान गरिएको छ।

(ग) **सुरक्षा प्रबन्ध :** बैंक भवन तथा सम्पत्तिहरूको सुरक्षा तथा रेखदेखका लागि केन्द्रीय कार्यालय, काठमाडौं बैंकिंग कार्यालयका साथै अन्य सबैजसो कार्यालयहरूमा सुरक्षा अधिकृत मातहत एक सर्वेलेन्स ग्रुप खडा गरिएको छ। यस ग्रुपले बैंकको सुरक्षाको सम्पूर्ण बन्दोबस्त गर्दछ।

(घ) **चमेना गृह :** बैंकका कर्मचारीहरूका लागि केन्द्रीय कार्यालय र काठमाडौं बैंकिंग कार्यालयमा एक एक चमेना गृह खोलिएका छन्। यी चमेना गृहहरूले स्वच्छ र ताजा खानाको माध्यमबाट कर्मचारीहरूको दैनिक खाजाको आवश्यकतालाई पूरा गरिरहेका छन्।

(ङ) **बैंकर्स क्लब :** खेलकूद तथा अन्य गतिविधिको माध्यमबाट कर्मचारीहरूलाई स्वस्थ मनोरञ्जन प्रदान गर्ने हेतुले २०२८ सालमा बैंकर्स क्लबको स्थापना गरियो। बिलियर्ड, टेबुल टेनिस, क्रिकेट, ब्याडमिन्टन, फूटबल आदि खेलहरू क्लबले संचालन गरिरहेको छ र अन्य मनोरंजन कार्यक्रमहरू पनि क्लबद्वारा आयोजित गर्ने गरिएको छ। काठमाडौं बैंकिंग कार्यालयको हाताभित्र एक टेनिस कोर्टको पनि निर्माण गरिएको छ।

# संदर्भ सामग्रीहरू


१। नेपाल बैंक लिमिटेड ऐन, १९९४
२। २००२ साल असोज १ गतेको नेपाली नोट चलनचल्तीमा ल्याउने लालमोहर
३। नेपाल राष्ट्र बैंक ऐन, २०१२ र यसमा भएका संशोधनहरू
४। नेपाली मुद्राको चलनचल्ती बढाउने ऐन, २०१४
५। नेपाल राष्ट्र बैंक (नोट सट्टा भर्ना) नियम, २०१४
६। नेपाल औद्योगिक विकास कर्पोरेशन ऐन, २०१६
७। विदेशी विनिमय (नियन्त्रण) ऐन, २०१७
८। राष्ट्र ऋण ऐन, २०१७
९। नेपाल राष्ट्र बैंक झुत्रो नोट घुल्याउने नियमहरू, २०१८
१०। ब्रेटन उड्स सम्झौता ऐन, २०१८
११। विदेशी विनिमय (नियमित गर्ने) ऐन, २०१९
१२। नेपाली मुद्रा ऐन, २०१९
१३। सहकारी बैंक ऐन, २०१९
१४। कर्मचारी संचय कोष ऐन, २०१९
१५। वाणिज्य बैंक ऐन, २०२०
१६। नेपाल कम्पनी ऐन, २०२१
१७। विदेशी लगानी प्रतिवन्ध लगाउने ऐन, २०२१
१८। राष्ट्रिय वाणिज्य बैंक ऐन, २०२२
१९। अन्तर्राष्ट्रिय फाइनेन्स कर्पोरेशनको सदस्यता प्राप्त गर्ने ऐन, २०२२
२०। राष्ट्रिय बीमा संस्थान ऐन, २०२४
२१। राष्ट्रिय बीमा समिति ऐन, २०२४
२२। कृषि विकास बैंक ऐन, २०२४ र यसमा भएका संशोधनहरू
२३। वाणिज्य बैंक ऐन २०३१ र यसमा भएका संशोधनहरू
२४। विनिमेय अधिकार पत्र ऐन, २०३४
२५। नेपाल राष्ट्र बैंक एक परिचय—ने. रा. बैंक
२६। नेपालमा मौद्रिक तथा वित्तीय विकास—ने. रा. बैंक
२७। नेपाल राष्ट्र बैंक, नोट विभागको कार्यसंचालन पद्धति—ने. रा. बैंक
२८। नेपाल राष्ट्र बैंकको वार्षिक तथा आर्थिक प्रतिवेदनहरू (२०१३-२०३६)
२९। नेपाल राष्ट्र बैंकबाट वाणिज्य बैंकहरूलाई दिइएका निर्देशन र अन्य परिपत्रहरू
३०। उत्तर प्राचीनकालीन मुद्रा—हरिराम जोशी
३१। नेपालको राष्ट्रिय मुद्राहरू—सत्यमोहन जोशी

1. *The Administrative System of Nepal—Hem Narayan Agrawal, Vikas Publishing House Pvt. Ltd.*

2. *Readings in Nepal Economic History—Mahesh C. Regmi, Kishor Niketan, Varanasi.*

3. *A Short History of Banking, Currency and Commerce in Nepal by B. D. Pant, Printed by Thackers Press.*

4. *The Coinage of Nepal—E. H. Walsh, Published by—S. B. Singh for Indological Book House Daryagani.*

5. *Nepal Rastra Bank, Quarterly Economic Bulletins.*

6. *Nepal Rastra Bank, Commercial Banking Statistics.*

मुद्रक : एन. के. गोसेन एण्ड कं. प्राइभेट लि., १३/७, अरिफ रोड, कलकत्ता-६७ (भारत)
फोन नं. ३५-६३३१—४, ७७-३२१६

